




# नेपालमा बौद्धधर्म

भुवनलाल प्रधान

काठमाडौं

नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान

विसं २०४५

# भूमिका

हाम्रो देशमा उपलब्ध केही ग्रन्थहरूमा दिइएका विवरणहरू इतिहास-का अन्य पक्षहरूका झैं धार्मिक पक्षका विवरणहरू पनि सम्प्रदायगत धार्मिकता, पौराणिकता र काल्पनिकताले जेलिएका छन् । ऐतिहासिक तथ्यको लागि त तिनमा सिला खोज्नु पर्दछ । तर पनि तिनमा आधारित परम्परा वा जनश्रुतिले अभिप्रेरित भएर होऊन् वा आ-आफ्ना सम्प्रदायगत धार्मिक भावनाले प्रभावित भएर होऊन् वा तुलनात्मक अध्ययन र अनुभवको अभावले दृष्टिकोण व्यापक नबनाएकोले होऊन्-- हाम्रो देशमा अधिकांश व्यक्तिहरू उपरोक्त कृति वा वंशावलीहरूका लिखित भए पनि गलत, रमाइला भए पनि अप्रमाणित, परम्परागत भएपनि अनैतिहासिक वृतान्त, आख्यायिका आदिमा अटल विश्वास राख्दछन् । तर धार्मिक भावना वा विश्वास भनेको अर्कै कुरा हो, ऐतिहासिकता भनेको अर्कै कुरा हो ।

बौद्ध धर्मको सम्बन्धमा उपरोक्त कुराहरू हाम्रो देशमा झनै टड्कारो-संग देखिन्छन् । काठमाडौं उपत्यकामा त्रेता युगमा आएका भनिएका बोधिसत्व मञ्जुश्रीले पानी बाहिर पठाई यहाँ पहिलो बस्ती बसाले, ऐतिहासिक गौतम बुद्धले स्वयम्भू डाँडो स्थित पुच्छाग्र चैत्य रहेको स्थानमा धर्मदेशना दिए वा सम्राट् अशोकले पनि यहाँ आई अनेक धार्मिक क्रियाकलाप गरे भन्ने घटनाहरू वास्तविक नै हुन् भनेर जिरह गर्ने बौद्धहरू-- चाहे तिनीहरू पठित होऊन् वा अपठित-- आज पनि यहाँ मनग्गे भेटिन्छन् । यस्तो स्थितिमा काठमाडौं उपत्यकामा बौद्ध धर्मका विभिन्न सम्प्रदाय—स्थविरवाद, महायान, वज्रयान तथा उत्तरी हिमाली भेकमा लामा धर्म--को प्रवेश र विकासको सम्बन्धमा संकलन गरिएका ऐतिहासिक रूपले प्रमाणित केही तथ्यहरूको चर्चा प्रस्तुत पुस्तकमा गरिएको छ जसबाट माथि उल्लेखित भ्रमात्मक पूर्वाग्रह र धारणाहरू हटाउन सघाउ पुग्नेछ भन्ने उम्मीद राखिएको छ ।

आफ्नो देशको संस्कृति र इतिहासमा अभिरुचि लिनेहरूको ध्यान स्वतः आकृष्ट हुने विषयहरूमा नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठानबाट पुस्तक प्रकाशन हुनु अवश्य पनि सांस्कृतिक सम्पदाको संरक्षण गर्ने दिशातिर सारिएको एउटा सकारात्मक र श्रेयपूर्ण कदम हो । यही क्रममा प्रज्ञा-प्रतिष्ठान प्रति लेखक हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

२०४५।८।८ लेखक
बबरमहल, काठमाडौं ।

# अनुक्रम



# १. बुद्धकालीन कपिलवस्तु

बौद्ध धर्मको प्रचार भएको २५०० वर्षको लामो अवधिमा संसारका धेरै देश, विशेष गरेर सबैजसो पूर्वी र दक्षिणी एसियाली देशहरूसित यस धर्मको घनिष्ठतम सम्बन्ध स्थापित भएको छ। नेपालसितको यसको सम्बन्धमा के पनि एउटा विलक्षण वैशिष्टय छ भने यो धर्मको प्रादुर्भाव हुनुभन्दा अगाडिदेखि नै यस देशसित घनिष्ठ रूपले सम्बद्ध भइआएको छ। बौद्ध धर्मका खुद अधिष्ठाता भगवान् बुद्धको जन्मस्थल लुम्बिनी-उपवन, प्रारम्भिक जीवन बितेको पैतृक राज्य कपिलवस्तु तथा मावली एवं ससुराली राज्य कोलीय नेपाल अधिराज्यको भूभागमा अवस्थित रहेको आजको यथार्थताले बौद्ध धर्म र नेपालबीच रहिआएको घनिष्टतालाई अटल, अनुपम र अद्वितीय बनाइदिएको छ।

नेपालमा बौद्ध धर्म भन्ने विषयले स्वभावतः बौद्ध धर्म, नेपालको साथसाथै बुद्धकालीन कपिलवस्तु– कोलीय क्षेत्रको ऐतिहासिक वस्तुस्थितिलाई पनि सन्दर्भित गर्दछ। सर्वप्रथम बौद्ध धर्मका संस्थापक जन्मेर हुर्केको क्षेत्रको तत्कालीन स्थितिको केही चर्चा आवश्यक हुन्छ। हुन त पच्चीस सय वर्ष पुरानो लुम्बिनी– कपिलवस्तु– कोलीय आज नेपाली भूभागको गहिराइमा पुरिएको छ। तैपनि त्रिपिटक, अर्थकथालगायत भारत, तिब्बत–चीन, लङ्का आदि देशहरूमा समय-समयमा रचिएका ग्रन्थहरूबाट प्राप्त

जानकारीको आधारमा इ. पू. ६००–५०० शताब्दीताकाको कपिल-वस्तु– कोलीय क्षेत्रको सामाजिक, राजनीतिक अवस्था निम्न प्रकारको थियो ।

इ पू ५६३ सालमा भगवान् बुद्ध जन्मनेताका कपिलवस्तु गणराज्य सानै भए पनि समुन्नत र सुसंस्कृत अवस्थामा थियो । त्यसताका यसको पूर्वतिर शाक्यहरूकै अर्को सानो गणराज्य कोलीय[1] थियो । यी दुई शाक्य राज्यहरूको साँध छुट्याउँदै रोहि[2]णी नदी बग्दथ्यो । यो रोहिणी नदी आज पनि नेपालको चुरिया-पर्वत-शृङ्खलाका हात्तीकोट, पोखराछाप आदि इलाकाबाट निस्केर रुपन्देही जिल्लाबीचैबीच भारतको गोरखपुरनिर रापती नदीमा मिसिन्छ । कोलीय राज्यको दक्षिण-पूर्वमा मल्लहरूका पावा, कुशीनगर गणराज्यहरू थिए । तिनका पूर्व लिच्छविहरूको वज्जि गणराज्य थियो । यसको दक्षिण-पूर्वी भूभाग गङ्गा नदीको किनार-सम्म फैलिएको थियो । यो वज्जि अर्थात् लिच्छवि-गणराज्यको उत्तरी इलाका कोलीयदेखि विदेह (मिथिला) राज्यसम्म पुगेको थियो । शक्तिशाली मगध राजतन्त्रको भूभाग मल्ल, वज्जि गणराज्यहरूको दक्षिणदेखि उत्तरमा कोसी-किनारसम्म फैलिएको थियो । त्यसको पनि दक्षिण-पूर्वमा अङ्ग राज्य थियो । कपिलवस्तु-को दक्षिणी-पश्चिमी सिमाना राजतन्त्र कोशलसँग जोरिएको थियो । पश्चिमको यो विशाल कोशल अर्को शक्तिशाली राजतन्त्र थियो । यसको उत्तरी सिमाना हिमालयसम्म फैलिएको थियो ।[3] कोशल र मगधको बीच काशी पर्दथ्यो । कोशलको दक्षिण-पश्चिममा चेदी, वत्स, शूरसेन, मत्स्य र पश्चिममा पाञ्चाल, कुरु राज्यहरू थिए ।

१. दीर्घ निकाय, अर्थकथा, जातक अर्थकथा निदान, महावंशमा कोलीय राज्यलाई शाक्य-जनपद भनिएको छ ।

२. जातकानं कलहकथा, धम्मपद अठ्ठकथा ।

३. E. J. Thomas — The Life of Buddha, p. 13 & राहुल सांकृत्यायन— पुरातत्त्व निबन्धावली, पृ. २०–२१ बीचको नक्शा ।



मिनीहरूभन्दा पर सुदूर पश्चिम-उत्तरमा गान्धार र कम्बोज थिए । कोशल, वत्सको दक्षिणतिर अश्मक, अवन्ती थिए ।[1]

कपिलवस्तुको उत्तरमा चाहिं असंस्कृत पर्वतीय मङ्गोलियन[2] मूलका जातिहरू थिए । राजा सिंहहनुका शासनकालमा कपिलवस्तु-को वैभव देखेर छिमेकको एउटा पर्वतीय जातिले ईर्ष्यावश यहाँ हमला गर्न आएको थियो भन्ने प्रसङ्गबाट[3] रीस डाभिड्सको उपर्युक्त भनाइको पुष्टि हुन्छ । यसरी कपिलवस्तुको उत्तरमा साना साना स्वतन्त्र राज्यहरू रहेका बुझिन्छन् । भगवान् बुद्ध एक समय पाँच सय भिक्षुहरूका साथ विदेह राज्यमा चारिका गरिरहेको र राजधानी मिथिलामा बस्ने एक सय बीसवर्षीय ब्राह्मण ब्रह्मायुले उनका लक्षणहरूको परीक्षण गर्न आफ्ना शिष्य उत्तर माणवकलाई उनकहाँ पठाएको प्रसङ्गबाट[4] बुद्ध युगमा कपिलवस्तु कोलीयको पूर्व वज्जि (लिच्छवि) गणराज्यको उत्तरी भूभाग र त्यसको पनि पूर्वतिर विदेह राज्य कायम रहेको प्रमाणित हुन्छ । यसको राजधानी मिथिला नगर उत्तरतिर अवस्थित थियो । विदेह राज्यको अझ पूर्व मगध राज्यकै उत्तर-पूर्वी छोर कोसी नदीको

१. यहाँ उल्लिखित राज्यहरूमध्ये काशी, कोशल, अङ्ग, मगध, वज्जि, मल्ल-को चर्चा दीर्घ र मध्यम निकायहरूमा, चेदी, वत्स, शूरसेन, मत्स्य, पाञ्चाल, कुरुको चर्चा दीर्घ निकायमा तथा अश्मक, अवन्ती, गान्धार, कम्बोजको चर्चा अङ्गुत्तर निकायमा गरिएको छ । यी राज्यहरूमा केही हेरफेर— जस्तो कि अङ्ग मगधमा, काशी कोशलमा गाभिनु आदि बुद्ध-कै जीवन काल (इ. पू. ५६३–४८३) मा भइसकेको थियो ।

२. Rhys Davids—Buddhism, 1912, p. 28

३. P. C Mukherjee—A Report on a Tour of exploration of the Antiquities of Kapilawastu Tarai of Nepal, Calcutta, 1901; reprinted, Delhi 1969.

४. ब्रह्मायुसूत्र, मध्यम निकाय; भिक्षु अमृतानन्द— बुद्धकालीन ब्राह्मण I, पृ. १६४

किनारसम्म[१] फैलिएको थियो । यो कोसी नदी आज पनि यथावत् नेपाली इलाकाबाट बग्दै भारतीय इलाकामा झर्दछ । कपिलवस्तुको उत्तरस्थित राज्यहरूमध्ये काठमाडौं उपत्यकामा किरातहरूको बलियो राजतन्त्र रहेको उल्लेख नेपाली वंशावलीहरूले गर्दछन् ।

यो कपिलवस्तु गणराज्यबाट मगध राध्यको राजधानी राजगृह साठी[२] योजन र कोशल राज्यको राजधानी श्रावस्ती पन्ध्र[२] योजन टाढा थियो । शास्ता (=बुद्ध) राजगृहबाट पैंतालीस[२] योजन आएर श्रावस्तीमा घुम्ने गर्दथे । महाभिनिष्क्रमणको सिलसिलामा बुद्धले रातारात तीन ओटा राज्य कपिलवस्तु, कोलीय र मल्ल इलाकाहरू पार गरेर पुगेको अनोमा नदी कहीं तीस[३] योजन र कहीं छ[३] योजन टाढा थियो भनेर लेखिएका छन् । बिहानीपख अडेर उनले आफ्ना चिरुवादार र घोडालाई बिदाबादी गरेको अनुवैनेय नगर चाहिं अरू छ योजन पर पर्दथ्यो । कपिलवस्तुबाट बुद्ध निर्वाण भएको ठाउँ कुशीनगर पैंतीस[४] योजन टाढा थियो ।

यसरी बुद्धकालीन कपिलवस्तु राज्य वर्तमान नेपालको होचो पर्वतमाला चुरियाको दक्षिणी फाँटमा अवस्थित थियो र यसको वरपर माथि चर्चा गरिएअनुसार सानाठ्ला राज्यहरू थिए । त्यसताकाका जनपदहरूमा शासनपद्धति गणतन्त्रात्मक भए पनि जनताबाट छानिएका राजप्रमुख 'राजा' नै कहिन्थे । कपिलवस्तु र कोलीय शाक्यहरूका जनपदहरू लिच्छविहरूका वैशाली, मल्लहरूका

१. राहुल सांकृत्यायन–– पुरातत्त्व निबन्धावली, पृ. २०–२१ बीचको नक्शा ।

२. राजगहं कपिलवत्थुतो दूरं सट्ठि योजनानि, सावत्थी पन पञ्चदस । सत्था राजगृहतो पञ्चचतालीस योजनं आगन्त्वा सावत्थियं विहरति ।

[म. निकाय अर्थकथा १।३।४ & रा. सांकृत्या– पुरातत्त्व निबन्धावली, पृ. २०]

३. E. J. Thomas–– The Life of Buddha, pp. 57–58.

४. महापरिनिर्वाणसूत्र, दीर्घ निकाय ।



पावा, कुशीनगर जस्तै प्रजातान्त्रिक[१] गणराज्य थिए । यिनका राजप्रमुखहरू निर्वाचित गरिएका हुन्थे ।

कपिलवस्तु गणराज्यका प्रमुख एवं भगवान् बुद्धका पिता शुद्धोदन यस्तै राजा थिए । यिनका दुईजना रानी मायादेवी र प्रजापति कोलीय गणराज्यका राजप्रमुख अञ्जनका छोरीहरू थिए । कोलीय शाक्य राज्यमा एउटा ठूलो दह थियो । यस दहमा दुवै शाक्य राज्यका राजपरिवारका सदस्यहरू विशेष पर्वका अवसरहरूमा नुहाउँथे । राजहरूको नुहाउने दह भएकोले नै यसको नाउँ[२] पछि देवदह भएको थियो । यही देवदह नाउँबाट नै पछि निगम वा नगरको नाउँ[३] पनि देवदह भएको हो ।

भगवान् बुद्धको जन्मस्थल भएको नाताले पवित्र तीर्थस्थल बन्ने लुम्बिनी उपवन त्यस वेला प्राकृतिक सौन्दर्यले परिपूर्ण अत्यन्त रमणीय ठाउँ थियो । लुम्बिनी कपिलवस्तु जनपदअन्तर्गतको ठाउँ थियो । लुम्बिनी कपिलवस्तु र देवदहका दुवै जनताको लोकप्रिय क्रीडास्थल[४] थियो । जसरी देवदहमा दुवै राज्यका शाक्य

१. संयुक्त निकाय अर्थकथा; भि. अमृतानन्द–– बुद्धकालीन राजपरिवार, पृ. १२५; पूर्णिमा संख्या ६:– 'बुद्धको निर्वाणको १५०–६० वर्ष पछिसम्म पनि लिच्छवि, वृजि, मल्लको साथसाथै मद्र, कुकुर, कुरु, पाञ्चाल आदि राजप्रमुख राजा कहिने गणतन्त्रात्मक राज्यहरू अस्तित्वमा भएको कुरा कौटिल्यको अर्थशास्त्रबाट उद्धृत गरिएका निम्नलिखित टुक्राबाट थाहा हुन्छ:

लिच्छविकवृजिकमल्लकमद्रककुकुरकुरुपाञ्चालादयो राजशब्दोपजीवित: (लिच्छविक, वृजिक,........पाञ्चाल आदि यी राजा भएका भनी कहलिएका संघ हुन्)' ।

२. संयुक्त निकाय अर्थकथा २१।१।२

३. सं. निकाय अर्थकथा २१।१।२

४. मध्यम निकाय अर्थकथा १।४।५

राजपरिवारहरू नुहाउँथे त्यसरी नै दुवै राज्यका जनताहरू लुम्बिनी-मा स्वच्छन्द रूपले आएर उपवनको उपभोग गर्दथे । कपिलवस्तुदेखि देवदहसम्म पाँच[१] योजनको दूरी थियो । लुम्बिनी शालोद्यान राजधानी नगर कपिलवस्तुदेखि डेढ[२] योजन टाढा थियो ।

बुद्ध-युगीय कपिलवस्तु र यहाँको जन–जीवनबारे त्रिपिटक र अरू बौद्ध ग्रन्थहरूमा उल्लेख भएअनुसार कपिलवस्तु त्यसताका उन्नतिको चरम शिखरमा पुगेको तथा त्यहाँका जनताले समृद्ध जीवन बिताइरहेको बुझिन्छ ।

बुद्ध जन्मनेताका कपिलवस्तु राज्यका राजप्रमुख राजा शुद्धोदन शाक्य थिए । राजधानी-नगर पनि कपिलवस्तु नै भनिन्थ्यो । जातक-अर्थकथाअनुसार कपिलवस्तु नगर १८ हात जति अग्लो परखालले घेरिएको थियो । महावस्तुमा भने सात वटा परखाल भएको चर्चा भेटिन्छ । राजधानी कपिलवस्तु नगर एक[३] योजनासम्म फैलिएको थियो । कपिलवस्तु र कोलीय जनपद दुवैको गरेर १,६०,००० कुल[४] (=परिवार) थिए । तर रीस डाभिड्सले कपिलवस्तुको जनसंख्या दश[५] लाख थिए भनेका छन् ।

हुन त बुद्ध-युगमा नाउँ चलेका १६ महाजनपदमा[६] कपिल-वस्तु वा कोलीय जनपदको वा छ महानगरमा[७] कपिलवस्तु वा

१. जातक अर्थकथा
२. सं. निकाय १।१।४।७; भिक्षु धर्मरक्षित–– 'पालि साहित्यका लुम्बिनी शालोद्यान' शीर्षक लेख ।
३. मध्यम नि. अर्थकथा २।१।३
४. मध्यम निकाय
५. Buddhism, 1912 A. D.
६. काशी, कोशल आदि माथि उल्लेख भइसकेका छन् ।
७. चम्पा, राजगृह, श्रावस्ती, साकेत, कौशाम्बी, वाराणसी [महापरिनिर्वाण-सूत्र]



देवदह नगर समावेश भएको थिएन । तर त्रिपिटकमा धेरै ठाउँमा कपिलवस्तु, कोलीय वा देवदहको उल्लेख भएको पाइन्छ ।

राजधानी नगरबाहेक कपिलवस्तु जनपदमा मेदलूम्प, शीलावती, खोमदुस्स, उलुम्प, चातुम, सक्खर (वा नगरक), सामगाम, दीपवत्थु आदि निगमहरू भएको तथ्य त्रिपिटक वा अर्थकथाहरूबाट थाहा हुन्छ । कपिलवस्तु नगरको नगीचै एउटा ठूलो वन थियो । जहाँ भगवान् बुद्ध र सङ्घका अरू भिक्षुहरू एकान्त वासको आवश्यकता परेको वेलामा आएर बस्ने गर्दथे । यो महावन प्राकृतिक जङ्गल थियो, यो वैशालीको महावन जस्तो थिएन भनिएको छ । कपिलवस्तु नगरको बाहिर रहेको यो महावनको जङ्गल उत्तरतिर हिमालय पहाडसम्म र दक्षिणपूर्वतिर समुद्रसम्म[१] फैलिएको थियो । एकपल्ट भगवान् बुद्धले आफ्नो साथमा आएका ५०० भिक्षुहरूलाई उनीहरूका स्वास्नीहरूले घर फर्काउन खोज्दा उनीहरूलाई कपिलवस्तुको महावनबाट हिमाल पर्वत (हिमालय पहाडको कुणाल दह)तिर लगेर सम्झाएका थिए[२] । कपिलवस्तु नगरदेखि बाहिर न्यग्रोधाराम कहिने अर्को एउटा आश्रम पनि थियो । यसमा कालक्षेम र घटाय शाक्यले भिक्षुहरू बस्नाको लागि बनाएका विहारहरू[३] थिए । यसबाट श्रावस्तीका जेतवनाराम, पूर्वाराम वा राजगृहका वेणुवनाराम जस्ता ठूलठूला विहारहरू

१. मध्यम (मज्झिम) निकाय, अर्थकथा–प्रपञ्चसूदनी, उदान अर्थकथा इत्यादि । यहाँ समुद्र वा सागर शब्दले कुनै ठूलो जलाशय वा नदीलाई बुझाउने गरेको जस्तो बुझिन्छ । निग्लीहवा (कपिलवस्तु वा तौलिहवा जिल्ला) को पोखरीलाई निग्लिसागर र भारतको गङ्गा नदीलाई गङ्गासागर आजसम्म पनि भनिएकै छ ।
२. कुणाल जातक, अङ्गुत्तर निकाय अर्थकथा; भिक्षु-अमृतानन्द-बुद्धकालीन श्राविकाचरित I, पृ. २५ ।
३. म. नि. महासुञ्ञतसुत्त

नभए पनि कपिलवस्तुमा भिक्षुहरूको लागि विहारको खाँचो थिएन तथा यहाँ अनाथपिण्डक[१], विशाखा[२] वा राजा बिम्बिसार[३] जस्ता ठूलठूला दाता नभए पनि कम-से-कम कालक्षेम, घटाय शाक्य जस्ता विहार दान गर्ने श्रद्धालु दाताहरूको अभाव थिएन भन्ने सिद्ध हुन्छ ।

मेदलूम्प नगरमा एकपल्ट भगवान् बुद्ध बसेका थिए । त्यस बेला काम-विशेषले कोशलराज प्रसेनजित नगरक (वा सक्खर कहिने कपिलवस्तु राज्यको एउटा नगर) मा आइरहेका थिए । भगवान् मेदलूम्पमा बसिरहेको खबर पाएर राजा प्रसेनजित यहीं आएर भगवान्को दर्शन गरे । यही सिलसिलामा यहाँ धर्मचेतिय-सुत्तको[४] देशना भएको थियो ।

यस्तै देवदहसुत्त[५] बुद्ध देवदहमा बसेको अवसरमा देशना गरिएको थियो । यहाँ अर्थात् कोलीय गणतन्त्रमा भगवान् बुद्ध कक्करपतं, उत्तरक निगम, हलिद्दवसन, पज्जनिक निगम, कुण्डिका नगरको कुण्डधान वनमा पनि बसेको उल्लेख पाइन्छ ।

सरकारी निकायहरू रहने भवनहरू संस्थागार कहिन्थे । यी संस्थागार– (वा सन्थागार) हरू तहतहका थिए । यिनीहरू-मध्ये सबभन्दा उपल्लो तह संसद् जस्तै थियो । व्यवस्थापिक, प्रशासनिक, न्यायिक र अरू पनि महत्त्वपूर्ण मामिलासम्बन्धी विचार-विमर्श र निर्णय सन्थागारहरूमा हुन्थे । आवश्यक आदेश-निर्देशनहरू यहींबाट निकालिइन्थे । सरकार गणतन्त्रात्मक हुनाले महत्त्वपूर्ण मामिलाहरूको अन्तिम निर्णय यहीं गरिन्थ्यो ।

१. जेतवनाराम दान गर्ने श्रावस्तीका एक सेठ
२. पूर्वाराम दान गर्ने श्रावस्तीका एक कुलबधू
३. वेणुवनाराम दान गर्ने मगधका राजा
४. धर्मचेतियसुत्त, म. निकाय
५. देवदहसुत्त, मज्झिम (मध्यम) निकाय; भिक्षु अमृतानन्द– बुद्धकालीन राजपरिवार, पृ. १२५ ।



" ..... त्यस बखतका राज्यहरू कृषिप्रधान भएको हुँदा, यसै भवनमा बसी 'कस्तो बीउ रोप्ने, कहिले रोप्ने' भन्ने इत्यादि कुराको समेत निर्णय गरिन्थ्यो । गणतन्त्र प्रणालीको राज्य भएको हुँदा जुनसुकै कुरा पनि संस्थागारमै छलफल गरेर मात्र निर्णय गरिन्थ्यो । त्यस बखतका राजाले संस्थागारमा निर्णय भएको कुरा-लाई मात्र कार्यान्वयन गराउँथे । अतएव उनीहरू अतीव जनप्रिय थिए । कोशल राजाले शाक्य कन्या माग्न पठाउँदा पनि शाक्यहरू जम्मै संस्थागारमा भेला भई, छलफल गरी निर्णय गरिएबाट जुनसुकै प्रश्न पनि संस्थागारमै छलफल गरीकन मात्र कार्यान्वयन गर्ने कुरा प्रष्ट बुझिन्छ ।"[१]

दुइटा सन्थागार त भगवान् बुद्धकै जीवन कालमा बनेका एवं तीमध्ये एउटाको उद्घाटन[२] खुद उनीबाटै भएको थियो । यस अवसरमा बुद्धले उपस्थित श्रोतावर्गलाई राति अबेरसम्म धर्म-देशना गरिसकेपछि कमर दुखेकोले अरू उपदेश दिन भिक्षु आनन्द-लाई अह्राएका थिए । अर्कोचाहिं सन्थागारमा उपदेश गर्न महास्थविर मौद्गल्यायन खटिएका थिए[३] । चातममा पनि एउटा सन्थागार[४] थियो ।

सामगाममा पौष्करणीय[५] भन्ने विहार थियो । यहाँ वेधञ्ञा (=त्रैधन्वा) भनिने धनुर्वेदको एउटा शिक्षणालय थियो । यहाँ शाक्य, कोलीय क्षत्रीहरूलाई सैनिक[६] शिक्षा दिइन्थ्यो । वेधञ्ञानामक शाक्यको आम्रवनमा रहेको यो धनुर्विद्या सिकाइने प्रासादमा भगवान् बुद्ध

१. भि. अमृतानन्द --ऐ., पृ. १२७–८; विडुडभवस्थु, धम्मपद अर्थकथा
२. सेखसुत्त, संयुक्त निकाय
३. संयुक्त निकाय अर्थकथा
४. चातमसुत्त, मज्झिम निकाय
५. भिक्षु धर्मरक्षित–– 'पालि साहित्यका लुम्बिनी शालोद्यान' शीर्षक लेख
६. ऐ. ;ऐ दीर्घ निकाय अर्थकथा

एक बखत बसेको उल्लेख[1] पनि छ। बुद्ध सागगाममा बसेकै अवसरमा सामगामसुत्तको देशना भएको थियो।

खोमदुस्स निगम खोम (=क्षौम) वस्त्रको लागि प्रसिद्ध भइसकेको थियो[2]। यहाँ बुनिएका क्षौमातिसी (सनपाट, रेशम कपडा विशेष) मसिनो र किम्मती थियो र यसको मोल चीनको रेशम (चीन पट्ट) र सौवीरको वस्त्र (सोवीर पट्ट) समान थियो। खोम (=क्षौम) कपडाको उत्पादन अधिक मात्रामा गरिने ठाउँ भएकोले नै खोमदुस्स नाउँ रहन गएको हो। भगवान् बुद्ध एक समय यहाँ आएर केही ब्राह्मणहरूलाई उपदेश दिएका थिए।

उपर्युक्त सन्थागार, विहार, राजदरबारहरू राजधानीमा भव्य र दर्शनीय मानिन्थे[3]। राजदरबार 'धार्तराष्ट्र' कहिन्थ्यो। ललितविस्तर[4]मा यसको भव्यताको बयान गरिएको छ। यसका ढोका, झ्याल, अट्टालिका आदि विभिन्न अङ्ग अत्यन्त सुन्दर र कलापूर्ण थिए। बुद्ध राजकुमार छँदा बस्ने पाँच-तले रम्य, सात-तले सुरम्य र नौ-तले शुभ नाउँ गरिएका महलहरू अनुपम स्थापत्य कलाका बेजोड नमूना मात्र थिएनन्, अद्भुत प्राविधिक उच्च कलाकृति पनि थिए। यी महलहरू वर्षभरिका भिन्नाभिन्नै ऋतु-

१. भि. अमृतानन्द–– बुद्धकालीन राजपरिवार, पृ. २९६; दीर्घ निकाय अर्थकथा

२. त्रिपिटकाचार्य भिक्षु धर्मरक्षित–– 'पालि साहित्यका लुम्बिनी शालोद्यान' शीर्षक लेख।

३. ऐ. ऐ.

४. ललितविस्तर पछि लेखिएको एउटा महायानी ग्रन्थ हो। यो त्रिपिटकको अङ्ग वा ऐतिहासिक तवरले सर्वमान्य ग्रन्थ होइन। यसमा उल्लिखित मन्दिरहरूको सम्बन्धमा राहुल सांकृत्यायनको बुद्धकालीन मन्दिर वा चैत्यमा कुनै मूर्ति थिएन भन्ने कथन पनि विचारणीय हुन्छ। ए. फौचर जस्ता मूर्तिकलाका इतिहासकारहरूका अनुसार पनि इ. पू. छैठौं शताब्दी-मा कपिलवस्तु भेकतिर ढुंगाका मूर्तिहरू बनिसकेका थिएनन्।



सित सुहाउने गरी वैज्ञानिक ढङ्गले बनाइएका थिए। मुख्य मुख्य ठाउँमा बनाइएका मन्दिरहरूबाट राजदरबारको शोभा बढेको थियो। नियमित रूपले बजाइने बाजाहरूको संगीतले यसलाई अरू बढ्ता आकर्षक र आनन्ददायी पार्दथ्यो।

कपिलवस्तुको समृद्ध जीवनबारे पठममहानामसुत्त[1]मा किटानसाथ यसो लेखिएको छ, "भन्ते, यो कपिलवस्तु नगर समृद्ध छ, उन्नतशील छ, यो नगरमा धेरै भीड छ, जनाकीर्ण छ, यातायात-को भीडले बाटोमा कठिनाइ छ। भन्ते, म भगवान्सँग अथवा मनोभावनीय भिक्षुहरूसंग सत्संगत गरी साँझतिर कपिलवस्तु नगरमा फर्किंदा हात्ती भएको ठाउँमा पनि जान्नँ, घोडा भएको ठाउँमा पनि जान्नँ, रथ भएको ठाउँमा पनि जान्नँ, न मानिसहरू भएको ठाउँमा नै जान्छु। ........." भगवान् बुद्धकै राजपरिवारका महानाम शाक्यले व्यक्त गरेको यस उद्धरणबाट बुद्धकालीन कपिलवस्तुको वैभव राम्ररी झल्कन्छ। इ पू. छैठौं शताब्दीमा कपिलवस्तु उन्नतिको शिखरमा पुगेको बुझिन्छ। बगैंचा, सडक, बजार मनग्गे भएको यो शहरमा घना बस्ती थियो। शहरका चार दिशामा चार ठूलठूला ढोका र बुर्जाहरू थिए। यहाँ सम्पन्न[2] परिवारहरूको महल, धर्मात्माहरूका आश्रम, विद्वान्हरूका आश्रयहरूको कमी थिएन। शुद्धोदनपछि राजा भएका भद्दिय शाक्यको शासन कालमा सेनापति पद सम्हाल्ने सोण एक धनाढ्य व्यक्तिका छोरा भनेर किटानसाथ लेखिएको छ[3]। भगवान् बुद्धका पहिला पाँच शिष्यमध्ये अग्रगराय भिक्षु प्रज्ञा कौण्डिन्य पनि करोडपति[4] ब्राह्मणका छोरा भनिएको छ।

१. संयुक्त निकाय; भि. अमृतानन्द– बुद्धकालीन गृहस्थीहरू I, पृ. २६१–२

२. अगाडि पृ. ३ को पादटिप्पणीमा उल्लिखित P. C. Mukherjee— 'A Report ....... of Nepal' को Introduction.

३. भिक्षु अमृतानन्द–– बुद्धकालीन गृहस्थीहरू III, पृ. ४४१

४. ऐ.–– बुद्धकालीन श्रावकचरित्र, पृ. २

कपिलवस्तु शहरमा मेला, पर्व, धार्मिक अवसर इत्यादिमा मानिसहरूको जमघट बराबर भइरहन्थ्यो ।

अश्वघोषको बुद्धचरित[1] अनुसार कपिलवस्तुमा गुमजदार ढोकाहरू, बुर्जाहरू थिए तथा वरपरका जग्गाहरूभन्दा अग्लिएको समथर भूमि भएकोले यसको शोभा शानदार थियो । कपिलवस्तु-स्थित न्यग्रोधाराम रमणीय थियो भनेर खुद बुद्ध भगवान्ले भनेका थिए[2]।

कपिलवस्तुको यस्तै वैभव देखेर नै छिमेकका एउटा पहाडी जातिले राजा सिंहहनुको राज्यकालमा यहाँ हमला गरेको थियो[3] । तर तत्कालीन युवराज शुद्धोदनले बहादुरीसाथ लडेर आक्रमण-कारीहरूलाई धपाएका थिए । राजा शुद्धोदनले पनि आफ्नो समयमा सडक, चौबाटो, मन्दिर, बगैंचा, पोखरी आदि बनाएर यसको सौन्दर्य बढाएका थिए । एघार सय वर्षभन्दा पछि ह्युयन त्साङ ईसवी सन् ६३५ सालमा यहाँ आउँदा यसको गौरव अधिकांश बिलाइसकेको थियो । तर पनि उनले यसको त्यतिको प्रशंसा गरेका थिए ।

यहाँका जनताको मुख्य व्यवसाय कृषि थियो । धान रोप्ने याममा कुनै एक दिन राजा र भारादारहरूले समेत रोपाइँमा भाग लिने चलन थियो । भगवान् बुद्ध बालक छँदा यस्तै रोपाइँको अवसरमा एक दिन बिहानै उनलाई एउटा जम्बु रूखको छहारीमा

१. भारतका सम्राट् कनिष्क (ई. सन् १२०–१६२ करीब) का समकालीन कवि अश्वघोषको एउटा काव्यात्मक कृति ।

२. महापरिनिर्वाणसूत्र (दी. नि.)— निर्वाणको केही दिनअगाडि वैशाली छाडेर जाने वेला बुद्धले यस्तो उद्गार व्यक्त गरेका थिए:– "आनन्द, रमणीय छ वैशाली, रमणीय छ उदयन चैत्य ....... रमणीय छ, आनन्द, कपिलवस्तुको न्यग्रोधाराम, राजगृहको गृधकूट........"

३. P. C. Mukherjee- 'A Report.......... of Nepal, Introduction.



राखिएको थियो र राजा शुद्धोदनलगायत सबै अरू मानिसहरू खेतमा व्यस्त थिए । निकै बेरपछि उनलाई हेर्न आउँदा उनी ध्यानमग्न भइरहेको तथा उनीमाथि रूखबाट परिरहेको छाया दिन जति चढ्दै गए पनि नसरीकन एकनासले परिरहेको थियो भन्ने बौद्ध-पुराणहरूमा दिइएको कथा यस्तै चलनमा आधारित भएको हुनुपर्दछ । बेपारमा पनि कपिलवस्तु जनपदले नाउँ कमाएकै थियो । लुम्बिनी– कपिलवस्तु इलाका पश्चिमतिर श्रावस्तीसँग र दक्षिण-पूर्वतिर पावा, कुशीनगरसँग मूल बाटोले जोरिएको थियो । बुद्ध-कालमा नामूद राजगृह, वैशाली जस्ता नगरहरूबाट अर्को नामूद नगर श्रावस्ती जाने मुख्य सडक लुम्बिनी कपिलवस्तु भएर बनेको तथ्य[1]बाट नै यो इलाका बेपारको केन्द्र रहेको कुरा सिद्ध हुन्छ । खोमदुस्समा कपडाको ख्यातिप्राप्त उद्योग रहेको चर्चा माथि भइसकेको छ । सङ्क्षेपमा यो सानो शाक्य राज्य स्वावलम्बी र समृद्धिशाली थियो । राजभण्डार सुनचाँदीले भरीपूर्ण थियो । यसरी कपिलवस्तुको स्वर्णिम दिन बित्दै थियो । भगवान् बुद्धको जीवनको अन्ततिर कोशलराज विडूडभले कपिलवस्तु ध्वस्त गरेपछि मात्र यसको गौरव घटेको थियो ।

यसरी कपिलवस्तु–निवासीहरूमा एकातिर सुखसमृद्धि छाइरहेको थियो त गरीबी, कठिन श्रम, कमारा प्रथा, बाँधा प्रथा आदिले सताइएका दीनदुःखीहरूको दयनीय अवस्था पनि थियो । यस सन्दर्भमा राजकुमार सिद्धार्थ एक बिहान दरबारबाहिर परसम्म डुल्न जाँदा टण्टलापुर घाममा पसीना काढ्दै खेतमा काम गरिरहेका कमारा, कामदारहरू, निर्मम‌तापूर्वक पिटिँदै जोतिएका बयलहरू तथा मानव जगत् र पशु जगत्मा पनि बलियाले निर्धालाई गरिरहे-को अन्याय, थिचोमिचो आदिको विषम दृश्यले विरक्तिएको चर्चा उल्लेखनीय हुन्छ ।

१. रा. सांकृत्यायनका लेखहरू,— बुद्धके अन्तिम वर्ष, पुरातत्त्व निबन्धावली

कपिलवस्तु राज्यमा अध्ययन, अध्यापन र पौरोहित्यको पेशा ब्राह्मणहरूले अपनाएको आभास बौद्ध ग्रन्थहरूबाट पाइन्छ। राजकुमार सिद्धार्थ जन्मेको पाँचौं दिनमा उनको भविष्यबारे विचार गर्न दरबारमा बोलाइएका ज्योतिषमा पोख्त भएका १०८ जना विद्वान्, राजकुमारलाई पढाउन नियुक्त गरिएका वेदमा पारङ्गत गुरु सर्वमित्र[1], उनको भविष्यबारे ठोकुवा गरेर भन्ने ऋषि असित र कौण्डिन्य आदि सबै ब्राह्मण भएको एवं कपिलवस्तु नगरनगीचै दोणवत्थु (द्रोणवस्तु) नाउँको ब्राह्मण-गाउँ समेत भएको यथार्थता यस सम्बन्धमा विचारणीय हुन्छ।

हुन त रीस डाभिड्सले कपिलवस्तु– कोलीयमा बस्नेहरू यस इलाकाभन्दा पश्चिममा बस्नेहरू जति ब्राह्मण अर्थात् आर्य प्रभावमा आइनसकेको कुरा लेखेका थिए[2]। इ जे. थोमसले पनि यहाँका शाक्य आदिवासी कोल र मुण्डा मूलका देखिन्थे भनेका छन्[3]। त्यस्तै इ. एच् ब्रूष्टरले स्तूप बनाउने चलन मूलतया मङ्गोलियाली भएको आधारमा बुद्धको वंश मङ्गोलियाली मूलको हुनुपर्ने तर्क गरेका छन्[4]। राधाकुमुद मुखर्जीले पनि शाक्यहरूको विवाह-परम्पराको आधारमा उनीहरूलाई अनार्य सिद्ध गर्न खोजेका छन्[5]। तर कैयौं पुस्ता अगाडिदेखि शुद्धोदनको शाक्य-कुललाई आधिकारिक बौद्ध ग्रन्थहरूले किटानसाथ आर्य क्षत्रिय भनेका छन्। इतिहास-कारहरूले पनि यस कुरालाई मानेकै छन्। रीस डाभिड्स आफैले

१. पालिमा 'सब्बमित्त', संस्कृत ग्रन्थहरूमा 'विश्वमित्र' भनिएको छ।

२. Buddhism, 1896.

३. The Life of Buddha. यहाँ स्मरणीय हुन्छ कि महानाम शाक्यकी भित्रिनी एवं वासभखत्तियाकी आमाको नाउँ 'नागमुण्डा' थियो [जातक अर्थकथा]।

४. The Life of Gautama, the Buddha.

५. Hindu Civilisation.



पनि शाक्यहरू आर्य[1] भनेर सकारेका छन्। जे होस्, यहाँका निवासीहरूमा, विशेष गरेर शाक्यहरूको सामाजिक कर्मकाण्ड ब्राह्मणहरूबाटै चलेको सिद्ध हुन्छ।

क्षत्रियहरूले राज्य र सैन्य सञ्चालन गर्ने अधिकार पाएकाले समाजमा उनीहरूको विशेष रूपले सम्मानपूर्ण स्थान थियो। बुद्ध-युगमा क्षत्रियहरूले क्षत्रियोचित क्षेत्रमा मात्र होइन धार्मिक क्षेत्रमा समेत बाहुनहरूलाई उछिन्दै थिए। भगवान् बुद्ध र उनीभन्दा अगाडिका निगण्ठनाथपुत्र (महावीर वर्धमान, इ. पू ५९९–५२० करीब) जस्ता क्षत्रिय राजकुमारहरू नयाँ नयाँ विचारधाराका प्रतिपादक एवं प्रभावशाली धर्मगुरू समेत बनिरहेका थिए। यस्ता उदाहरणले ब्राह्मणहरूको धार्मिक एकाधिपत्य खुस्किँदै गएको तथ्यतिर पनि औंल्याउँछन्।

सैनिक शिक्षा, रणकौशल वा सुन्याइँमा कपिलवस्तु निवासी-हरू राज्यको आकारप्रकारको दाँजोमा निकै उन्नत थिए। आक्रामक छिमेकी पर्वतीयहरूलाई यिनीहरूले शुद्धोदनको नेतृत्वमा वीरतासाथ लडेर धपाएको तथा हसुयन त्साङ्गले चारजना शाक्य योद्धाले राजा विडूडभका एउटा सिङ्गै फौजसित मुकाबिला गरेको ठाउँमा चारवटा स्तूप आजसम्म मौजूद छन् भनेर लेखेको तथ्यबाट यसबारे निकै राम्रो प्रकाश पर्दछ।

बलदेव उपाध्यायले बुद्ध-युगी समाजमा स्त्रीहरूको अवस्था गिरेको थियो तथा उनीहरू धर्ममा पनि अधिकारबाट वञ्चित राखिन्थे[2] भनेका छन्। तर जहाँसम्म कपिलवस्तु– कोलीय समाज-को कुरा छ महिलाहरू घटिया अवस्थामा रहनुपरेको उल्लेख भेटिन्न। यहाँ राजगृह, श्रावस्ती आदि महानगरमा जस्तो गणिकाहरू राख्ने प्रथा पनि देखिन्न। बौद्ध सङ्घमा सर्वप्रथम प्रवेश माग्ने र

१. Buddhism, 1912, p. 26–28

२. बौद्ध दर्शन, पृ. २४

पाउने महिलाहरू कपिलवस्तु जनपदकै प्रजापति, यशोधरा, नन्दा आदि पाँच सय शाक्य महिलाहरू नै थिए।

समाज विभिन्न जात र वर्गमा बाँडिएको थियो र भेदभाव कट्टरताका मानिन्थ्यो। क्षत्रियहरूलाई, जस्तो कि शाक्यहरूलाई, आफ्नो वर्णशुद्धिको ठूलो गर्व थियो। दास प्रथा प्रचलनमा थियो। महानाम शाक्यकी कमारी नागमुण्डापट्टिकी छोरी वासभखत्तिया-लाई ठ्याहाराजकुमारी भनेर कोशलराज प्रसेनजितसँग विवाह गरिदिएको एवं तिनबाटै जन्मेका राजकुमार विडूडभले मावलीमा आफूलाई ठ्याहासरह व्यवहार नगरेको चाल पाएपछि कपिलवस्तु-लाई ध्वस्त पारेको र मावली खलक शाक्यहरूलाई कत्लेआम गरेको मूल कारण नै कमारी प्रथा र शाक्यहरूको जातीय गर्वको भावना थिए। आखिर महानाम शाक्यले नाति राजा विडूडभसँग बसेर खानुको सट्टा बरु पोखरीमा डुबेर मरे[1]।

मानव-समाज अवछिन्न रूपले बदलिइरहने एउटा प्रक्रिया हो र यसका पक्षहरू समय-समयमा एउटाले अर्कोको ठाउँ लिइरहन्छ। यसको मतलब यो होइन कि सधैं खराब पक्षहरू फालिन्छन् र असल पक्षहरूको अभ्यास गरिन्छ। अरु घटिया चलनले नै उम्दा चलनले भन्दा समाजमा गहिरो जरा हालेको हुन्छ। बुद्ध-युगी कपिलवस्तु-कोलीय र यसका आसपासका इलाकामा मानव-समाजको लक्षण यस्तै थियो। अर्थात् बुद्धको जमानामा पनि यस्ता सामाजिक, धार्मिक, आर्थिक कुरीतिहरूको कमी थिएन जुन 'बहुजनहिताय, बहुजनसुखाय' त्याज्य थिए।

बुद्धकालीन समाजको सबभन्दा निकृष्ट पक्ष त अनावश्यक र आक्रामक युद्धहरू नै थिए जसबाट कपिलवस्तु राज्य समेत उम्कन सकेन। राजतन्त्रात्मक शक्तिहरूको बीच प्रतिस्पर्धा उधुम बढिरहेको। थियो यिनीहरू एकातिर आपसतमा घम्साघम्सी

१. धम्मपद अट्ठकथा।



गरिरहेका थिए त अर्कोतिर सानसाना राज्यहरूलाई हडप्दै थिए। अङ्ग मगधमा गाभियो, काशी कोशलको अधीनमा गयो, पछि मगधलाई दिइयो। मगधराज अजातशत्रु वैशाली गणतन्त्रमा हमला गर्ने तरखरमा थिए। कोशल-राजकुमार विड्डभ र मगध-राजकुमार अजातशत्रु दुवैले आ-आफ्ना पिता राजालाई पदच्युत गरी गद्दी हत्याएका थिए। आखिर कपिलवस्तुलाई यी विडूडभकै शिकार हुनु पर्‍यो। हुन त कपिलवस्तु–कोलीय गणतन्त्रहरूमा सत्ताको लागि पितृहत्या गर्ने जस्तो कुकृत्य त भएन तर पनि एकपल्ट यहाँका शाक्यहरू रोहिणी नदीको पानी बाँडेर लिने कुरामा झगडा गर्दै लडाइसम्म गर्न तम्सिसकेका थिए। भगवान् बुद्ध घटनास्थलमै आएर मेलमिलाप गराएकोले मात्र यिनीहरूको बीच युद्धको सम्भावना हटेको थियो।

दार्शनिक विचारधाराहरूको कुरा गर्ने हो भने त्यसताका निकै धेरै सम्प्रदाय र मतहरू देखिएका थिए। ब्रह्मजालसूत्र[1] अनुसार बासठ्ठी ओटा विभिन्न मत थिए। महावीर वर्धमानद्वारा प्रतिपादित जैन धर्म भिन्नाभिन्नै सम्प्रदायमा विभक्त भइसकेको थियो। शारीरिक कष्ट खाएर तपस्या गर्ने तीर्थङ्करहरूमा पाँच सम्प्रदायको उल्लेख पाइन्छ। यस्तै विभिन्न मतालम्बी मुण्डक, जैदण्डिक, देवधर्म, आजीवक, अचेलक, परिव्राजक[2] आदिआदि थरी-थरीका सम्प्रदाय थिए। यिनीहरूमा "...... .. बलि, होम यज्ञादिद्वारा मुक्ति दिलाउन खोज्नेहरूदेखिन् लिएर नास्तिकवाद वा भौतिकवादको ... अन्तसम्म पुगेका– आमा पनि छैन, बाबु पनि छैन, मरणपछि पनि केही छैन, पाप-धर्म पनि छैन"[3] भन्नेहरू-सम्म पनि थिए। यी विभिन्न मत र दर्शनहरूको पारस्परिक खिचातानी भइरहेको देखिन्थ्यो।

१. दीर्घ निकाय।
२. निगण्ठसुत्तादि, अङ्गुत्तर निकाय, अर्थकथा।
३. भि. अमृतानन्द– बुद्धकालीन परिव्राजक, पृ. १–२ बाट।

तर भाग्यवश कपिलवस्तु– कोलीय क्षेत्र यस्ता विभिन्न मतालम्बीहरूको प्रभावदेखि धेरै हदसम्म अलगै रहेको देखिन्थ्यो। यहाँका बासिन्दाहरू निर्बाध रूपले आ-आफ्ना परम्परागत धर्मकर्म अपनाउँथे वा आ-आफूलाई मन लागेको मतको पालन गर्दथे हुन सक्छ यहाँ राजा बिम्बिसारको भन्दा राम्रो घर भएका जोतिय[1], छोरीलाई करोडौं दाइजो दिने धनञ्जय[2] जस्ता सेठहरू थिएनन्। अथवा हुन सक्छ यहाँ जसरी भए पनि धन बटुल्ने घोटमुख[3], खेती गर्ने कसि भारद्वाज[4] जस्ता ब्राह्मणहरू कपिलवस्तु भेगमा थिएनन्। तर यसको मतलब यो हुँदैन कि कपिलवस्तु-कोलीय निवासीहरू बौद्धिक, आध्यात्मिक चिन्तनमा पछाडि परेका थिए। बुद्धको लगत्तैपछि अर्हत् भएका पञ्चभद्रवर्गीय भिक्षुहरू जस्ता उच्च आध्यात्मिक शिखरमा पुगेका, विभिन्न विद्यामा पारङ्गत व्यक्तिहरू पनि यहाँ कम थिएनन्। कपिलवस्तु-कोलीय निवासीहरूमा को बाहुन को क्षत्री, को राजकुमार को अदना, को महिला को पुरुष जसले पनि मानव जीवनको सर्वोत्तम लक्ष्य आध्यात्मिक उन्नतिको लागि तँछाड् मछाड् गरेकै थिए। नन्द, आनन्दको के कुरा राजा भद्दियले पनि कुरा उठेको सातै दिनमा राज-पद त्यागेर प्रव्रज्या लिए। हजामत पेशा लिएका उपालीसम्मले पनि थलोमै प्रव्रजित हुने मनोवल देखाए।

कपिलवस्तुको यस्तो आर्थिक, सामाजिक र धार्मिक परिस्थिति अन्तर्गत इ. पू ५६३ सालमा जन्मेर[5] हुर्केका राजकुमार सिद्धार्थले २९ वर्षको उमेरसम्म यहीं मानव-जीवनका जरा, व्याधि, मरण लगायत मूलभूत दुःखहरूबारे अत्यन्त गम्भीर रूपले सोचे। आखिर यिनीहरूबाट त्राण पाउने जुन मार्ग छ वर्षको कठिन परिश्रमपछि उनले गयामा बुद्धत्व अर्थात् बोधिज्ञानको प्राप्तिद्वारा पत्ता लगाए त्यसलाई उनको मानसपटलमा अङ्कुरित यहींकै स्थिति, यहींकै वातावरण र यहींकै यथार्थताहरूले गरिसकेका थिएनन् होला भन्न सकिन्न। यो एउटा ऐतिहासिक सत्यता हो र यसलाई ठ्याम्मै नकार्न मिल्दैन।

१. धम्मपद अट्ठकथा; भि. अमृतानन्द – बुद्धकालीन राजपरिवार, पृ. ११
२. धम्मपद अट्ठकथा; ऐ.–ऐ.
३. घोटमुखसुत्तं, म. नि. अट्ठ०; भि. अमृता०– बु. ब्रा. II, पृ. २०८
४. कसिभारद्वाजसुत्तं, सुत्तलिपात; भि० अमृता०– बु. ब्रा० II, पृ. ४४
५. महावंश; E. J. Thomas– The Life of Buddha; विस्तृत व्याख्याको लागि हेर्नुस् लेखकको Lumbini-Kapilwastu-Dewadaha, Tri. Unit., p. 98-100

# २. नेपालमा बौद्ध धर्मको प्रवेश

कतिपय देशहरूमा बौद्ध धर्मको प्रवेश प्रारम्भिक कालदेखि भएको देखाउन आ-आफ्नै कथा वा लोकोक्तिहरू प्रचलनमा छन् जुन ऐतिहासिक विवरणभन्दा कम व्यापक र लोकप्रिय छैनन् । उदाहरणार्थ, श्रीलङ्कामा भगवान् बुद्ध बुद्धत्व-प्राप्तिको नौ महीनापछि पौष पूर्णिमाको दिन पहिलो पल्ट, पाँचौं वर्षको चैत्र अमावस्याको दिन दोस्रो पल्ट र आठौं वर्ष वैशाख पूर्णिमाको दिन तेस्रो पल्ट आएर धर्मोपदेश गरेको कुरा उल्लेख[1] गरिएको छ । यसबाट बोधिज्ञान लाभ भएको मात्र नौ महीनापछि खुद् भगवान् बुद्धले नै लङ्कामा सर्वप्रथम धर्म प्रचार गरेको भन्ने सिद्ध गर्न खोजिएको देखिन्छ । त्यस्तै भगवान् बुद्ध बुद्धत्व प्राप्तिको सातौं हप्तामा बोधिगया राजायतन वृक्षको मुनि बसिरहेको वेला उनलाई मही र महमा मुछिएको सत्तु दान गरेर उनका द्वैवाचिक[2] पहिला उपासक बन्ने महाजन दाज्यूभाइ तपुस्स (त्रपुश) र भलिक (भल्लुक) ले पाएको भगवान्‌को रौं (केशधातु) गर्भमा राखेर उनीहरूले असितञ्जन नगरको द्वारनिर बनाएको भनेर अङ्गुत्तर

१. महावंश प्रथम परिच्छेद जसको शीर्षकै 'बुद्धको लङ्का आगमन' राखिएको छ ।

२. सधैं नबनेकै वेला बुद्ध र धर्मको मात्र शरणमा जाने ।



निकाय अर्थकथामा चर्चा गरिएको स्तूप नै वर्तमान बर्मास्थित श्वे डगोन स्तूप हो, बुद्धत्व-प्राप्तिको आठौं वर्षमा रम्मन्न मोन प्रान्तको थातोनमा धर्म देशना गरेका थिए एवं बीसौं वर्षमा चुलपोन्न र महापोन्न दाज्यूभाइले अपरन्त प्रान्तमा बनाएको विहार दान-प्रतिष्ठा गरेको अवसरमा-बुद्ध स्वयंले धर्म देशना गरेका थिए[1] भनिएको छ । यसअनुसार बौद्ध धर्म बर्मामा बुद्धलाई बोधिज्ञान उपलब्ध भएको तीन महीना पाँच दिनपछि नै पुगेको थियो भन्ने हुन्छ । हाम्रै स्वयम्भूपुराणले पनि भगवान् बुद्ध किरात राजा जितेदस्तीको राज्य कालमा काठमाण्डौं उपत्यकामा आएर १३५० शिष्यहरूसहित स्वयम्भू डाँडोको पश्चिमस्थित हाल पुच्छाग्र चैत्य रहेको ठाउँमा बसेको, यहीं एउटी यक्षिणीलाई प्रव्रजित गरेको, धर्म देशना गरेको आदि कुराको बयान गर्दछ ।

तर जुन देशको भूभागभित्र नै लुम्बिनी-कपिलवस्तु क्षेत्र समाविष्ट भइरहेको छ, जहाँ बुद्ध स्वयं आफ्नो परिवारलाई भेट्न आएर धर्म देशना गरेका थिए त्यस देशमा बौद्ध धर्मको प्रवेश उनको जीवन कालैमा भएको प्रमाणित गर्न त्रिपिटकबाट स्वतः सिद्ध भइरहेको ऐतिहासिकतालाई पर सारेर पौराणिक कथा वा लोकोक्तिहरूको सहारा लिनु एकदमै पर्दैन ।

नेपालमा बौद्ध धर्मको प्रवेश सर्वप्रथम कुन वेला भयो भन्ने प्रश्नले स्वभावतः हाम्रो ध्यान भगवान् बुद्धको प्रथम कपिलवस्तु यात्रातिर आकर्षित गर्दछ । बोधि ज्ञानको प्राप्तिपछि उनी धेरै पल्ट आफ्नो स्वदेश भूमि कपिलवस्तुमा आएको उल्लेख बौद्ध ग्रन्थमा छ । तर लङ्का, बर्मा, तिब्बतका बौद्ध ग्रन्थहरूमा मतैक्यता नपाइएकोले बुद्ध जम्मा कति पल्ट कपिलवस्तुमा आए किटानसाथ भन्न सकिने सम्भावना कमै छ । जे होस्, जुन वेला भगवान् बुद्ध पहिलो पल्ट कपिलवस्तुमा आएर आफ्ना पिता राजा शुद्धोदनलगायत आफ्नो

१. Buddhists For Peace, Ulan Bator, 1979, No. 3., p. 31

परिवारका सदस्यहरू एवं अन्य कपिलवस्तु निवासीहरूलाई धर्मोपदेश दिए त्यही नै वर्तमान नेपाल अधिराज्यको भूभागमा बौद्ध धर्मको पहिलो प्रकाश परेको अवसर मान्न करै लाग्छ ।

यस घटनाको विवरण त्रिपिटकीय सूत्र र अर्थकथाहरूमा यस प्रकार दिइएकोछ:--

बोधि ज्ञान प्राप्त भएको साल इ पू ५२८[1] को पूर्णिमाताका भगवान् बुद्ध राजगृहमा बसिरहेका थिए । यसको जानकारी राजा शुद्धोदनलाई हुनेबित्तिकै उनले बुद्धलाई कपिलवस्तु-मा ल्याउन एक हजार मानिसहरूको एउटा दूत-मण्डल राजगृह पठाए । तर त्यस टोलीका सदस्यहरूमध्ये कुनैले पनि फर्केर राजा-कहाँ बुद्धको सन्देश ल्याएनन् । यसरी शुद्धोदन राजाले फेरिफेरि नौ नौ पल्ट बुद्धकहाँ मानिसहरू पठाएका थिए । त्यसपछि राजाले बुद्धका बालक कालदेखिका समवयस्क साथी कालुदायीको नेतृत्वमा हजार सदस्यीय दशौं टोली पठाए । उनी राजगृहमा बुद्धकहाँ पुगेर आफ्ना साथीहरूका साथ सङ्घमा दीक्षित भए । यसरी शुद्धोदनले पठाएका दशै हजार मानिस प्रव्रजित भइसकेका थिए ।

कालुदायी भिक्षु भएको थोरै दिनमा नै अर्हत् भए । एक दिन अवसर पाएर उनले बुद्धलाई निवेदन गरे, "भन्ते, उमेर निक्कै पुगिसकेका महाराज शुद्धोदन आफ्नो मरणअगाडि भगवान्को एक चोटि दर्शन गर्ने उत्कट इच्छा राख्नुहुन्छ । त्यही मनसायले उहाँले मलाई यहाँ पठाउनुभएको हो ।"

१. आनन्द कौशल्यायनद्वारा अनुदित महावंश, परिचय, पृ.–६–७; E. J. Thomas– The Life of Buddha; राहुल सांकृत्यायनका 'बुद्धका अन्तिम वर्ष' 'बुद्धके व्यक्तित्व और विचार' शीर्षक लेखहरू; विस्तृत जानकारीको लागि हेर्नुस् लेखकको Lumbini-Kapilawastu -Dewadaha, Tribhuvan University, 1979, pp. 98–100.



तदनुसार फाल्गुन पूर्णिमाको दिन बुद्धले राजगृह छाडेर कपिलवस्तुको लागि प्रस्थान गरे । साठी योजनको दूरी दुई महीना-मा पार गर्दै भगवान् बुद्ध बीस हजार भिक्षुहरूसहित वैशाख पूर्णिमाको दिन कपिलवस्तु आइपुगे । भिक्षु कालुदायी संदेशवाहकको रूपमा टोलीको अगाडि अगाडि थिए । भगवान् बुद्धसहित बीस हजार भिक्षुको टोलीलाई कपिलवस्तु नगरको बाहिर रहेको न्यग्रोध शाक्यको सुन्दर बर रूखको उद्यान न्यग्रोधाराममा बास गराइयो । यहीं आएर राजा शुद्धोदन र अरू शाक्यहरूले बुद्धसँग भेटघाट गरे । यसै अवसरमा बुद्धले शाक्य परिषद्लाई वेस्सन्तर (विश्वन्तर) राजाको पूर्वकथा सुनाएका थिए । यसै वेला काम विशेषले कपिल-वस्तुमा आएका पावाबासी गोधिक, सुबाहु, वल्लिय र उत्तिय भन्ने चार जना मल्ल कुमारले प्रव्रज्या-ग्रहण यहीं[1] गरे ।

त्यस दिन राजा शुद्धोदन वा अरू शाक्य कसैले पनि भोलिपल्ट भोजनको लागि सङ्घलाई ननिम्त्याइकनै फर्के । "यतिञ्जेलसम्म राजालाई बुद्धको नियम नै थाहा थिएन । आफ्नै पुत्र सम्झी, आफ्नै दरबारमा भोजनार्थ आउनु नै हुनेछ भन्ने विश्वास लिई वहाँले अघिल्लो दिनमा ननिम्त्याई जानुभएको हो । तर वहाँले बीसौं हजार भिक्षुहरूका निमित्त चाहिने सबै कुराको व्यवस्था मिलाइसक्नुभएको थियो । ननिम्त्याइकनै बुद्ध आउनुहुन्न भन्ने कुरा राजालाई थाहा नै थिएन ।"[2]

भोलिपल्ट बिहान भगवान् बुद्धले हातमा माटोको भिक्षापात्र लिंदै कपिलवस्तुका सडकमा सपदानचारिकाले अर्थात् नियमित तवरले घरैपिच्छे भिक्षा मागे । मात्र ७ वर्ष अगाडिसम्म उनी उही सडकमा राजसी ठाँटबाँटले बग्गीमा चढेर श्वेतछत्र ओढेर लामो लस्कर पछिपछि लगाएर घुम्ने गर्दथे । तसर्थ आफ्नो

१. थेरगाथा अट्ठकथा; भि. अमृतानन्द– बुद्धकालीन राजपरिवार, पृ. १३५
२. भि. अमृतानन्द–– बुद्धकालीन श्राविकाचरित, पृ. ६३७ बाट ।

राजाको छोराले भिक्षा माग्दै हिंडेको दृश्य कपिलवस्तु निवासीहरू-को निम्ति ठूलो कौतुहलको विषय बन्यो । बुद्धलाई हेर्न मानिसहरू झ्यालझ्यालमा मात्र होइन, सडक-सडकमा पनि ओइरिन लागे ।

यो दृश्य भगवान् बुद्धकी श्रीमती खुद यशोधराले देखिन् र ससुरा राजा शुद्धोदनलाई यथार्थ हाल बताइन् । "राजा हताश भई, हडबडाई, हतार हतार गरी, लत्रिएको धोती सम्हाल्दै राजदर-वारबाट बाहिर निस्की जहाँ भगवान् हुनुहुन्थ्यो त्यहाँ पुगे ।"[1]

उनले आफ्ना छोरा बुद्धलाई राजाको छोरा भएर मागी-मागी खानु सुहाउँदैन भनेर माग्नुबाट रोक्न खोजे । तर बुद्धले अब आफू राजाको छोरा नरहेको, बुद्ध भइसकेको र बुद्धको वृत्ति नै भिक्षाटन हो भनेर जवाफ दिए । बीच बाटैमा उभिई उभिई उनले आफ्ना पिता राजा शुद्धोदनलाई धर्मोपदेश गर्न लागे । उनले यसो पनि भने, "महाराज, कुनै पनि मानिसले गोप्य धनसम्पत्ति भेट्टायो भने त्यसमध्ये सबभन्दा मूल्यवान् रत्न आफ्नो बाबुलाई दिनु उसको प्रथम कर्तव्य हुन्छ ।"[2] तदनुसार नै बुद्धले आफ्नो सम्पति बोधि ज्ञानको बहुमूल्य अंश आफ्ना बाबु राजा शुद्धोदनलाई दिन चाहेको कुरा बताए ।

यही सिलसिलामा बुद्धले निम्न गाथा सुनाए:-

"उत्तिट्ठे नप्पमज्जेय, धम्मं सुचरितं चरे ।
धम्मचारी सुखं सेति, अस्मिं लोके परम्हि च ।।[3]

अर्थ:- उठ, अलसी नहोऊ, राम्ररी धर्माचरण गर । धर्मको आचरण गर्ने यस लोकमा र परलोकमा पनि सुखपूर्वक सुत्छ (बास गर्छ) ।

---

१. भि. अमृतानन्द– बुद्धकालीन राजपरिवार, पृ. १३७ बाट ।

२. Rhys Davids–– Buddhism, 1912– रीस डाभिड्सले 'महाराज' को ठाउँमा 'my father' भन्ने शब्द नै प्रयोग गरेका छन् ।

३. धम्मपद गाथा संख्या १६८, धम्मपद अट्ठकथा ।



यति उपदेश सुन्नेबित्तिकै राजाले स्रोतापत्ति फल प्राप्त गरे । उनले बुद्ध र अरू भिक्षुहरूलाई निम्तो दिएर दरबारभित्र ल्याए । भिक्षु सङ्घको भोजन सकेपछि भगवान् बुद्धले राजदरबारभित्रै आफ्नो राजपरिवारका सदस्यहरू समेत भएको श्रोतावर्गलाई धर्म-देशना गरे । उक्त धर्म देशना सुनेर राजा शुद्धोदन सकृदागामी र रानी प्रजापति स्रोतापन्न फल प्राप्त गर्न सफल भए । त्यस धर्मोपदेश भेलामा यशोधरा एक जना उपस्थित भएकी थिइनन् ।

राजदरबारका सबैजसोले बुद्धलाई बन्दना गरिसकेपछि यशोधरालाई पनि बुद्धको वन्दना गर्न जान आग्रह गरिँदा उनले यसो जवाफ दिइन्, "यदि मेरो कुनै गुण छ भने अथवा मेरो कुनै दोष छैन भने आर्यपुत्र नै यहाँ पाल्नुहुनेछ र त्यसै वेला मैले वहाँलाई वन्दना गर्नेछु ।"[1]

भगवान् बुद्ध दुई जना भिक्षु र राजा शुद्धोदनका साथ कोपीभित्र यशोधरा भेट्न गए । उनले सात वर्ष अगाडि एक रात सुतिरहेकी आफ्नी श्रीमती यशोधरालाई सुटुक्क छाडेर गएदेखि तिनलाई देखेका थिएनन् । ढोगभेटको औपचारिकता सकेपछि बुद्धले उनलाई चन्दकिन्नर जातक कथाद्वारा उपदेश दिए ।

त्यसपछि बुद्ध आ-आफ्ना शिष्यहरूसहित न्यग्रोधाराममा फर्के ।

कपिलवस्तु आगमनको यो प्रथम अवसरमा भगवान् बुद्ध यहाँ एक हप्ता जति बसे । त्यतिञ्जेल उनबाट यहाँ पटक पटक धर्म देशना गरियो । यस अवधिभित्र बुद्धका सौतेनो भाइ नन्द, छोरा राहुल कुमार लगायत धेरै कपिलवस्तु निवासीहरू प्रव्रजित गरिए । बुद्धको यो प्रथम कपिलवस्तु यात्राको आठौं अर्थात् अन्तिम दिन उनले शुद्धोदनको दरबारमै भोजन गरे । त्यस वेला बाबुछोरा-

---

१. भि. अमृतानन्द–– बुद्धकालीन श्राविकाचरित, पृ. ६४३ बाट ।

को बीच भएको दुःख-सुखको कुराको सिलसिलामा राजाले छोरा नन्द र नाति राहुल प्रव्रजित गरिएबाट आफ्नो उत्तराधिकारी हुने आफ्नै सन्तान कोही बाँकी नरहेको दुःख पनि बिसाएका थिए। यही क्रममा उनले बुद्धसँग आमाबाबु बाँचेका भए तिनीहरूको अनुमतिविना कसैलाई प्रव्रजित नगर्ने अनुरोध गरे। तदनुसार नै बुद्धले आमाबाबुको अनुमति नलिइकन कोही पनि छोरालाई प्रव्रज्या नदिने विनयको नियम बनाए।

यसै वेला भोजनोपरान्त बुद्धले महाधम्मपाल जातकको कुराद्वारा दिइएको उपदेश सुनेपछि राजा शुद्धोदन अनागामी फलमा प्रतिष्ठित भए। बुद्ध-वंशको अर्थकथानुसार बुद्धले बुद्ध-वंशको देशना यही पहिलो यात्राको वेलामा गरेका थिए।

कपिलवस्तुबाट राजगृहतिर जाने क्रममा बुद्ध मल्ल राज्य-को अनुपिय (अनुप्रिय) मा अडेका थिए। यो उही ठाउँ थियो जहाँ महाभिनिष्क्रमणको भोलिपल्ट बिहान अडेर उनले परिव्राजक भेष लिएका थिए। कपिलवस्तुबाट गएका शाक्य आनन्द, देवदत्त, भगु, अनिरुद्ध, किम्बिल र नाउ उपालीले भगवान् बुद्धलाई यहीं भेट्टाए तथा प्रव्रज्या लिए।

सङ्क्षेपमा यिनै थिए बुद्धको प्रथम कपिलवस्तु यात्राका घटनाहरू, अनि यही वेला थियो जब तत्कालीन कपिलवस्तु जनपदमा भनौं वा वर्तमान नेपाली भूभागमा भनौं बौद्ध धर्म सर्वप्रथम प्रचार र मनन भयो। बुद्ध भगवान्‌को मुखारविन्दबाट धर्मोपदेश सुन्ने मौका पाएका राजपरिवारका सदस्यहरू लगायत कपिलवस्तु निवासीहरू कयन् उनका अनुयायी बने, केही स्रोतापन्न र अनागामीसम्म भए, केही उनको सङ्घैमा दीक्षित भए।

चार वर्षपछि अर्थात् भगवान् वैशालीमा पाँचौं वर्षावास (इ. पू ५२४) बिताइरहेको वेला राजा शुद्धोदन सिकिस्त बिरामी भए। बुद्ध आफ्ना पिता राजाकहाँ दोस्रो पल्ट आएर धर्म देशना



गरे। फलस्वरूप राजा शुद्धोदन अर्हत् भए। हप्ता दिनपछि[१] नै उनको देहान्त भयो। शोकाकुल परिवारलाई सान्त्वना दिंदै उनी केही दिन कपिलवस्तुमा बसेका थिए।

यस पटक बुद्ध ५०० भिक्षुहरूसहित कपिलवस्तु आएका थिए। यी कपिलवस्तुका भिक्षुहरूका स्वास्नीहरूले आ-आफ्ना लोग्नेहरूलाई घर फर्काउन[२] खोजेकाले भगवान्‌ले यिनीहरूलाई कपिलवस्तुबाट हिमाल पहाडको कुणाल दहतिर लगेर कुणाल जातकका कुराहरूद्वारा सम्झाउनुपरेको थियो। यस प्रयत्नमा असफल भएपछि ती ५०० शाक्य महिलाहरूले विधवा भइसकेकी प्रजापति गौतमीकहाँ गएर भगवान्‌सँग प्रव्रज्या माग्न जोड गर्न लागे। तदनुसार प्रजापति गौतमीले महावनमा गएर बुद्धसँग प्रव्रजित हुने अनुमति मागिन्। तर यस वेला बुद्धले महिलाहरूलाई सङ्घभित्र प्रवेश गराउने अनुमति दिएनन्। बुद्ध कपिलवस्तुबाट वैशाली फर्के। प्रजापति र अन्य शाक्य महिलाहरू वैशालीसम्मै गएर प्रव्रज्या लिन सफल भए। यो इ. पू ५२५–२४ सालको[३] घटना थियो।

एक समय जेठ महीनामा कपिलवस्तुका शाक्य र कोलीय-हरूको बीच सिंचाइको लागि रोहिणी नदीको पानी लिने कुराबाट उब्जेको झगडाले युद्धको रूप लिनै लागेको थियो। ऐन मौकामा बुद्ध घटनास्थलमै आइपुगे। दुवै थरीलाई लडाइँझगडाबाट हुने हानि राम्ररी बुझाउन बुद्धले यहीं थलोमै फन्दन, दद्दभ, लटुकिक,

---

१. थेरी गाथा अर्थकथा, अङ्गुत्तर निकाय अर्थकथा।

२. यो घटना बर्माको जिनत्थपकासिनीअनुसार शुद्धोदनको देहान्त भए ताकाको हो। थेरीगाथा र अङ्गुत्तर निकाय-अर्थकथानुसार यो घटना बुद्ध रोहिणी नदीको झगडा सुल्झाउन आएको वेला घटेको थियो। भि. अमृतानन्द–– बुद्धकालीन श्राविकाचरित, पृ. २६ & ऐ– बुद्धका. राजपरिवार, पृ. १४२

३. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, पृ. १७

रुक्खधम्म जातकहरू बताए । दुवै थरीको बीचमा रहेको एकतालाई खलल पर्ने कुनै पनि काम-कुरो हुन जानुको मतलब दुवैको विनाश गर्नु हुनेछ भन्ने कुराको बोध गराउन उनले बट्टक जातक पनि सुनाए । उपर्युक्त पाँच जातकको दृष्टान्तद्वारा झगडाबाट कसैको भलो नहुने र उल्टो दुवैको नाश हुने सम्भावनातिर ध्यान खिचेर उनले रिस शान्त पारिदिए । अत्तदण्ड सूत्रको व्याख्या यही वेला भएको थियो ।[१]

यस पटक बुद्ध कपिलवस्तुको महावनमा वास बसेका थिए । यहीं कोलीय र कपिलवस्तु जनपदबाट प्रव्रजित हुन आएका अढाइ-अढाइ सय क्षत्रिय राजकुमारहरूलाई प्रव्रज्या दिइयो । उनले यहाँ बस्दा कहिले कोलीय नगरमा र कहिले कपिलवस्तुमा भिक्षाटन[२] गरेका थिए ।

अर्को पल्ट भगवान् बुद्ध कोशलराज विडूडभ शाक्यहरूसँग बदला लिन कपिलवस्तुमा सेनासहित आइरहेको थाहा पाएर कपिल-वस्तु र कोशल राज्यको सिमानामा आएका थिए । त्यहींबाट उनले राजा विडूडभलाई सम्झाईबुझाई फर्काए । जातक अर्थकथामा तीन पटक यसरी फर्काएको उल्लेख छ ।

माथि उल्लेख गरिएका बाहेक अरू कैयन् पल्ट बुद्धले कपिलवस्तु–कोलीय क्षेत्रमा आएर धर्मोपदेश दिएका थिए । कपिलवस्तुमा बुद्धले पन्ध्रौं वर्षावास बिताएको, एक पल्ट निक्कै बिरामी भएपछि पूर्ण स्वास्थ्यलाभको निम्ति[३] बस्न आएको, नयाँ बनेको संस्थागार प्रतिष्ठा गरेको[४] आदि घटनाहरू यी अवसरमध्यकै

१. सुत्त निपात & ऐ. अट्ठकथा ।
२. Jatak V,– Malalasekara; भि. अमृतानन्द– बुद्धका. श्राविका-चरित, पृ. २४–२५
३. अङ्गुत्तर निकाय
४. मज्झिम नि. अ.; संयुक्त नि० अट्ठकथा ।



हुन् र यस्तो प्रत्येक अवसरमा उनले धर्म-देशना गरेका थिए । त्यस्तै कोलीय राज्यको देवदह निगम[१], उत्तरक निगम[२], पज्जनिक निगम[३], कुण्डिका नगरको कुण्डधान वन[४], हलिद्दवसन[५] आदि ठाउँमा बुद्ध बस्दाखेरि पनि तद्‌तद् स्थानमा अनेकौं सूत्रहरूको व्याख्या भएको थियो । देवदहमा बसेको वेला लुम्बिनी वनमा पनि बुद्ध बसेका थिए ।

यसरी बुद्ध पटक पटक कपिलवस्तु-कोलीय क्षेत्रमा आएको चर्चा त्रिपिटक र अर्थकथाहरूबाट सिद्ध छ । यीमध्ये उनी पहिलो पल्ट आएर न्यग्रोधाराममा बसेको वेला नै नेपालमा बौद्ध धर्मको प्रथम प्रवेश भएको तथ्यलाई बुद्धकालीन कपिलवस्तु–लुम्बिनी–कोलीय क्षेत्र नेपाल अधिराज्यको भूभागान्तर्गत परिरहेको भौगोलिक र ऐतिहासिक वस्तुस्थितिले नै पच्चीस सय वर्षदेखि स्पष्टसँग औंल्याइरहेकै छ । यहाँ पटक पटक आएर बसेका वेलामा बुद्धले सूत्र, गाथा, उदान, जातक कथा, प्रश्नको जवाफको रूपमा दिएका उपदेशहरू प्रशस्त त्रिपिटकमा समावेश गरिएका छन् । साथै, धम्मपद, जातक अर्थकथाहरूले पनि प्रस्तुत विषयमा ज्वलन्त प्रमाण पुऱ्याइरहेकै छन् ।

यसको साथै, जहाँसम्म काठमाडौं उपत्यकामा बौद्ध धर्मको प्रवेशको विषय छ त्यसबारे पनि प्राप्त बौद्ध ग्रन्थ, नेपालको इतिहास र वंशावलीको आधारमा के भन्न सकिन्छ भने यहाँ पनि बौद्ध धर्मको प्रारम्भ बुद्धको जीवन कालमै भएको थियो ।

बुद्धकालीन प्राचीन इतिहासबाट के देखिन्छ भने जुन वेला

१. देवदहसुत्त ; भि. अमृता. बुद्धका. परिव्राजक, पृ. २५९
२. ऐ.– बुद्धका. गृहस्थी III, पृ. ५५
३. ऐ.– बुद्धका० महिलाहरू पृ ३०४
४. ऐ.– बुद्धका. महिला, पृ. ३१४
५. ऐ.– बु. गृ. III, पृ. ९५

भगवान् बुद्ध मगध, वैशाली, कोशल आदि राज्यहरूमा धर्म देशना गर्दै थिए त्यस वेला यहाँ काठमाडौं उपत्यकामा किरातहरू आवाद थिए। इ पू छैठौं–पाँचौ शताब्दीमा दक्षिणी मैदानका निवासीहरू यहाँ बेपारको निम्ति येनकेन प्रकारेण आउँथे। इ पू. चौथो शताब्दी (चन्द्रगुप्त मौर्य- इ. पू ३२१-२९७) मा कौटिल्यले आफ्नो अर्थशास्त्रमा नेपालबाट आउने अरू केही वस्तुको साथै ऊनको प्रशंसा गरिसकेका थिए। यसबाट काठमाडौं उपत्यकामा भारतीय बेपारीहरूको आवतजावत पहिलेदेखि भएको सिद्ध हुन्छ। यसको पुष्टि इसवी सातौं शताब्दीको शुरूमा जिनमित्र[1]द्वारा लेखिएको 'मूलसर्वास्तिवादविनयसूत्र'–बाट[2] पनि हुन्छ। त्यसमा नेपाल

१. 'मूलसर्वास्तिवादविनयसंग्रह'– का लेखक जिनमित्रको तारीफ ह्सुयन त्साङ्ग (इ. सन् ६२९–६४४) ले गरेका छन् [बालचन्द्र शर्मा- 'नेपाल-को ऐतिहासिक रूपरेखा', पृ. ५०]

२. सर्वास्तिवाद इ. पू. २६० ताका स्थविरवादबाट निस्किसको एउटा सम्प्रदाय हो। सम्राट अशोकको राज्यकाल इ. पू. २४८ सालमा भएको तृतीय संगीतिबाट बहिष्कृत गरिएका सर्वास्तिवादीहरूले नालन्दा (राजगृह, मगध) मा गएर छुट्टै अर्को सम्मेलन गरे। नालन्दा नै यिनीहरूको मूल थलो बन्यो। शुङ्ग-वंश (इ. पू. १८७–७२) र कण्व-वंश (इ. पू. ७२–२८) को राज्यकालमा स्थविरवादी (हीनयानी) हरू मगध-कोशलबाट विदिशा (आजकालको साँचि, ग्वालियर) र सर्वास्ति-वादीहरू मथुरामा सर्नुपर्‍यो। मथुरामा सर्वास्तिवादीहरूले आफ्ना त्रिपिटकलाई संस्कृतमा अनुवाद गरे। कालान्तरमा मथुराको सर्वास्तिवाद र मगधको सर्वास्तिवादमा भिन्नता आएकोले मथुरावासी सर्वास्तिवादी-हरूले आफूहरूलाई मूलसर्वास्तिवादी भन्न थाले। इसवी प्रथम शताब्दी-तिर मूलसर्वास्तिवादीहरू काश्मीर, गान्धार पुगिसकेका थिए। सम्राट् कनिष्कको राज्यकाल (इ. सन् १२०–१६० करीब) मा भएको चौथो बौद्ध संगीतिले बनाएको विभाषाका अनुयायी भएकाले मूलसर्वास्तिवादी-हरू वैभाषिक पनि कहलिन लागे।
[राहुल सांकृत्यायन–– 'भारत में बौद्ध धर्मका उत्थान और पतन' शीर्षक लेख, भिक्षु सुदर्शनद्वारा अनूदित]



बेपारको थलो भएको एवं बेपारीहरूको साथै भिक्षुहरू पनि उपत्यकामा आएकोबारे लेखिएको विवरण[1] यस प्रकार छः–

"प्रथमतः भगवान् बुद्ध श्रावस्तीमा बसिरहेको वेला केही बौद्ध भिक्षुहरू बेपारको लागि नेपालतिर जान लागेका महाजनहरू-को एउटा दलमा सम्मिलित भए। महाजनहरूले भने, "भन्तेहरू-हो, नेपालमा जमीन भनेको चट्टानै चट्टान हो र ऊँटको पिठिउँ जतिकै चोसो परेको छ। अवश्य पनि तपाईंहरूले यात्रामा सुबिस्ता पाउनु हुनेछैन।"

"उपत्यकामा पुगेपछि भिक्षुहरूले ऊधुम जाडोको शिकायत गर्न लागे तथा सकेसम्म छिटो फर्कन खाजे। तर साथै आएका महाजनहरू आ-आफ्ना किनबेचको कारोवार नसिध्याइकन फर्कन चाहेनन्। त्यसैले कारोबार सिध्याएर फर्कन लागेका पहिले नै आइराखेको अर्को टोलीका महाजनहरूसँग ती भिक्षुहरू श्रावस्ती फर्के।

"द्वितीयतः (कोशलराज विडूडभद्वारा कपिलवस्तुका) शाक्यहरूको कत्लेआम भएको केही समयपछि धेरै शाक्यहरू खास गरेर भगवान्का प्रसिद्ध शिष्य भिक्षु आनन्दका घर र परिवारका शाक्यहरू नेपालमा गए। तर त्यहाँ उनीहरू जाडो हावापानीको प्रभावबाट सताइए। उनीहरूले महाजनहरूमार्फत् उनीहरूलाई भेट्न आऊ भनेर आनन्दकहाँ अनुरोध गरिपठाए। तदनुसार आनन्द महाजनहरूका साथ नेपालमा गए तथा तुसारोबाट निक्कै पीडित भए।

"श्रावस्ती फर्केपछि आनन्दका हातखुट्टाका औंलाहरू तुसारोले खाएको देखेर अरू भिक्षुहरू साह्रै चिन्तित भए।

१. Sylvain Levi – Le Nepal, Vol. III, 1905-8, Appendice I, pp. 181-5, translated in English in Buddhist India, 1928 Issue बाट।

"भिक्षु आनन्दले भने, 'नेपाल अधिराज्य हिमालय पर्वतसँगै जोरिएको छ तथा हिउँ र हावाले गर्दा मेरा हातखुट्टाको गति यस्तो भयो ।'

"अरू भिक्षुहरूले सोधे, 'नेपालमै बस्ने भिक्षुहरूलाई कस्तो भएको छ नि ?'

" 'उनीहरू त जुत्ता लाउँछन् नि', आनन्दले जवाफ दिए ।

" 'तपाईं किन जुत्ता लाउनुहुन्न त ?'

" 'भगवान् बुद्धले मलाई अहिलेसम्म जुत्ता लाउने अनुमति दिनुभएको छैन ।'

"त्यसपछि भिक्षुहरू भगवान्कहाँ गएर यो समस्याको समाधान गर्न अनुरोध गरे । भगवान्बाट आज्ञा भयो, 'जाडो र हिमाली ठाउँमा जुत्ता लाउनु हुन्छ ।'

मूलसर्वास्तिवादविनयसूत्रमा लेखिएको अर्को कुराले के देखाउँछ भने भारतीय महाजनहरू धेरै मात्रामा ऊन र हरिताल[२] यहाँबाट लैजान्थे ।

मूलसर्वास्तिवादविनयसूत्रमा गरिएको उपर्युक्त चर्चाबाट इ. पू. छैठौं-पाँचौं शताब्दीमा भारतबाट भिक्षुहरू स्वच्छन्द रूपले नेपाल उपत्यकामा आउने गर्दथे, बुद्ध भगवान्को जीवनकाल (इ पू ५६३-४८३) मा नै शाक्यहरूले यहाँ पटक पटक बसाइँ सरिसकेका थिए) त्यस वेला यहाँ औधी जाडो हुन्थ्यो, हिउँ पर्दथ्यो र बाटाघाटा अपठेरा थिए, नेपालमा बस्ने भिक्षुहरू औधी जाडो हावापानीको कारण जुत्ता लाउँथे, नेपाल र भारतको बीच वाणिज्य वस्तुहरूको खुला निकासी-पैठारी हुन्थ्यो र भारतीय महाजनहरू यहाँ बराबर आएर यस्ता वस्तुहरूको आदानप्रदान गर्दथे ।

---

२. Orpiment.



भगवान् बुद्धले भारतको उत्तरी मैदानमा धर्मप्रचार गरिरहेकै वेला कपिलवस्तुका शाक्यहरू र केही भिक्षुहरूले काठमाडौं उपत्यकामा बसाइँ सरिसकेको तथ्य उपर्युक्त विवरणबाट नै सिद्ध हुन्छ । केही भिक्षुहरू पहिलो पल्ट महाजनहरू उपत्यकामा आएकै वेला यहाँका बासिन्दाहरूले शिर मुडेका, पहेंलो चीवर लाएका बौद्ध भिक्षुहरू देखेको हुनुपर्दछ । शाक्यहरूको प्रथम आगमनको साथै वा केही अघि-पछि त भिक्षुहरूले यहीं बसोबास पनि गरे । यसरी उपत्यकामा आएका बौद्धहरूमा भिक्षु र उपासक दुवै थरी थिए । भिक्षुहरू विनयको नियमबमोजिम बस्तीबाहिर बस्थे हुनन् र गृहस्थीहरू गाउँबस्तीमै घरजाम गर्न लागे हुनन् । जे होस्, यहाँ आएर बसेपछि दुवै थरीले निश्चिन्तताको सास फेरे होलान् । उनीहरूले आ-आफ्ना धर्म स्वतन्त्र रूपले पालन गर्न एवं यहाँका स्थानीय बासिन्दाहरूसँग शान्ति र मैत्रीपूर्वक बस्न पाएकोमा कृतकृत्य भए हुनन् ।

कपिलवस्तुबाट आएका बौद्धहरू– भिक्षु होऊन् या उपासक-उपासिका, प्रचारकको रूपमा होइन शरणार्थीकै रूपमा आएका देखिन्छन् । तैपनि उपत्यकाका निवासीहरूले ती नव-आगन्तुक बौद्धहरूको, विशेष गरेर भिक्षु-अनागारिकहरूको सादा जीवन, उच्च चिन्तन, शान्त र मैत्रीपूर्ण व्यवहार एवं बहुजनहितकारी आदर्शहरूबाट प्रभावित भए हुनन् । के पनि बिलकुल सम्भव देखिन्छ भने यहाँका बासिन्दाहरूमध्ये कोही कोही बौद्ध उपासक-उपासिका वा प्रव्रजितै भए होलान् । जे होस्, त्यही नै वर्तमान काठमाडौं उपत्यकामा बौद्ध धर्मको प्रवेश भएको प्रथम अवसर थियो ।

भगवान् बुद्धको जीवन काल (इ पू ५२८ बुद्धत्व प्राप्ति, इ. पू. ४८३ निर्वाण) मा नै घटेको कपिलवस्तुका शरणार्थीहरूको काठमाडौं उपत्यकाभित्र आव्रजनको उल्लेखनीय घटनापछि पनि

लामो समयसम्म[१] दक्षिणी मैदानबाट बौद्धहरूको ओइरो उपत्यका-भित्र लागिरह्यो ।

काठमाडौं उपत्यकाभित्र पनि बौद्ध धर्मको प्रवेशको विवरण प्राप्य सामग्रीबाट सिद्ध भएअनुसार यही हो ।

---

१. बाबुराम आचार्यअनुसार इ. पू १८५ सालसम्म ।



# ३. त्रिरत्नप्रति नेपालको देन

एकातिर बौद्ध धर्मले नेपालको उत्कृष्ट कला-संस्कृतिको सिर्जना, शान्तिपूर्ण र सहिष्णुतापूर्ण धार्मिक परम्पराको विकास तथा विश्वभ्रातृत्वको उदार भावनाको उत्थानमा विशेष सहभागिता पुऱ्याएको छ भने अर्कोतिर नेपालले पनि बौद्ध धर्मको तीनै रत्न–बुद्ध, धर्म र सङ्घप्रति योगदान गरेकै छ । बोधिज्ञान अवश्य पनि शाक्यमुनि गयामा पीपलको रूखमुनि ध्यान गरिरहँदा उनमा एक्कासि फुरेको ज्ञान थिएन । यसको उपलब्धि त उनले कैयौं वर्ष अगाडिदेखि अटूट रूपले गरिआएको, गहन चिन्तन, कठिन मनन, कठोर परिश्रम र अनवरत लगनशीलता आदिको परिणाम हो । त्रिपिटक र अरू विभिन्न बौद्ध ग्रन्थहरूमा उल्लिखित भगवान् बुद्धको जीवनको ऐतिहासिक पक्षका घटनाहरूलाई नियालेर हेरेमा उनलाई सम्यक् सम्बोधि ज्ञानको अनुकूल चिन्तन-मननतिर प्रवृत्त गराउन, उनको धर्मलाई व्यापक र प्रभावशाली बनाउन र सङ्घलाई विशाल र सुदृढ पार्न उनको स्वदेश भूमि कपिलवस्तु र यहाँका निवासीहरूले त्यस वेला खेलेको भूमिका विलकुल निरर्थक र नगण्य थिएन भन्ने तथ्य छर्लङ्ग हुन्छ । बुद्धको जन्मस्थल लुम्बिनी वा स्वदेश भूमि तत्कालीन कपिलवस्तु भन्नु नै वर्तमान नेपाल भइआएको यथार्थताको कारण बौद्ध धर्मको, विशेष गरेर बुद्ध, धर्म र सङ्घको सापेक्षमा यसले पुऱ्याएको सघाउ वैशिष्ट्यपूर्ण देखिन्छ ।

राजकुमार सिद्धार्थले उनन्तीसौं वर्षमा महाभिनिष्क्रमण नगरेसम्म अर्थात् सम्यक् सम्बोधि ज्ञानको खोजमा सधैंको लागि घर छाडेर नगएसम्म उनले कपिलवस्तुमा नै जीवन यापन गरिरहेका थिए। यहाँका प्राकृतिक सौन्दर्य र त्यस बेला उपलब्ध हुन सक्ने खालका जति सबै किसिमका राजसी सुखसुविधा उपभोग गरेर सिद्धार्थले दिन बिताइरहँदा पनि उनको चिन्तनको एक मात्र विषय थियो मनुष्य मात्रको साझा समस्या-- मानव-जीवनका मूलभूत दुःखकष्टहरू।

यसमाथि उनले शहर र गाउँको भ्रमणको सिलसिलामा भिन्नाभिन्नै अवसरमा देखेका लौरोको आडमा उभिरहेको, सास फेर्नेसम्म पनि स्वाँस्वाँ-फ्वाँफ्वाँ गरिरहेको, अधमरा भएर बाँचिरहेको बूढो; हात खुट्टा खुम्चेको, आङ जम्मै सुनिएर हेर्नै नहुने भएको, असह्य पीडाले लामो सुस्केरा हाल्दै रोइरहेको बिरामी; चार जना मान्छेले अर्थीमा बोकेर ल्याइराखेको, क्वाँक्वाँ रुँदै आएका आफन्तहरूले पछ्याइएको मुर्दा; तथा सांसारिक तृष्णा र प्रपञ्चदेखि निर्धक्क, जरा, व्याधि, मरणदेखि निर्भीक, वैराग्यबाट उज्यालिएको चेहरा भएको, गेरुवा वस्त्रले उन्मुक्त देखिएको साधुका दृश्यहरूले उनको चिन्तनलाई अरू गम्भीर बनायो। मानवलाई मात्र होइन सम्पूर्ण प्राणीलाई जरा, व्याधि र मरणले अनिवार्य तवरले सताउँदो रहेछ भन्ने प्रत्यक्ष अनुभव सिद्धार्थलाई कपिलवस्तुमै भएको थियो। जस्तोसुकै त्याग गर्नुपरे पनि, जेसुकै कष्ट खप्नुपरे पनि यी दुःखहरूबाट त्राण पाउने उपाय निकाल्नैपर्‍यो भन्ने उत्कट अभिलाषा उनमा यहीं बस्दा उब्जिसकेको थियो।

राजकुमार सिद्धार्थको मनमा रातदिन मानिसका यी अवश्यम्भावी दुःखहरूको चिन्तन मंडराइरहन्थ्यो। उनलाई सांसारिक प्रपञ्चमा भुलाउने, इन्द्रिय-सुखभोगमा आसक्त राख्न खोज्ने चिन्तित राजा शुद्धोदनका सबै प्रयत्न व्यर्थ गए। राहुल



कुमार पनि जन्मे। छोरा जन्मेको खबर पाएर सिद्धार्थले आफू झनझन सांसारिक बन्धनमा फस्दै गएको चाल पाए। यसरी मानव जीवनका दुःखहरूको मूल कारणमाथि चिन्तन गर्न र तिनको समाधान निकाल्न उनलाई प्रेरित गर्ने कपिलवस्तुमा उनन्तीस वर्षसम्म अनुभव गरेका जीवनका विकराल यथार्थताहरू ती महत्त्वपूर्ण तत्त्व हुन् जसले उनलाई पछि बुद्धत्व प्राप्त गर्न सघाए।

यसबाहेक बुद्धलाई बोधि ज्ञान प्राप्त भएपछि पनि कपिलवस्तु-कोलीय क्षेत्रले उनको सङ्घलाई दरिलो पार्नेतर्फ र धर्मलाई व्यापक बनाउनेतर्फ निकै योगदान गरिरह्यो।

यस सन्दर्भमा त्रिपिटिकबाट प्रमाणित भइरहेका निम्नलिखित तथ्यहरू निश्चय नै यहाँ उल्लेखनीय हुन्छन्।

भगवान् बुद्धले ऋषिपत्तन सारनाथ मृगदा वनमा पहिलो पल्ट धर्मचक्र प्रवर्तन जुन पाँच जना शिष्यहरूलाई गरे ती पञ्चभद्रवर्गीय भिक्षुहरू कपिलवस्तु जनपदकै बासिन्दा थिए। तीमध्ये बुद्धको उपदेशको सार सर्वप्रथम अवबोध गर्ने जेष्टतम कौण्डिन्य त सिद्धार्थ जन्मेको पाँचौं दिनमा उनको भाग्यफल विचार गर्न शुद्धोदनको राजदरबारमा बोलाइएका १०८ जना ब्राह्मणमध्ये सबभन्दा कान्छो थिए जसले उनी चक्रवर्ती राजा होइन, बुद्ध नै बन्ने छन् भनेर ठोकुवा भविष्यवाणी गरेका थिए। सिद्धार्थले महाभिनिष्क्रमण गरेको थाहा पाउनेबित्तिकै यी कौण्डिन्य आफ्ना साथीहरू मरिसकेकाले तिनका छोराहरूकहाँ गएर उनीहरूलाई प्रव्रजित हुन आग्रह गरेका थिए। तीमध्ये केवल चारजना मात्र सन्यास लिन तयार भए। यसरी प्रव्रजित भएर प्रारम्भदेखि बुद्धका अनुयायी बनेका पञ्चभद्रवर्गीय भिक्षु कहिने कौण्डिन्य, वप्प, महानाम, भद्दिय, अस्सजि (अश्वजित) पाँचै जना कपिलवस्तु जनपदवासी ब्राह्मण थिए।

बुद्धले गरेको धर्मचक्रप्रवर्तनको उपदेश यी पाँचै जनाले

अवबोध गरेपछि सर्वप्रथम कौण्डिन्य, अनि वप्प र भद्दिय र अन्तमा महानाम र अस्सजि प्रव्रजित र उपसम्पन्न (भिक्षुको स्थितिमा पुगेका) भए । बुद्धसमेत छ जना भिक्षुहरूको यही समूह नै पहिलो बौद्ध संङ्घ भयो । अर्को पाँच दिनसम्म अनात्मलक्षणको उपदेश सुनेपछि उपर्युक्त पाँचै जना भिक्षुहरू अर्हत भए । अनि बौद्ध संङ्घमा अर्हतहरूको सङ्ख्या छ पुग्यो । यसरी प्रारम्भिक बौद्ध सङ्घका छ जनै अर्हत् भिक्ष कपिलवस्तु जनपदबाट गएका परिव्राजक थिए ।

प्रथम कपिलवस्तु यात्रापछि बुद्ध वैशालीतिर फर्केर जाँदा मल्लहरूको अनुप्रिय नगरमा प्रव्रज्या लिने आनन्द, अनुरुद्ध, देवदत्त, किम्बिल, भगु, उपाली कपिलवस्तुबाटै गएका कपिलवस्तु निवासी नै थिए । आनन्द बुद्धकै काकाका छोरा थिए, उपाली कपिलवस्तुकै नाउ थिए । सानै उमेरमा सर्वप्रथम संघमा दीक्षित गरिएका ७ वर्षे कुमार राहुल बुद्धकै छोरा थिए । फेरि संङ्घमा प्रवेशको लागि सर्वप्रथम माग गर्ने र अनुमति पाउने महिलाहरू प्रजापति गौतमी खुद बुद्धक सानी आमा र उनको साथै प्रव्रजित हुने पाँच सय अरू महिलाहरू पनि कपिलवस्तुबाटै पहिले प्रव्रजित हुन गएका भिक्षुहरू-का स्वास्नीहरू थिए । पछि बुद्धकै श्रीमती यशोधरा र सौतेनी दिदी नन्दा पनि सङ्घमा पसे ।

यसरी कपिलवस्तु-कोलीय क्षेत्रबाट समय-समयमा प्रव्रजित हुनेहरूको सङ्ख्या लङ्काको समन्तपासादिकाअनुसार दश हजार[1] र धम्मपद अर्थकथानुसार असी हजार[1] थिए । जे होस्, बुद्धकालीन सङ्घमा कपिलवस्तु-कोलीय जनपदहरूबाट प्रव्रजित भएका भिक्षु-अनागारिकहरूको सङ्ख्या निक्कै धेरै पुगेको थियो । यिनीहरूमध्ये कति त बुद्धकालीन सङ्घमा उच्च स्थानमा पुगेका

१. Malalaseker-- Dictionary of Pali Proper name, 1957.



पनि थिए । बुद्धको जीवन कालैमा सतद्-अग्र[1] अर्थात् श्रेष्ठ पद पाउने जम्मा ४१ जना भिक्षुहरूमध्ये रात्रज्ञ (=सङ्घमा सबभन्दा बढी रात बिताउने अर्थात् जेष्ठतम) हुनेहरूमा अग्रगण्य ज्ञात (वा प्रज्ञा) कौण्डिन्य, दिव्यचक्षु हुनेहरूमा अग्रगण्य अनुरुद्ध, उच्चकुलीनहरूमा अग्रगण्य कालीगोधापुत्र भद्दिय, धर्मकथिकहरूमा अग्रगण्य पुण्ण (पूर्ण) मन्तानिपुत्त (मन्त्राणीपुत्र), दान पाउनेहरू-मा अग्रगण्य शीवली, शिक्षाकामीहरूमा अग्रगण्य राहुल, सलाक-ग्रहण गर्नेहरूमा अग्रगण्य कुण्डधान, बहुश्रुत, स्मृतिवान्, भनेका कुरालाई नछुट्ने गरी टिप्न सक्ने, धृतिमान् तथा उपस्थाकहरू-मध्येमा अग्रगण्य आनन्द, कुल प्रसन्न गराउनेहरूमा अग्रगण्य कालुदायी, विनयधरहरूमा अग्रगण्य उपाली, इन्द्रियसंयमी हुनेहरूमा अग्रगण्य नन्द आदि कपिलवस्तुकै थिए । त्यसरी नै एतदग्र पद पाएका १३ जना अनागारिकामध्ये रात्राज्ञाको अग्रगण्य पद पाउने प्रजापति स्थविरा, ध्यानीको अग्रगण्य पद पाउने नन्दा स्थविरा, महाभिज्ञानको अग्रगण्य पद पाउने यशोधरा श्राविकाहरू[2] कपिल-वस्तु-कोलीयकै थिए ।

भगवान् बुद्ध पहिलो पल्ट कपिलवस्तु आएकै बखत पावाका धारजना मल्ल-कुमार गोधिक, सुबाहु, वल्लिय र उत्तियको प्रव्रज्या यहीं[3] भएको थियो । पञ्चभद्रवर्गीय भिक्षुहरूमा अग्रगण्य प्रज्ञा कौण्डिन्यले आफ्ना भान्जा पुण्ण[4] (पूर्ण) माणवलाई कपिलवस्तुमै

१. एतदग्गवग्गो, अङ्गुत्तर निकाय; भि. अमृतानन्द-- बुद्धकालीन श्रावक-चरित I, प्राक्कथन, पृ. २०-२२

२. भि. अमृतानन्द— बुद्धकालीन श्राविकाचरित I, प्राक्कथन, पृ. ८-९

३. गोधिकत्थेर गाथा; थेरगाथा अट्ठकथा; पृ. २३ को पादटिप्पणीमा उल्लिखित भइसकेको छ ।

४. कौण्डिन्यकी बहिनी मन्त्राणीका छोरा यी पुण्ण (पूर्ण) महास्थविरकै उपदेश सुनी आनन्द स्थविर स्रोतापन्न भएका थिए । उनको बारे कुरा सुनी सारिपुत्र महास्थविर पनि वहाँसँग भेट गर्न लालायित हुन्थे [भि. अमृतानन्द- बुद्धकालीन श्रावकचरित I, पृ. ५९] ।

आफैले प्रव्रजित गरेका थिए ।

कपिलवस्तु-कोलीय क्षेत्रमै भगवान् बुद्धले कयौं सूत्र, जातक कथा, उदानहरूको उपदेश र प्रश्नहरूका जवाफ दिएका थिए । आमाबाबुको अनुमतिविना कोही पनि छोरालाई प्रव्रज्या नदिने विनयको नियम बुद्धले बनाएको पनि यहीं थियो ।

पटकपटक कपिलवस्तु-कोलीय क्षेत्रमा आउँदा बुद्ध कपिलवस्तुका न्यग्रोधाराम, महावन, कोलीयको देवदह निगम कुण्डधान वन आदि स्थानमा बस्थे । यी अवसरहरूमा जस्तो कि परिवारलाई भेट्न पहिलो पल्ट आएको वेला शाक्य परिषद्लाई वेस्सन्तर जातक, राजा शुद्धोदनलाई केही गाथा, बुद्ध-वंश, महाधम्मपाल जातक आदि, यशोधरालाई चन्दकिन्नर जातक, प्रजापतिलाई चुलदुक्खविभङ्गसुत्त, रोहिणी नदीको पानीको झगडा मिलाउन आएको वेला अत्तदण्डसुत्त र फन्दन, लटुकिक, दद्दभ, रुक्खधम्म, वट्टक जातकहरू, न्यग्रोधाराममा कालक्षेम र घटाय शाक्यले बनाएको विहारमा महाशून्यतसूत्र, नयाँ संस्थागारमा सेख सुत्त, महावनमा दण्डपाणिको सम्बन्धमा मधुपिण्डिकसुत्त मेदलूम्पमा धर्मचेतियसुत्त आदिको देशना बुद्धले गरेका थिए । कोलीय क्षेत्रको ककरपतमा दीघजाणु[1] (दीर्घजानु)लाई गृहस्थीहरू सुखी हुने उपाय, चार सम्पदा, विनाशको कारण आदि बारे, उत्तरक निगममा पाटलिय गामणी[2] (पाटलीय ग्रामणि)लाई प्राणिहिंसालगायत दश अकुशल गर्नेले यसै जीवनमा दुःख भोग गर्छ भन्ने आदिबारे, हलिद्दवसन निगमस्थित विहारमा बस्दा पुराण (पूर्ण) कोलीय पुत्र र सेनियलाई[3] चार कर्मबारे, पज्जनिक निगममा बस्दा कोलीय पुत्री

१ दीघजाणुसुत्त, अङ्गुत्तर निकाय; भि. अमृतानन्द-- बुद्धकालीन गृहस्थी II, पृ. ३४३

२. पाटलियसुत्त संयुक्त निकाय; भि. अमृतानन्द-- बुद्धकालीन गृहस्थी III, पृ ५८, ६३ ....७०

३. पपञ्चसूदनी; भि. अमृतानन्द- ऐ, पृ. १०८-११३



सुप्पवासा[1] (सुप्रवासा)लाई सुप्पवासासुत्त, कुण्डिका नगरको कुण्डधान वनमा रहँदा पनि ती सुप्पवासालाई सुनाएको उदान[2] इत्यादिको देशना पनि उल्लेखनीय छन् । देवदहसुत्त भगवान् बुद्ध कोलीय जनपदको देवदह निगममा बसेको वेला उनले भिक्षुहरूलाई दिएको उपदेश हो ।

कपिलवस्तु क्षेत्रमै आएको वेला बुद्धकहाँ उनकै दाज्यू (काकाका छोरा) महानाम शाक्य नियमित तवरले भनेजसो भेट्न जान्थे । यिनलाई बुद्धले छ अनुस्मृति, शैक्ष जीवन, उपासक कसरी हुने, उपासक कसरी शीलवान हुन्छ, मन कुन विषयमा

१. सुप्पवासासुत्त, अङ्गुतर निकाय; भि. अमृतानन्द-- बुद्धकालीन महिलाहरू, पृ. ३१०

२. कोलीयपुत्री सुप्पवासाले धेरै महीनासम्म गर्भधारण र ७ दिन ७ रातसम्म लामो अत्यन्त कष्टमय प्रसव पीडा खपेर छोरा शिवली कुमार जन्माएकी थिइन् । केही वर्षपछि तिनले भगवान्सहित सङ्घलाई भोजनको निम्ति निम्तो गरिन् । त्यस अवसरमा भगवान्ले तिनको पहिलेको प्रसव घटनालाई सङ्केत गरेर होला तिनीसित सोधे,

"सुप्पवासे, अरू पनि यस्ता छोराहरू तिमी चाहन्छयौ ।"

"भगवन् अरू सात वटा भए पनि यस्ता पुत्रहरू चाहन्छु ।"

यही सन्दर्भमा भगवान्ले निम्न उदान (ऐन मौकामा भगवान् बुद्धले बोलेका भावपूर्ण उद्गार) प्रकट गर्नुभयो:–

'असातं सातरूपेन, पियरूपेन अप्पियम् ।
दुक्खं सुखस्स रूपेन, पमत्तमति वर्तती' ति ।।'

अर्थ-- प्रमादमा मोहित भई बस्नेले असत्यलाई सत्यरूपमा, नमिठालाई मीठो रूपमा, अप्रियलाई प्रियको रूपमा र दुःखलाई सुखको रूपमा हेर्दछ ।

[भि. अमृतानन्द-- बुद्धकालीन महिलाहरू, पृ. ३२१ बाट]

सुप्पवासाका उपर्युक्त छोरा शिवली नै अगाडि चर्चा गरिएका दान पाउनेहरूमा अग्रगण्य शिवली स्थविर थिए ।

लगाई बस्ने आदिबारे देशना गरेका थिए। त्यस्तै अवसरहरूमा वप्प, शरणानि (सरकानि) शाक्य, नन्दिय, गोध शाक्यहरूलाई पनि उपदेश दिएका थिए। एक पटक नयाँ संस्थागारमा बोल्दाबोल्दै भगवान् थाकेर लेटेका थिए। अनि भगवान्कै आज्ञाबमोजिम भिक्षु आनन्द[1]ले महानाम लगायत श्रोतावर्गलाई शैक्ष प्रतिपदा, शील सम्पन्नता आदिबारे व्याख्या गरेका थिए। धम्मपदमा समावेश गरिएका कतिपय[2] गाथाहरू भगवान्ले यही क्षेत्रमा देशना गरेका थिए। यसरी त्रिपिटकका कैयन् सूत्र, अनेकौं जातक कथा, भिक्षुहरू-को लागि प्रशस्त शिक्षाप्रद, श्रावक-श्राविकाहरूसित मात्र होइन, गृहस्थीहरूसित पनि सम्बन्धित निकै प्रश्नहरूको उत्तर बुद्धले कपिलवस्तु-कोलीय क्षेत्रमा उपदेश गरेका थिए। यो बाहेक यहीं बस्दा भगवान्ले अभिव्यक्त गरेको उदान, बाँधेको विनयको नियमको चर्चा पनि माथि भइसकेको छ। यी उदाहरणहरूबाट नेपालको लुम्बिनी क्षेत्र मात्र होइन कपिलवस्तु-कोलीय अर्थात् वर्तमान तौलिहवा, रूपन्देही, नवलपरासी क्षेत्र पनि बुद्ध, धर्म र सङ्घसित घनिष्ठ तवरले

१. अर्को संस्थागारमा भगवान्ले महास्थविर मौद्गल्यायनलाई उपदेश गर्न आज्ञा दिएका थिए [अवस्सुत-परियायसुत्त, संयुक्त निकाय; भि. अमृतानन्द-- बुद्धकालीन राजपरिवार, पृ. १२८]।

२. उदाहरणार्थ धम्मपद गाथा संख्या १६८ र १६९:-

उत्तिट्ठे नप्पमज्जेय, धम्मं सुचरितं चरे।
धम्मचारी सुखं सेति अस्मिं लोके परम्हि च ॥

यो थियो पहिलो कपिलवस्तु यात्रामा बुद्धले भिक्षाटन गर्दा बाटैमा राजा शुद्धोदनलाई देशना गरेको गाथा जुन सुनेपछि उनी स्रोतापन्न भए।

धम्मं चरे सुचरितं, न तं दुच्चरितं चरे।
धम्मचारी सुखं सेति, अस्मिं लोके परम्हि च ॥

यो चाहिं राजदरबारमा भोजनोपरान्त अरू उपदेश दिइसकेपछि बुद्धले अन्तमा देशना गरेको गाथा थियो जुन सुनेपछि राजा शुद्धोदन सकृदागामी र रानी प्रजापति स्रोतापन्न भए।



सम्बद्ध रहेको छर्लङ्ग हुन्छ। बौद्ध धर्मसितको नेपालको घनिष्ठता केवल लुम्बिनीको नातामा मात्र सीमित थिएन।

कपिलवस्तुको पतनपछि यताउता बसाइँ सरेका शाक्यहरूले पनि बुद्धको धर्म वा उपदेशलाई यत्रतत्र फैलाए। यसरी निर्वासित भएका शाक्यहरू केही उत्तरमा काठमाडौं उपत्यकासम्म[1] र केही दक्षिणमा लङ्का[2]सम्म पुगेका थिए। काठमाडौं उपत्यकातिर आएका शाक्यहरूले बौद्ध धर्म यहाँ ल्याएका थिए। मूलसर्वास्तिवाद-विनयसूत्रअनुसार भिक्षु आनन्द आउँदा यहाँ उपासक-उपासिकाहरू मात्र होइनन् भिक्षुहरू पनि भइसकेका थिए। त्यस्तै लङ्कासम्म बसाइँ सरेका शाक्यहरूले त्यहाँका निवासीहरूमा बौद्ध धर्म प्रचार गर्न नसकेको वा नगरेका भए पनि आफूहरूले परिस्थितिले दिएको हदसम्म पालना गरेको सम्भावना धेरै छ। यो पनि त कपिलवस्तुका शाक्यहरूले त्रिरत्नप्रति गरेको योगदानकै अंश थियो।

१. यसको चर्चा अघिल्लो परिच्छेद (पृष्ठ ३१) मा 'मूलसर्वास्तिवादविनयसूत्र'-बाट उद्धृत गरिएको टुक्रामा भइसकेको छ।

२. कपिलवस्तुका केही शाक्यहरू लङ्का पुगेको सम्बन्धमा लङ्काको महावंश, आठौं र नवौं परिच्छेद (आनन्दकौशल्यायनद्वारा अनूदित) मा यसरी चर्चा गरिएको छः

"भगवान् बुद्धका काका अमितोदन (अमृतोदन) शाक्यका एक छोरा पाण्डु शाक्य थिए। शाक्यहरूको विनाश थाहा पाएर उनले आफ्ना मानिसहरू साथ लिएर कुनै उपायबाट गङ्गापार गएर त्यहाँ एउटा शहर बसालेर राज्य गर्न लागे। उनका सात सन्तान थिए। भद्रकात्यायनी उनकी कान्छी छोरी थिइन्। ...... लङ्काका एक राजा पाण्डु वासुदेवले अत्यन्त रूपवती भद्रकात्यायनीलाई पटरानीको पदमा अभिषिक्त गरे........."

पछि पाण्डु शाक्यका सात छोरामध्ये जेठा एकजनाबाहेक अरू छजना लङ्कामा बहिनीचाहिंकहाँ नै बसोबास गर्न गए। त्यहाँ यिनीहरूले आ-आफ्ना नाउँबाट छुट्टाछुट्टै गाउँ बसाले जस्तैः- रामले रामगोण (ग्राम), उरुवेलाले उरुवेला ग्राम, अनुराधले अनुराध ग्राम, विजितले विजित ग्राम, दीर्घायुले दीर्घायु ग्राम र रोहणले रोहण ग्राम।

यही हो सङ्क्षेपमा कपिलवस्तु-कोलीय क्षेत्र र त्रिरत्नको सम्बन्ध— अर्को शब्दमा भन्ने हो भने बुद्ध, धर्म र सङ्घप्रति नेपाल-को देन । सारांशमा नेपाल भगवान् बुद्धको जन्मभूमि मात्र होइन, उनलाई बुद्ध बन्न उत्प्रेरित गर्ने प्रेरणा-भूमि पनि हो, सङ्घको लागि पर्याप्त रूपले सघाउने आधारभूमि पनि हो, धार्मिक कार्यकलाप मनग्गे सञ्चालन गरिएको कर्मभूमि पनि हो ।



# अशोकको लुम्बिनी-कपिलवस्तु यात्रा

नेपालमा बौद्ध धर्म प्रचार भएको सन्दर्भमा सम्राट् अशोकले खेलेको भूमिका पनि कम महत्त्वको छैन । इ. पू. ४८३ साल वैशाख पूर्णिमाको राति कुशीनगरमा भगवान् बुद्धको निर्वाण भएको लगत्तै पछिदेखि उहाँको जीवनका प्रमुख घटनाहरूसित घनिष्ठ तवरले सम्बन्धित स्थानहरू-- लुम्बिनी, बुद्ध गया, ऋषिपतन (काशी) र कुशीनगर अत्यन्त लोकप्रिय तीर्थस्थल बने । अनि त के थियो र बुद्धको जन्मस्थल लुम्बिनीमा टाढा-टाढाबाट पनि उपासक-उपासिका, भिक्षु-भिक्षुणी, भक्तजनहरूको ओइरो लाग्यो ।

यसरी लुम्बिनीमा आएका यात्रीहरूमध्ये सम्राट् अशोकको यात्रा सर्वाधिक महत्त्वको छ । उनी आफ्नो राज्याभिषेकको बीसौं वर्ष इ पू. २४५ सालमा लुम्बिनीमा तीर्थ गर्न आएका थिए । लङ्काका बौद्ध ग्रन्थहरूअनुसार सम्राट् अशोकको राज्याभिषेक बुद्ध-निर्वाणको २१८ वर्षपछि[1] इ. पू. २६५ सालमा भएको थियो । तृतीय बौद्ध संगीति अशोकको शासन (राज्याभिषेकदेखि गनिएको) को सत्रौं[2] वर्षमा स्थविर मोग्गलिपुत्त (मौद्गलिपुत्र) तिष्यको नायकत्व-मा पाटलिपुत्रमा भएको थियो । नौ महीनासम्म चलेको यो संगीति

---

१. आनन्द कौशल्यायनद्वारा हिन्दीमा अनूदित महावंश, पृ. २२
२. ऐ. ऐ., पृ. ३८-३९

सकिएको दुई-तीन वर्षपछि नै सम्राट अशोकले प्रमुख बौद्ध तीर्थस्थल चारैवटामा यात्रा गरेका थिए । सर्वप्रथम उनी लुम्बिनीमा आए । त्यस वेला उनको साथमा मोग्गलिपुत्त तिष्य[१] पनि थिए ।

दिव्यावदानअनुसार सम्राट् अशोकले लुम्बिनीमा आएर स्थानीय बासिन्दाहरूलाई एक लाख अशर्फी दिए । लुम्बिनीमा भगवान् बुद्ध जन्मेको ठाउँमा एउटा स्तूप निर्माण गरे तथा यस ठाउँलाई सङ्केत गर्दै यहाँ एउटा ढुङ्गे खम्बा पनि उनले ठडाउन लगाए । यहाँबाट उनी कपिलवस्तुतिर लागे । कपिलवस्तुमा पनि विभिन्न ठाउँमा सम्राट् अशोकले कैयन् स्तूप र शिलास्तम्भहरू राखे । यी ढुङ्गे खम्बाहरूमध्ये निग्लिहवा र गोटिहवास्थित दुई वटाको त अवशिष्ट भाग आज पनि नेपालको तौलिहवा (कपिलवस्तु पनि भनिने) जिल्लामा मौजूद छन् ।

इसवी सन्को गत शताब्दीको अन्ततिर नेपालको भूभागभित्र फेला परेका उपर्युक्त तीन ओटा ढुङ्गे लाट्का अवशेषहरू नेपालमा बुद्धयुगदेखि प्रचलित भएको बौद्ध धर्मको महत्त्वपूर्ण पक्ष हुन् । यिनीहरू आज नेपालको बौद्ध संस्कृतिको अमूल्य निधिको रूपमा खडा छन् । सङ्क्षेपमा यिनीहरूको विवरण यस प्रकार दिन सकिन्छ:—

---

३. तेस्रो बौद्ध संगीतिका नायक एवं धर्म यात्रामा अशोकको साथ दिने स्थविर स्थविरवादीहरूअनुसार मोग्गलिपुत्र तिष्य थिए र यिनी सिंहली (लङ्काको) ग्रन्थहरूमा पाटलिपुत्रका ब्राह्मण मोग्गलिका छोरा थिए भनिएको छ । सर्वास्तिवादीहरूअनुसार अशोकका यी धर्मगुरु उपगुप्त थिए र यिनी मथुराका वैश्य भिक्षु थिए [बलदेव उपाध्याय-- बौद्ध दर्शन, पृ. १९८]। भि. ए. स्मिथले त मोग्गलिपुत्त तिष्य र उपगुप्त एउटै व्यक्ति हुन् भनेर पनि ठोकुवा गरेका छन् [V. A. Smith- Early History of India, 4th edition, 1924, Oxford, पृ. 101 ।]



(१) लुम्बिनी-स्तम्भः- यो बहुचर्चित लुम्बिनी-स्तम्भ सम्राट् अशोकले इ. पू. २४५ साल (४८३-२१८-२०) मा यहीं स्थापित गरेका थिए । यस स्तम्भको शिरोभाग भाँचिएर गायब भइसकेको भए तापनि अहिले जति बाँकी छ त्यतिमा अङ्कित अशोकीय अभिलेख अहिलेसम्म साबुदै छ । ब्राह्मी लिपिमा कुँदिएको त्यस अभिलेखको उतार यस प्रकार छ:

देवानंपियेन पियदसिन लाजिन वीसतिवसाभिसितेन
अतन आगाच महीयिते हिद बुधे जाते सक्यमुनीति
सिलाविगडभीचा कालापित सिला थभे च उसपापिते
हिद भगवं जातेति लुंमिनी गामे उबलिके कटे
अठभागिये च

ब्राह्मी लिपि विशेषज्ञ विद्वान् (Huttszch) अनुसार उपर्युक्त अभिलेखको यसरी अर्थ लगाइएको छ:

देवताहरूका प्रिय प्रियदर्शी राजा राज्याभिषेकको बीसौं वर्षमा आफैं आएर यहाँ शाक्यमुनि बुद्ध जन्मेको (ठाउँ) भनेर पूजा गरे ढुङ्गाको घोडा बनाउन लगाएर राखे ढुङ्गाको खम्बा स्थापना गराए यहाँ भगवान् जन्मेकोले लुम्मिनी गाउँमा कर माफी गरियो आठौं भाग पनि

(माथि 'शिलाविगडभीचा'- को अर्थ ढुङ्गाको घोडा भन्ने लगाइए तापनि यस शब्दको निश्चित अर्थ अहिलेसम्म ठम्याइएको छैन । त्यस्तै अठभागिये'- को अर्थ पनि (i) अरू कर माफ गरियो भन्ने, (ii) (उत्पादनको) आठौं भाग (मात्र) तिर्नु पर्ने गरियो भन्ने वा (iii) आठौं भाग पनि (माफ गरियो) भन्ने पनि लगाइएको छ ।

यो स्तम्भको शीर्षस्थ भागमा ढुंगे घोडाको मूर्ति भएको

चर्चा ह्सुयन त्साङ[1] (इ सन् ६२९-६४३, ले गरेका छन् । सम्राट् अशोकका रामपुरवा स्तम्भमा साँढे, सारनाथ, बसाढ (वैशाली)का स्तम्भहरूमा सिंह, संकिसा स्तम्भमा हात्ती भएको तथ्य विचार गर्दा लुम्बिनी स्तम्भमा घोडाको मूर्ति हुनु बिलकुल स्वाभाविक सिद्ध हुन्छ । यसको माथिल्लो भागमा ठण्डै ठाडो धर्सो जस्तो चिरा परेको आज पनि देखिन्छ । त्यसको चर्चा ह्सुयन त्साङ्गले गरेकोबाट यो आजभन्दा तेह्रसय वर्ष अगाडि नै परिसकेको बुझिन्छ । वज्र परेको कारणबाट यो चिरा परेको मानिन्छ ।

फा हिसयन[1] (इ. सन् ३९९-४१३) ले लुम्बिनीमा यो अशोक स्तम्भ देखेको चर्चा गरेका छैनन् । तर उनले लुम्बिनीमा जुन रूखमुनि भगवान् बुद्ध जन्मेका थिए त्यसलाई देखेको दाबी गरेका छन् । ह्सुयन त्साङ्गले पनि त्यस रूखको चर्चा गरेका छन् । तर उनले यसलाई पुरानो अशोक रूख भनेका छन् ।

यो लुम्बिनी-स्तम्भ पत्ता लगाउने मानिसको सम्बन्धमा गलत धारणा अझै गइसकेको छैन । यसबारेको यथार्थ घटना यस प्रकार छ:

इ. सन् १८८६ (वि. सं. १९४३) सालमा श्री ३ महाराज वीर शमशेरले आफ्ना भाइ खड्ग शमशेरलाई पाल्पाका बडाहाकिम नियुक्त गरेका थिए । यी राणा खड्ग शमशेरको पुरातत्त्व, इतिहास-मा चाख थियो । उनले लुम्बिनी–कपिलवस्तु क्षेत्रका केही ठाउँहरूको पुरातात्त्विक महत्त्वको विषयमा आफूले लेखेका केही लेखहरू भारतीय पत्रिका 'पाइअनियर'– मा छपाएका पनि थिए । बडा हाकिमको हैसियतमा काम गर्दाहुँदा उनलाई रुम्मिनदेइ (त्यस ताका स्थानीय निबासीहरूले लुम्बिनीलाई यसो भन्थे)को जङ्गलमा एउटा ढुंगे खम्बा जस्तो चीज जमीनमुनि गाडिएको छ भन्ने

1. यी ह्विज्जे पिपल्स् रिपब्लिक् अफ् चाइनाका प्रकाशनहरूमा लेखिएका Fa Hsuan र Hsuan Tsang अनुसार हुन् ।



जानकारी भयो । तदनुसार उनले त्यो ठाउँमा गएर त्यो खम्बालाई निकाल्ने काम थाले । इ. सन् १८८६ सालको नभेम्बर महीनाको अन्तिम दिनसम्ममा खम्बामुनि तीन फूट मात्रै माटो खनेर निकाल्न बाँकी थियो ।

भोलिपल्ट डिसेम्बर १ तारीखको दिन एक जना विदेशी डा. फुहरर बडाहाकिम खड्ग शमशेरलाई भेट्न त्यस उत्खननको थलोमा आइपुगे । यिनी भारतको पुरातात्त्विक सर्वेक्षण विभागको नोकरीमा रहेका एक जना पुरातत्त्व विशेषज्ञ थिए । उनी नेपालको सीमानामा कतै रहेको कुनै अशोक स्तम्भमा अङ्कित अभिलेखको तसबीर खिचेर ल्याउने आदेशअन्तर्गत नेपाली सीमानै सीमाना घुमिरहेका थिए । इ. सन् १९८५ मार्चमा यी जर्मन विशेषज्ञले निग्लिहवास्थित स्तम्भमा अङ्कित अभिलेख फेला पारेका थिए जसको पाठ पढिएपछि यो सम्राट् अशोकले राखेको स्तम्भ भनेर थाहा भएको थियो । तदनुसार त्यस क्षेत्रको विस्तृत सर्वेक्षण गर्ने अनुमति पाउन भारतीय पक्षबाट नेपाल सरकारसित गरिएको अनुरोधको जवाफमा काठमाडौंबाट भारतीय पक्षलाई पाल्पाका बडाहाकिमसँग सम्पर्क राख्न निर्देशन दिइएको थियो । यही सिलसिलामा भारतीय पुरातात्त्विक सर्वेक्षण विभागबाट खटिएका फुहरर खड्ग शमशेरलाई भेट्न उपर्युक्त खोदाई थलोमा पुगेका थिए ।

उनी थलोमा पुग्दा खम्बाको फेदबाट तीन फूट मात्र माटो खिक्न बाँकी थियो । खड्ग शमशेरसँग उनको पहिलो भेट यहीं भएको थियो । उनले खम्बामा अङ्कित अभिलेखको तसबीर खिचे । त्यो अभिलेखको अर्थ ब्राह्मी लिपि–विशेषज्ञबाट ठम्याइएपछि भगवान् बुद्धको जन्मस्थल लुम्बिनी उपवनमा सम्राट् अशोकले ठड्याएको खम्बा यही हो भनेर संसारलाई थाहा भयो ।

यीनै हुन् लुम्बिनी स्तम्भ पत्ता लागेको बारेको वस्तुस्थिति ।

तर यो वास्तविक तथ्यको जानकारी नभएको कारण कतिपय मानिसहरू भ्रमवश यो स्तम्भ पनि डा. फुहररले पत्ता लगाएको भन्ठान्दछन् । पि. लायन्डनले आफ्नो नेपालको इतिहास–[1] मा यो भ्रमलाई नै ठाउँ दिएबाट पनि यसको अरू बढी प्रचार भएको थियो । अरू केही लेखकहरू आँखा चिम्लेर उनको लहलहैमा लागे । तर यस सम्बन्धमा गहिरो अध्ययन गरेका कतिपय विदेशी लेखकहरूकै कृतिहरूबाट पनि लुम्बिनी स्तम्भ पत्ता लागेको कामसित फुहररको नाउँ जोर्नु कतिको गलत छ भन्ने कुरा उदाङ्ग हुन्छ ।

श्रीलङ्काका लेखक टि. विजयतुङ्ग आफ्नो 'लुम्बिनी टु कुशीनारा' शीर्षक किताबमा लेख्छन्:– "..... मिष्टर लायन्डनले सन् १८९५ भनेर गलत मिति दिएका छन् । यो डिसेम्बर १ तारीख सन् १८९६ हुनुपर्दछ । ..... भिन्सन्ट् स्मिथ र उनका प्रतिनिधि पूर्णाचन्द्र मुखर्जीले लुम्बिनी स्तम्भको उत्खनन बिगारेको दोष डा. फुहररलाई दिएका छन् .... उनी थलोमा पुगेको वेला खम्बाको वरिपरि तीन फूट मात्र जमीन खन्न बाँकी थियो ।"

एल्. ए. वाडेलले यस विषयमा यसो भनेका छन्, " ..... डा. फुहररले कुनै अगुवाइ गरेनन्, .... .. उत्खननसँग उनको कुनै सरोकार थिएन ..... ठाउँ तोकेका थिएनन् । भि. स्मिथको विवरणबाट हामीलाई के थाहा हुन्छ भने डा. फुहरर व्यापक उत्खनन सम्पन्न भएपछि मात्र थलोमा पुगेका थिए । ... .. अभिलेखको तसवीर खिचेका थिए । यो उत्खनन नेपाली कर्मचारीहरुद्वारा गराइएको थियो ।"

यस्तै इ. जे. थोमसले आफ्नो "द लाइफ अफ् बुद्ध" शीर्षक किताबमा पिपरहवा स्तूप पत्ता लगाउने डा पेपेले यस (लुम्बिनी–स्तम्भ) को अभिलेख गलत तरीकाले सारेकोमा डा. फुहररलाई

१. Perceval Landon-- Nepal, 1928 London.



'कुख्यात' शब्द समेत प्रयोग गरेर निन्दा गरेको कुरा उल्लेख गरेका छन् ।

नेपाल तराईका पुरातात्त्विक वस्तुहरूसम्बन्धी आफ्नो प्रतिवेदनमा[1] पूर्णचन्द्र मुखर्जीले पनि सगरहवाका सत्रवटा स्तूप र एउटा ठूलो बनौट (Structure) का स्मारक ध्वंसावशेषहरू नष्ट-भ्रष्ट पारेकोमा डा फुहररलाई कडा शब्दमा निन्दा गरेका छन् । यी स्तूपहरू कोसलराज विडूडभले कपिलवस्तु ध्वस्त पार्दा कत्ले-आममा परेका शाक्यहरूको अस्थि राखिएका स्मारक ठानिएका छन् । फुहररले एउटा पूर्व–अशोककालीन लेखोट फेला पारेको झूठा दाबी गरेको एवं त्यसको आधारमा अठार जना शाक्यको नाउँ ती ध्वंशावशेषसंग जोर्ने कोशिश गरेका थिए । तर भि. स्मिथले समयमै थलोमा पुगेर निरीक्षण गरे तथा उनको अनधिकृत दाबीको आम भर्त्सना गरे । फुहररको इ. सन् १८९७ को तथाकथित उत्खननको सिलसिलामा उनले उपर्युक्त ध्वंसावशेषबाट केही अस्थि, सुनचाँदीका टुक्राहरू, सुनका सर्पहरू, माणिक, मणिभ, अछेता इत्यादि भित्र राखिएको माटोको भाँडो निकालेका थिए ।

मात्र केही वर्षअगाडि लुम्बिनी–कपिलवस्तु क्षेत्रमा अन्वेषण र उत्खनन गर्न पुरातत्त्वविभाग, नेपाललाई सघाउने श्रीमती देवला मित्रले पनि डा. फुहररबारे निम्न कुरा लेखेकी छिन् । "..... नेपाल दरबारबाट खोदाईको सुपरिवेक्षण गर्न खटाइएका तानसेन बुटौलका कप्तान वीरजङ्गको सहायताको रूपमा फुहरर सन् १८९७ डिसेम्बरमा फेरि नियुक्त भए .... त्यस कार्यको प्रमुख केन्द्र सगरहवामा सागर भन्ने ठूलो पोखरीको किनारमा थियो जहाँ खोदाईको नाममा उनले सर्वनाश गरे । एक मात्र उद्देश्य मूल्यवान्

१. P. C. Mukherjee-- A report on a Tour of Exploration of the Antiquities in the Terai, Nepal, Cal, 1901.

वस्तुहरू र स्मारकहरू राखिएका भाँडाहरू फेला पार्ने भएकोले बनौटका ध्वंसावशेषहरू जगसम्मै भत्काइयो... यसरी ... ...सत्र वटा स्तूपका र एउटा ठूलो बनौटका ध्वंसावशेषहरू भडखारो मात्र बाँकी रहने गरी पूरै बेपता गरिए ।"

डा. फुहररको सम्बन्धमा यथार्थताहरू ठीक यिनै हुन् । सगरहवास्थित हाम्रा अमूल्य, अनुपम पुरातात्त्विक सम्पत्ति सधैंको लागि नष्ट पारिदिने डा. फुहरर नै हुन् । यसमा कुनै शङ्का छैन । पुरातात्त्विक सर्वेक्षणका विशेषज्ञ भएको नाताले उनले यी दुर्लभ वस्तुहरू अज्ञानवश बिगारेको सम्भावना देखिन्न । यसो गर्नामा उनको मनसाय के थियो होला ? यी पुरातात्त्विक सम्पदाहरूको त्यसरी विनाश गरिनदिएको भए कपिलवस्तु क्षेत्रका कतिपय नयाँ कुराहरू अहिले पत्ता लागिसक्थे होलान् । निश्चय पनि डा. फुहरर हाम्रो राष्ट्र, हाम्रो पुरातात्त्विक सम्पदा, हाम्रो बौद्ध संस्कृति र बौद्ध धर्मकै अपूरणीय क्षतिको लागि जिम्मेवार छन् । उनको जति निन्दा गरे पनि पुग्दैन । माथि उद्धृत गरिएका विभिन्न लेखकहरू-का भनाइहरूबाट पनि यो कुरा छर्लङ्ग हुन्छ ।

यस विषयलाई यहीं छाडी अब लुम्बिनी-स्तम्भकै अरू कुरा गरौं । यो लुम्बिनी स्तम्भमा अशोकको अभिलेखबाहेक इसवी चौधौं शताब्दीतिरका पश्चिम नेपालका नाग राजा रिपुमल्लको पनि तिब्बती अक्षरमा कुँदिएको एउटा अभिलेख छ । यसको पाठ यस प्रकार छ:

'ॐ मणिपद्मे हुं ।। श्री रिपुमल्लश्चिरंजयतु १२३४'

यसमा दिइएको साल १२३४ शक संवत् भएको बुझिन्छ र यो सालको बराबर वि. सं. १३६९ वा इ. सन् १३१२ हुन्छ । यसबाट बौद्ध राजा रिपुमल्ल पश्चिम नेपालस्थित आफ्नो राज्यबाट काठमाडौं उपत्यकामा आउँदा वा यहाँबाट आफ्नो घर फर्कंदा लुम्बिनी-कपिलवस्तु क्षेत्रमा तीर्थ यात्रा गरेका थिए भन्ने थाहा



हुन्छ । राजा रिपु मल्लको यस लेखबाट अर्को कुरा के थाहा हुन्छ भने त्यस ताकासम्म लुम्बिनी-कपिलवस्तु क्षेत्र पुरिएको वा बिर्सिसकेको थिएन र यात्रुहरू यहाँ तीर्थ गर्न आउँथे ।

सम्राट् अशोक र पश्चिम नेपालकै उपर्युक्त अभिलेखहरू बाहेक लुम्बिनी-स्तम्भमा अरू पनि केही अक्षरहरू कोरिएका आज पनि देखिन्छन् । तर ती अक्षरहरू भएकै ठाउँमा ध्वाँसे टाटो परेकोले सजिलैसँग पढ्न सकिने स्थितिमा छैनन् । यिनीहरूको पाठ पढिएपछि यस विषयमा अरू बढी प्रकाश पर्नेछ ।

लुम्बिनी-स्तम्भको अशोकीय अभिलेखको अर्थ ठम्याइएपछि भगवान् बुद्धको जन्मस्थल लुम्बिनी यहीं हो भन्ने कुराको निश्चत तवरले टुङ्गो लाग्यो । यससम्बन्धी पहिले गरिएका अनुमानहरू गलत साबित भए र सधैंको लागि यो प्रश्नको निरूपण भयो । यस्तै अरू अशोक-स्तम्भहरू कुनै पनि स्थापित गरिएको ठाउँको चर्चा गरिएको छैन ।

(ii) निग्लिहवा स्तम्भः- वर्तमान तौलिहवा (वा कपिलवस्तु) जिल्लाअन्तर्गत निग्लिहवास्थित निग्लीसागर भनिने ठूलो पोखरीको डीलमा एउटा अशोक-स्तम्भ आज पनि दुई टुक्रा भएर जमीनमा परिरहेको छ । यो खम्बा अतीतमा पन्ध्र सय वर्षभन्दा बढी त्यस ठाउँमा खडा रहेपछि कुनै बखत भाँचिएर दुई टुक्रा भएको प्रष्टै देखिन्छ । पन्ध्र फूट लामो चाहिं टुक्रा पोखरीको डीलमा तेर्सो लडिरहेको छ । यसको सँगै छोटो चाहिं टुक्रा जमीनमा गाडिएर अलिकता ढल्केर ठडिएको छ यसैमा ब्राह्मी लिपिमा अशोकीय अभिलेख कुँदिएको छ । जसको पाठ यस प्रकार छः

देवानंपियेन पियदसिन लाजिन चोदसबसा (भिसि) तेन
बुधस कनाकमनस थुवे दुतिवं वढिते
(बीसतिव) साभिसितेन च अतन आगच महीयिते
(सिला थमे च उस) यापिते

यसलाई ब्राह्मी लिपि विशेषज्ञद्वारा यसरी अर्थ्याइएको छ:
देवताहरूका प्रिय प्रियदर्शी राजाले राज्याभिषेकको चौधौं वर्षमा
बुद्ध कनक मुनिको थूर दोस्रो पल्ट बढाइयो
राज्याभिषेकको (बीसौं व)र्षमा आफै आएर पूजा गरे
(ढुंगाको खम्बा) स्थापना गरियो

उपर्युक्त अभिलेखमा दोस्रो हरफको 'दुतियं' (द्वितीयम्) शब्दको अर्थ 'दोबर' भन्ने लगाएर 'स्तूप दोबर ठूलो गरेर बढाए' भनेर पनि अर्थ गरिएको छ।[1]

यसरी सम्राट् अशोकको राज्याभिषेकको चौधौं वर्ष (इ पू. २६५–१४=२५२–१)मा दोस्रो पल्ट बढाइएको भनिएबाट अशोकले नेपालमा बनाएका स्तूपहरूमध्ये सबभन्दा पुरानो ठहरिन्छ। हसुयन त्साङअनुसार सम्राट् अशोकले कनकमुनि बुद्धको जन्मस्थानमा उनको अस्थि गर्भमा हालेर एउटा स्तूप बनाए तथा यसको सामुन्ने सिंहको मूर्ति शिरोभागमा भएको एउटा ढुंगे खम्बा गाडे। तर यो लाट पत्ता लागेको वेलामै हसुयन त्साङ्गले चर्चा गरेको यसको शिरोभाग र सिंह बेपत्ता भइसकेको थियो। जुन स्तूपको सामुन्ने यो खम्बा ठडाइएको थियो त्यसको पनि आजसम्म अत्तोपत्तो छैन। तर यहाँ सम्राट् अशोकले कनकमुनि बुद्धको सन्मानमा स्तूप बनाएका थिए भन्ने यसमा अङ्कित अभिलेखबाटै सिद्ध छ।

भुईंमा लडिरहेको माथिल्लो टुक्रामा पनि एउटा अभिलेख र मयूरको दुइटा आकार[2] कुँदिएका छन्। यो अभिलेखचाहिं राजा

१. "King Priyadarshi, after he had been consecrated King fourteen years, increased the stupa of Buddha Kanakmuni to the double and having been consecrated twenty years came himself and worshipped."

[E. J. Thomas– The Life of Buddha.]

२. रामपुरवास्थित एउटा अशोक स्तम्भमा पनि मुजूरको दुइटा मूर्ति कुँदिएका छन्।



रिपु मल्लको हो र यो दुरुस्त लुम्बिनी–खम्बामा रहेको उनकै अभिलेख जस्तो छ:– 'ॐ मणि पद्मे हुं रिपुमल्लश्चिरंजयतु १२३४'। यसबाट नागराजा रिपु मल्ल यहाँ पनि तीर्थ गर्न पुगेका थिए एवं त्यस वेला अर्थात् वि. सं. १३६९ (इ. सन् १३१२) सम्म यो ठाउँ तीर्थस्थलको रूपमा साबुदै थियो। यसबाट अर्को कुरा के पनि सिद्ध हुन्छ भने यो निग्लिहवा, लुम्बिनी आदि ठाउँहरू वि. सं. ११९३ (इ. सन् ११३६) मा स्थापित भएको नाग राज्यकै भूभाग थियो।

यो खम्बा भारतको पुरातात्त्विक विभागका कर्मचारी डा. फुहरर नेपाली सिमानाका निवासीहरूसँग अशोक स्तम्भबारे सोधपूछ गर्दै हिंडेको वेला इ. सन् १८९५ साल मार्चमा स्थानीय जनताबाट जानकारी पाएर हेर्न गएका थिए तथा त्यसमा अङ्कित अभिलेखको उतार लिएका थिए जुन पढिएपछि यो अशोक स्तम्भ भनेर थाहा भयो।

यसबाट तत्कालीन अन्वेषकहरूको लागि लुम्बिनी–कपिलवस्तुको खोजी गर्न राम्रो कुञ्जिका भेटियो। लुम्बिनी र कपिलवस्तु यहाँबाट टाढा छैन भन्ने कुरा प्रष्ट भयो।

(iii) गोटिहवा–स्तम्भ:– वर्तमान तौलिहवा (वा कपिलवस्तु) जिल्लाअन्तर्गत तौलिहवा बजारदेखि साढे तीन माइल जति दक्षिणपश्चिमस्थित गोटिहवा भन्ने गाउँमा एउटा अशोक–स्तम्भको जमीनमा गाडिएको फेदको भाग आज पनि देखिन्छ। यो इ सन् १८९७–९८ तिर ए. सि कार्लिलले पत्ता लगाएका थिए। उनको भनाइअनुसार इ. सन् १९०४ सम्म यो स्तम्भको टुक्रामा अभिलेखका अक्षरहरूका उडिसकेका बाँकीहरू केही-केही देखिन्थे। यसको माथिल्लो भाग कहिले के भयो थाहा पाउन सकिएको छैन। यो स्तम्भ पनि निग्लिहवा र लुम्बिनी–स्तम्भ जस्तै छ।

२५०० औं बुद्ध जयन्तीको निमित्त इ. सन् १९५४

(वि. सं. २०११-१२) सालमा धर्मोदय सभाले यो खम्बाको जगसम्म र वरिपरि खन्न लगाएको थियो। यसको जगको चारैतिर ईंटले छापिएको पाइयो। त्यसै वेला यसको वरिपरि गाह्रो बनाउन लगाइएको थियो। फा-हिसयन र हसुयन त्साङ्गको भनाइअनुसार यो गोटिहवा-स्तम्भ सम्राट् अशोकले आफ्नो धर्मयात्राको सिलसिलामा क्रकुच्छन्द बुद्धको नाउँमा बनाएका थिए।

फा हिसयन (लेगको अनुवाद अनुसार) ले यसो लेखेका छन्:- "कनकमुनिको जन्मस्थल क्रकुच्छन्दको जन्मस्थलको उत्तर-तिर एक योजनभन्दा घटी फासलामा पर्दछ ..... त्यस ठाउँमा एउटा स्तूप पनि थियो।" उनले खम्बाको उल्लेख गरेका छैनन्।

हसुयन त्साङ्ग (जुलियन्स्को अनुवादअनुसार) को कथन यस प्रकार छ:— "शहर (कपिलवस्तु) को दक्षिण ५० लिको दूरीमा क्रकुच्छन्द जन्मेको र निर्वाण भएको भनिएको ठाउँ छ .. क्रकुच्छन्द र उनका पिताको भेटघाट भएको ठाउँको सम्झनामा स्तूपहरू बनाइएका थिए .......शहर (कपिलवस्तु) को दक्षिणपूर्व बुद्ध (क्रकुच्छन्द) को एउटा अस्थि स्तूप छ र यसको नगीचै ३० फूट अग्लो, टुप्पामा सिंहको टाउको भएको एउटा ढुङ्गे खम्बा छ। यसमा बुद्ध (क्रकुच्छन्द) को निर्वाणको कथा कुँदिएको छ। यो खम्बा अशोक राजाले बनाएका थिए। (यो ठाउँबाट) ३० लि उत्तरपूर्व प्राचीन राजधानीका ध्वंसावशेषहरू छन् जहाँ कनकमुनि बुद्धको सम्मानार्थ एउटा स्तूप बनाएको छ।"

चिनिया यात्रीहरूको उपर्युक्त विवरणअनुसार यो गोटिहवा स्तम्भको नजीकै सम्राट् अशोकले क्रकुच्छन्द बुद्धको सन्मानमा एउटा स्तूप बनाएका थिए। त्यसैले उन्नाईसौं शताब्दीको अन्ततिर मेजर वाडेल र डा. फुहररले यो गोटिहवा लाटको दक्षिणतिर केही खोदाई गरेका पनि थिए। यसको दक्षिणतिर हाल एउटा पोखरी छ। यो पोखरीको पिँधमा केशर शमशेर राणाले इ. सन् १९३३-४



मा खनाएका थिए। पिँधमुनिको जमीन काठका मूढाहरूले बलियोसंग ढाकिएको पाइएको थियो। त्यसपछि यसको रहस्य पत्ता लगाउने प्रयास छाडेर उनले यसलाई यथावत् छोप्न लगाएका थिए। पोखरीको दक्षिणतिर केही ध्वंसावशेषहरू छन् जुन स्तूपका जस्ता देखिन्छन्।

यसरी काठमाडौं उपत्यकाको दक्षिण-पश्चिमी मैदानहरूमा अवस्थित लुम्बिनी-कपिलवस्तु क्षेत्रमा सम्राट् अशोक आफैं तीर्थ यात्रा गर्न आएर ठाउँ-ठाउँमा स्तूप, स्तम्भहरू बनाएका थिए। तसर्थ परासी, भिक्षाठोरी (थूर, थोरी), आदि नेपाली भूभागान्तर्गतका तराइ क्षेत्रहरूमा अरू अशोक स्तम्भ र स्तूप फेला पर्दै आएमा आश्चर्यको कुरा हुने छैन।

उपर्युक्त विवरणहरूबाट लुम्बिनी-कपिलवस्तु-कोलीय क्षेत्रमा भगवान् बुद्धले रोपेर गएको बौद्धधर्मरूपी वृक्षलाई सम्राट् अशोकले आएर फलाएफुलाएको पाइन्छ। बुद्धको जीवन कालमा उपवनको रूपमा रहेको लुम्बिनीमा दुई-अढाई सय वर्षपछि अशोकको समयमा गाउँ बसालिएको तथ्य त लुम्बिनी-स्तम्भको अशोकीय अभिलेखका 'लुंमिनि-गामे' भन्ने शब्दहरूबाट प्रमाणित हुन्छ। बस्ती बढ्नुबाट बौद्ध धर्मको पनि उत्तरोत्तर बृद्धि भएको स्वतः झल्कन्छ।

# नेपालमा अशोकीय शिष्टमण्डल

नेपालको दक्षिणी भाग तराई इलाकामा सम्राट् अशोक खुद आफै आएर बौद्ध धर्मको प्रचार गर्नुको साथै गौरवमय कृतिहरू समेत स्थापना गरेको उल्लेख अघिल्लो परिच्छेदमा भएको छ। उत्तरी भाग पनि उनको दृष्टिबाट पर भएन। उनले आफ्नो राज्य कालको भिन्न भिन्न समयमा लङ्का, बर्मा आदि विभिन्न देशमा पठाएजस्तै धार्मिक शिष्टमण्डल उत्तरस्थित हिमाली प्रदेशतिर पनि पठाएका थिए।

यसबारे श्रीलङ्काको महावंशमा लेखिएको विवरण यस प्रकार छ:

"संगीति समाप्त गरेर बुद्ध धर्म प्रकाशक स्थविर मोग्गलिपुत्तले भविष्यको ख्याल राखेर, प्रत्यन्त (=छिमेकी) देशहरूमा शासन (=बुद्ध शासन) स्थापनाको विचार गरेर कार्तिक मासमा ती ती स्थविरहरूलाई ती ती ठाउँहरूमा पठाए[1] ।। १–२ ।।

स्थविर मज्झन्तिक (माध्यमिक)लाई काश्मीर र गन्धारमा तथा महादेव स्थविरलाई महिषमण्डल (आधुनिक खान देश; नर्मदादेखि दक्षिण)मा पठाए ।। ३ ।। रक्षित नामक स्थविरलाई बनवास (वर्तमान मैसूरको उत्तरी भाग) तिर पठाए तथा यवन

१. आनन्द कौशल्यायनद्वारा अनूदित महावंश, पृ. ६५ बाट।



धर्मरक्षितलाई अपरान्त (समुद्र-तटमा बम्बईदेखि सूरतसम्मको प्रदेश) देशमा पठाए ।। ४ ।। महाधर्मरक्षित स्थविरलाई महाराष्ट्र-मा (तथा) महारक्षित स्थविरलाई यवनहरूकहाँ पठाए ।। ५ ।। हिमवन्त (हिमालय) प्रदेशमा मज्झिम स्थविरलाई (तथा) स्वर्णभूमि (वर्तमान पेगु, ब्रह्मा, बर्मा)मा सोण र उत्तर दुई जना स्थविरलाई पठाए ।। ६ ।। आफ्ना शिष्य महामहेन्द्र स्थविर तथा इट्ठीय, उत्तीय, सम्बल र भद्रशाल-- यी पाँच स्थविरलाई यो भनेर लङ्का पठाए-- मनोज्ञ तिमीहरू लङ्काद्वीपमा मनोज्ञ बुद्ध धर्मको स्थापना गर ।। ७–८ ।।"

यसअनुसार हिमालय प्रदेशमा आएको टोली मज्झिम स्थविरको नेतृत्वअन्तर्गत थियो। दीपवंश ४, १० अनुसार उनको साथमा काश्यप गोत्र, मूलदेव (अलकदेव), सहदेव र दुन्दुभिसार थिए।

मज्झिम स्थविर र उनका सहयोगीहरूको बारे मज्झिम निकाय (३–४–११,१३६)मा यसो लेखिएको छ:

"मज्झिम ऋषिले हिमालय प्रदेशमा गएर धर्मचक्र प्रवर्तन सूत्रको उपदेश दिए। उहाँ मानिसहरूलाई मार्गफलको प्राप्ति भयो। पाँच्चै स्थविरले पृथक् पृथक् पाँच भिन्न देशलाई श्रद्धालु बनाए। उहाँ प्रत्येक (स्थविर)को साथमा एक एक लाख मनुष्यले भक्तिपूर्वक सम्बुद्धको शासन (धर्म)मा प्रव्रज्या ग्रहण गरे।"

मज्झिम निकायको उपर्युक्त कुरा महावंशले पनि उद्धृत[1] गरेको छ।

मज्झिम निकाय र महावंशमा उल्लिखित यस तथ्यको पुष्टि साँचीको एउटा स्तूपमा कनिङ्हमले यसै शताब्दीको प्रारम्भमा भेट्टाएको एउटा शिलालेखबाट पनि भएको छ। त्यसमा माथि उद्धृत टोलीप्रमुख मज्झिम स्थविरको साथै काश्यपको पनि नाउँ

१. आनन्द कौशल्यायनद्वारा अनूदित महावंश, पृ. ६६–६७

उल्लिखित छ । उक्त अभिलेखको पाठ यस प्रकार छः– 'यी हुन् सम्पूर्ण हिमवतका गुरु कासपको परिवारका सज्जन पुरुषका (अस्थि) ।"[1]

मज्झिम निकायबाट माथि उद्धृत गरिएको टुक्रामा एक एक जना स्थविरले छुट्टा छुट्टै एउटा एउटा देशलाई श्रद्धालु बनाए भनिएकोबाट ती पाँच जना स्थविर सम्पूर्ण हिमाली भेकका देशहरू-मा छरिएको बुझिन्छ । धर्म-प्रचार गर्ने सिलसिलामा तीमध्ये एक जना स्थविर, सम्भवतः कासप (काश्यप गोत्र) काठमाडौं उपत्यका-मा आइपुग्नु बिलकुल स्वाभाविक छ । यसबारे बाबुराम आचार्यले यसो लेखेका छन्:– "पहिला तीन मौर्य सम्राट् चन्द्रगुप्त, विन्दुसार र अशोकले बडा विजेता भएर लगभग सम्पूर्ण भारतवर्षमा मौर्य वंशको साम्राज्य कायम गरे । यी मौर्य सम्राट्हरूका दृष्टिमा जङ्गलका बीचको सानो नेपाल राज्य क्षुद्र सम्झेर छोडिदिएका थिए । अशोकले सैन्य बलले देश विजय गर्ने नीति छोडी बौद्ध धर्मका प्रचारले सभ्यताद्वारा देशहरूलाई आफ्नो प्रभावमा ल्याउने नीति लिए ... बुद्धको जन्मस्थल रुमीन (लुम्बिनी) मा पनि बडो शिलास्तम्भ राखिदिए........ यिनले हिमालयपट्टि धर्म प्रचार गर्न मज्झिम टोलीलाई आफ्ना अन्तिम समयमा पठाएका हुनाले यिनी राजसिंहासनबाट उतारिएका समय (इ. सं. २३६) भन्दा दुई-चार वर्षअगाडि वा पछाडि नेपालमा आइपुगे ।

1. "These are (the ralics) of the good man of the family of Kasapa, the teacher of the whole Hima-vata, that is, the Himalayan border land."

[अनागारिक धर्मपालले आफ्नो 'ह्वाट् डिड् लर्ड बुद्ध टीच्' शीर्षक किताब, पृष्ठ ५४ मा जनरल कनिङ्हमको 'द भिलसा तोप्स्' शीर्षक पुस्तक (पृ १८७, ३१७) बाट उद्धृत गरेअनुसार]



नेपारहरूले[1] यो धर्म आदरपूर्वक लिए । तर यिनका छिमेकमा रहेका मुर्मी, स्यार्पा र थामीका पुर्खाहरूले भने यसको अनादर गरे ।... बुद्धले मन, वचन, शरीर र कर्मलाई शुद्ध राख्ने सदाचारका उपदेश दिई अनीश्वरवाद र अहिंसालाई मुख्य गराई बौद्ध धर्मको जग बसालेका थिए । नेपारहरू सदाचारको अर्थ बुझ्दथे, तर पालन गर्न कठिन थियो । तैपनि भरसक पालन गरे । अनीश्वरवादको तत्त्व सम्झन कठिन थिएन । तर परम्परादेखि चलिआएको देवतावादलाई अन्तःकरणबाट हटाउन र हिंसा त्याग गर्न महाकठिन थियो । तैपनि देवतावादलाई भरसक हटाउँदै गए । तर पशुहिंसालाई हटाउन असाध्य भयो र कायमै राखे । बुद्धले अन्तिम समयमा बनेलको मासु खाँदा अजीर्ण भई यस संसारलाई छोडेका थिए । यस कारण भारतीय बौद्धहरूले बनेल, सुंगुरलाई त्याग गरेका हुनाले नेपारहरूले पनि छोडीदिए । किराँत राजाहरूले नै पहिले यो धर्म लिएका थिए । राजाहरू अघि नसरेका भए चाँडै नै यो धर्म फैलिन सक्ने थिएन । दोस्रा पुस्तामा नेपारहरू पक्का

1. वर्तमान काठमाडौं उपत्यकाका आदीवासीहरू जसको नाउँबाट बाबुराम आचार्यको भनाइअनुसार देशको नाउँ नै नेपाल भयो । उनी लेख्छन् —"वाग्वती नदीका सिरानको शिवपुरी र चन्दागिरि तथा साँगा र भीमढुङ्गाका चार भञ्ज्याङभित्रको ब्याँसी नेपार जातको वासस्थान थियो । ...यिनीहरू आफ्नो जातलाई नेपार भन्दथे । उस समयका मागधहरू 'रेफ्'– का बदलामा 'ल' बोल्दथे । यस कारणले यिनीहरू-लाई नेपाल भन्न लागे । बिस्तारबिस्तार यही शब्द देशको नाम भयो । आर्य सभ्यताका रङ्गमा रङ्गिएपछि नेपारहरूमा राष्ट्रिय एकता पैदा भई आपसमा मेलजोल बढाएर इ. सं. पहिले ४०० का आसपासमा एक राज्य खडा गरे । यही नेपालको पहिलो राज्य थियो । उनताका भारतीय आर्यहरू आग्नेयदेशी जातहरूलाई किराँत भन्दथे । नेपारहरू पनि आग्नेयदेशी हुनाले यिनलाई पनि उनीहरू किराँतमा गन्दथे । यसकारणले नेपार राज्यलाई किराँत राज्य भन्ने चलन भएको छ ।"

[पूर्णिमा सं. ३२, पृ. २०३–४ बाट]

बौद्ध बनेका हुनाले उस समयका राजधानीमा अचेलका ललितपुरमा पाँच ओटा स्तूप वा चैत्य बने। ढिक्का रूपमा यी स्तूप आजसम्म छँदैछन्, जो भूलले अशोकका स्तूप भनिन्छन्।"

[पूर्णिमा सं. ३२ बाट]

यो त इतिहासमा मान्य कुरा हो कि बुद्धकालीन युगभन्दा अगाडि महाभारतकालीन युगदेखि नै हिमाली भेकमा किरातहरू आबाद थिए। काठमाडौं उपत्यकामा त्यसताका बसोबास गर्नेहरू पनि किरात मानिन्थे। अशोकीय शिष्टमण्डलका स्थविरहरूले वर्तमान काठमाडौं उपत्यकालगायत हिमाली श्रृङ्खलाका विभिन्न भेकमा रहेका किराती मूलका आदिवासीहरूलाई नै बौद्ध धर्ममा प्रवेश गराएको बुझिन्छ। माथि चर्चा गरिएअनुसार अशोकले हिमवत् प्रदेशमा मज्झिम स्थविरको नेतृत्वमा पठाएको धार्मिक टोलीले यस भेकतिर बौद्ध धर्म प्रचार गरेको बारे बौद्ध त्रिपिटकको एक प्रमुख अङ्ग मज्झिम निकायमा लेखिएको कुराको पुष्टि लङ्काको दीपवंश, महावंशहरूले गरेका छन्। साँचीमा पाइएको शिलालेख-बाट उक्त टोलीका एक स्थविर कासप (काश्यप गोत्र) सम्पूर्ण हिमवत्का गुरु मानिएको जानकारी मिल्दछ। अनि बाबुराम आचार्यको कथनबाट काश्यप स्थविरको टोली इ. पू. २३६–३४ सालतिर नेपाल अर्थात् वर्तमान काठमाडौं उपत्यकासम्म आइपुगेको र यहाँका आदिवासीहरूले बौद्ध धर्म ग्रहण गरेको ऐतिहासिकतातिर सङ्केत गर्दछ।

बाँकी रह्यो पाटनस्थित अशोक स्तूप भनिने प्राचीन ढाँचा-का थूरहरू। यिनीहरूको नाउँ अशोक स्तूप भनिएको कारण पहिलो त यो स्तूपहरूको गर्भमा सम्राट् अशोकले हिमवत् टोलीका कुनै सदस्य स्थविर, सम्भवत काश्यप गोत्रमार्फत् पठाएको बुद्ध अस्थि राखेर बनाएको हुन सक्दछ, दोस्रो यिनीहरूको निर्माण अशोकीय स्तूपको ढाँचामा भएको हुन सक्दछ, तेस्रो बाबुराम आचार्यले



सुझाउ गरेअनुसार अशोकीय टोलीका स्थविरका चेला वा तिनका सन्तानहरूले बनाएको भए पनि उक्त टोलीप्रति सन्मान दर्शाउँदै यिनीहरूलाई अशोकीय भनिएको हुन सक्दछ। तर यिनीहरू भूलले अशोक स्तूप भनिए भन्ने बाबुराम आचार्यको भनाइ स्पष्ट र तर्कसंगत जँच्दैन। यी थूरहरूलाई[1] महावंश र साँचीको अभिलेखको सन्दर्भमा पनि हेर्नु उपयुक्त देखिन्छ।

जे होस्, हिमाली भेकतिर अशोकीय धार्मिक शिष्टमण्डलले बौद्ध धर्म प्रचार गरेको एउटा ऐतिहासिक सत्यता हो तथा तत्कालीन उपत्यकावासीहरू उक्त मण्डलसंग, सम्भवतः स्थविर काश्यपसंग प्रत्यक्ष सम्पर्कमा थिए। यहाँका बासिन्दाहरू बुद्धको जीवनकालदेखि बौद्ध धर्मावलम्बीहरूसित परिचित भइसकेका हुनाले यिनीहरूले अशोकीय बौद्ध शिष्टमण्डलमा अभिरुचि लिनु स्वाभाविकै हो।

---

1. यी थूरहरूबारे केही वंशावली (उदाहरणार्थ 'प्राचीन नेपाल', अङ्क ४) मा राजा वीरध्वजलाई स्वप्नावस्थामा देउता आई यसो भनेको कुरा लेखिएको छः— "हे राजन्! ..... तैंले यहीं श्रीयन्त्राकार पाँच थुम्का गरी शहर बनाई त्यहीं नै बसनू र तेरो उद्धार होला।"

राजभोगमाला वंशावलीमा पनि यस्तै लेखिएको पाइन्छ, "एस्ता तरहसँग राजाले धेरै धन खर्च गरी शहर बनाउन लाउँदा अघिका शहर मति नगरदेषि जोरि बनाया। ९००० घर थपि ठूलो शहर बनाया। नगरका लक्षणले पाँच थुम्का बनिगया। ति राजाले अघि बस्याको दरबार छाडि नयाँ दरबारमा बास गर्‍या।"

तर उपर्युक्त वंशावलीमा क्रमशः अंशुवर्मा, कृतवर्मा, भीमार्जुन, न (रे) न्द्रदेवपछि राजा भएका भनिएका वीरध्वजको नाउँ ऐतिहासिक क्रममा आउँदैन तथा वंशावलीमा लेखिए जति कुरा ऐतिहासिक तवरले सिद्ध भनेर मान्न पनि सकिन्न।

# अशोक काठमाडौंमा आए भन्नेबारे

नेपाली बौद्धहरूमा, विशेष गरेर काठमाडौं उपत्यकाका बौद्धहरूमा के लोकोक्ति एउटा व्यापक तवरले प्रचलित छ भने सम्राट् अशोक यहाँ आएका थिए र यहाँको दोस्रो शहर पाटन (ललितपुर वा ललितपत्तन पनि भनिने) उनैले बसालेर गएका थिए। पाटनमा आज पनि विद्यमान रहेका प्राचीन थूरहरूका संस्थापक पनि उनै सम्राट् अशोक थिए भनिन्छ। त्यसो त अशोक चैत्य कहिने स्तूप वा चैत्यहरू पाटनमा मात्र होइन काठमाडौं र उपत्यकाका अरू ठाउँहरूमा आज पनि मौजुद छन्। उदाहरणको लागि काठमाडौं गद्दी बैठकको दक्षिण–पश्चिमी कुनास्थित चैत्य अशोकीय कहिन्छ। त्यस्तै चाबहिलस्थित प्राचीन चैत्य अशोक चैत्यबाट नै समय-समयमा परिवर्तित भएको मानिन्छ। जनश्रुतिकै कुरा गर्ने हो भने काठमाडौं शहरको प्रमुख बजार 'असन'– को नाउँ पनि उहिले यहाँ बनेको अशोक–मण्डपबाट अपभ्रंशित भएर बनेको भनिन्छ।

सम्राट् अशोकको उपत्यका आगमनको लोकोक्तिलाई पुष्टि गर्ने विवरण डा. डि. राइटको हातमा परेको एउटा वंशावलीमा दिइएको छ। यसबारे उनले आफ्नो किताबमा[1] लेखेअनुसार

१. Dr. D. Wright– History of Nepal, Cambridge, 1877, pp. 111–13.



किराती राजा स्थुंकोको राज्यकालमा बौद्ध सम्राट् अशोक आफ्ना गुरु उपगुप्त, महारानी तिष्यरक्षिता र एक जना छोरी राजकुमारी चारुमतिको साथमा नेपाल आए, आफ्नो नाउँमा एउटा शहर 'अशोकपतन' (आजकालको पाटन वा ललितपुर) बसालेर यसको चार कुनामा चार ओटा र माझमा[1] एउटा स्तूप बनाए, एउटा विहार पनि स्थापना गरे, कीर्तिपुरमा पनि एउटा स्तूप बनाए। सम्राट् उपत्यकाको बौद्ध महत्त्वको प्रत्येक स्थानमा गए। उनले राजकुमारी चारुमतिको विवाह अशोकपतनका राजकुमार देवपालसंग गरिदिए। यही राजकुमार देवपालको नाउँबाट देवपत्तन[2] (द्योपाटन)को स्थापना भयो। सम्राट् अशोकले देवपाललाई देवपत्तनका शासक, बनाए ३६०० रोपनी जग्गा दिए। चारुमतिले देवपत्तनमा एउटा विहार बनाइन् जुन् उनकै नाउँबाट चारुमति विहार (स्थानीय बोलीमा चाबहिल भनिन्छ) भनियो। पाको उमेरका भएपछि देवपाल र चारुमति दुवैले प्रव्रजित जीवन बिताए।

१. यहाँ उल्लिखित पाँच स्तूपमध्ये शहरको माझमा बनाइएको भन्ने चाहिं हाल मौजुद छैन। चार कुनाको चारै वटा भने आज पनि हुबहु प्राचीन रूपमै खडा छन्। तिनमा हाल देखिएका महायानी– वज्रयानी प्रभाव पछि थपिएका देखिन्छन्। कीर्तिपुरमा बनाइएको भनिएको स्तूपको पनि अत्तोपत्तो छैन।

२. तर वर्तमान द्योपाटनको "देवपतन" भन्ने नाऊँ अरू वंशावली वा अभिलेखमा भेटिन्न। यस शहरका 'गुँल', 'सुवर्णपुरी', 'नवगृह', 'ग्वल', 'गोल' (गोर) आदि नाउँहरू नै वंशावलीहरूमा भेटिन्छन्। 'देवग्राम' भन्ने नाउँ ने. सं. ४६७ (वि. सं. १४०४), ने. सं. ४६९ (वि. सं. १४०६) सालको शिलालेख (मृगस्थली शिवालय जलहरी–– बाबुराम आचार्य) र 'देवपट्टन' भन्ने नाउँ ने. सं. ८१८ (वि. सं. १७५५) सालको दानपत्र (राजा भूपालेन्द्र मल्लले गरिदिएको–– बाबुराम आचार्य) मा पाइन्छ। 'देवपत्तन' भन्ने नाउँ खसहरूले राखेको भन्ने बाबुराम आचार्यको भनाइ पनि यहाँ उल्लेखनीय हुन्छ।

चारुमतिको मृत्यु चारुमति विहारमा नै भयो । देवपालले पनि एउटा विहार बनाए तर यसको निर्माण नसिधिंदै[1] उनको मृत्यु भयो ।

यो भयो आफूले पाएको वंशावलीको आधारमा डि. राइट-ले लेखेको विवरणको सारांश । तर यस्तो विवरण अरू कतिपय वंशावलीहरूमा पाइन्न । यसैले यसबारे तुलनात्मक र समीक्षात्मक अध्ययन गर्नु आवश्यक छ ।

सर्वप्रथम राइटको वंशावलीमा दिइएको किराती राजाहरू-क्रम (उदाहरणार्थ जितेदस्ती वा जितादास्त्री) कर्कप्याट्रिकको वंशावली, राजभोगमाला वंशावली, केशरपुस्तकालय वंशावली आदिमा दिइएको क्रमसंग मिल्दैन । एक त वंशावली भनेकै आफै इतिहास होइन । दोस्रो अरू वंशावलीहरूसँग नमिलेकोले पनि यसमा लेखिएका कुराहरू भरपर्दा भएनन् । साथै यस सन्दर्भमा निम्नलिखित कुराहरूको पनि ख्याल राख्नु आवश्यक हुन्छ ।

सबभन्दा पहिले उपर्युक्त वंशावलीमा सम्राट् अशोकको काठमाडौं आगमनबारे लेखिएको कुरा ऐतिहासिक तथ्य-अनुरूप छैन भन्ने त सम्राट्को साथमा साम्राज्ञी तिष्यरक्षिता पनि थिइन् भनेर त्यसैमा लेखिएकोबाट सिद्ध हुन्छ ।

यहाँ विचारणीय कुरा के हुन्छ भने अशोकको शासन (राज्याभिषेकबाट गनिएको)को सत्रौं[2] वर्षमा तृतीय बौद्ध संगीति

1. चारुमति-विहार आज पनि चाबहिलमा जीर्णशीर्ण र परिवर्तित रूपमा विद्यमान छ । देवपालले बनाएको विहार धर्मस्थलीस्थित चैत्य हुनुपर्ने राय धर्मादित्य धर्माचार्यको छ [Buddhist India, 1928, Dec., Vol. II, No., 4] ।
2. महावंश आदि बौद्ध ग्रन्थहरूअनुसार बुद्धको निर्वाणको २१४ वर्षपछि अशोक राजा भएका थिए र त्यसको ४ वर्षपछि उनको राज्याभिषेक भएको थियो । बुद्ध-निर्वाणको ऐतिहासिक तवरले मान्य साल इ. पू. ४८३ [महावंश, रिस डाभिड्स्, इ. जे. थोमस, रा. सांस्कृत्यायन इ.



गरिएको र बीसौं[1] वर्षमा उनको लुम्बिनी यात्रा भएको थियो । उनी काठमाडौं आएका भए त्यसै वेला हुनुपर्ने देखिन्छ । उनी राज्यकालको अन्तिम ताका आएको सम्भावना ऐतिहासिक तवरले मिल्ने देखिन्न ।

अशोकले धर्मयात्रा गरेको वेला तिष्यरक्षिता पहिले त महारानी भइसकेको वा उनी सम्राट्को साथमा भएको उल्लेख बौद्ध ग्रन्थहरूमा पाइन्न, दोस्रो उनी बौद्ध धर्मप्रति श्रद्धालु भएकी देखिन्नन् । तिनीबारे लङ्काको महावंशमा[2] यसो लेखिएको छः–

"धम्माशोक राजा के (शासन के) अठारवें वर्ष में महामेघ-वनाराम में महाबोधि प्रतिष्ठित हुई ।। १ ।। उसके (बाद) बारह वें वर्ष में राजाकी प्यारी रानी, बुद्धभक्त असन्धिमित्रा की मृत्यु हो गई । उसके चौथे वर्ष में राजा धम्माशोक ने दुराशय तिष्यरक्षिता को अपनी रानी बनाया ।। २–३ ।। इसके (बाद) तीसरे वर्ष में उस अनर्थकारिणी, रुपगर्विता ने यह (देख) कि राजा महाबोधिको उससे भी (अधिक) प्यार करता है, क्रोधित हो, जाकर मण्डूकण्टक से महाबोधिको नष्ट कर दिया ।। ४–५ ।। इससे चौथे वर्ष में महाराज धम्माशोक ने स्वर्गवास किया । यह (कुल) सैंतीस[3] वर्ष हुये ।। ६ ।।"

अनुसार; हेर्नोस् लेखकको Lumbini-Kapilvastu-Dewadaha, T. Univ., 1979, pp. 98-100] बाट हिसाब गर्दा तृतीय बौद्ध संगीति ४८३ २१८–१७=२४९–८ इ. पू. मा र लुम्बिनी यात्रा ४८३–२१८–२०=२४६–४५ इ. पू. मा भएका ठहरिन्छन् ।

1. लुम्बिनी स्तम्भको अशोकीय अभिलेखः–
   देवानंपियेन पियदसिन लाजिन वीसतिवसाभिसितेन
   अत्तन आगच महीयिते... ...
2. आनन्द कौशल्यायनद्वारा हिन्दीमा अनूदित 'महावंश', पृ. १०६
3. यहाँ 'बारह वें वर्ष' भनिएकोले ११ वर्ष, "चौथे' भनिएकोले ३ वर्ष हिसाब गर्नुपर्ने हुन्छ र यही क्रमले गणना गर्दा १८+११+३+२+३=३७ वर्ष हुन्छ ।

उपरोक्त उद्धरणबाट तिष्यरक्षिता सम्राट् अशोकको शासन (राज्याभिषेकदेखि गनिएको)को बत्तीसौं वर्ष अर्थात् इ. पू. २३४ (२६५–३१) ताका मात्र महारानी भएकी थिइन् । इ. पू. २३४ पछि सम्राट् अशोकले धार्मिक शिष्टमण्डलहरू यताउता पठाएका वा शिलालेखहरू कुँदाएका थिए होलान् । तर आफै धर्मगुरुसहित लावालस्कर लिएर कतै तीर्थ यात्रा गर्न गएको उल्लेख पाइन्न । गयास्थित जुन पीपलको रूखमुनि भगवान् बुद्धले बुद्धत्व प्राप्त गरेका थिए त्यही बोधिवृक्षलाई नाश गर्नेसम्म दुर्मति महारानी तिष्यरक्षितामा भएको बुझिन्छ । तिनको विषयमा दिव्यावदानमा पनि यसो लेखिएको छ:

"अशोककी धर्मपत्नी तिष्यरक्षिताको– जिसने अशोक के पुत्र कुणालको अन्धा बनाकर देश निकाला कर दिया था– बौद्ध धर्म से बडा ही द्वेष था । अतः उसने बोधिवृक्षको जलवाकर समूल नष्ट करदिया ।"[१]

यसरी अशोकको काठमाडौं उपत्यका आगमन वा महारानी तिष्यरक्षिताबारे नेपाली बौद्धहरूमा प्रचलित लोकोक्ति र राइटको वंशावलीमा दिइएको विवरण दिव्यावदान, महावंश जस्ता सर्वमान्य बौद्ध ग्रन्थहरूमा किटानसाथ लेखिएको कुराहरूको एकदम विपरित परेका छन् । महावंश, दिव्यावदान जस्ता आधिकारिक बौद्धग्रन्थहरूमा स्पष्ट लेखिएको कुरालाई उपेक्षा गरेर आधार खुलस्त नभएको जनश्रुतिलाई मान्यता दिनु किमार्थ मिल्दैन ।

अशोकको साथ तिष्यरक्षिताको नाउँ जोरिएकोबाट उनीहरूको यहाँ आगमन भयो भन्ने सम्भावनालाई सकारात्मकभन्दा नकारात्मक असर नै बढी पर्न आउँछ ।

यदि उपगुप्त कहिएका व्यक्ति इतिहासकार भि. स्मिथले

१. धर्मदूत वर्ष ११, अङ्क १–३, इ. सन् १९४६ अप्रिल–जून अङ्कबाट ।



भने जस्तै[१] मोग्गलिपुत्त नै भए अशोक-आगमनको तर्क झन् फितलो हुन्छ । अशोकको शासनको सत्रौं वर्षमा तेस्रो बौद्ध संगीति भएका वेला मोग्गलिपुत्त ७२ वर्ष पुगिसकेका थिए[२] । अशोकको शासनको बत्तीसौं वर्षमा तिष्यरक्षिता महारानी भएको वेला मोग्गलिपुत्त ८६–८७ वर्षको हुन्थ्यो । उनी बाँचिरहेकै भए पनि त्यस्तो उमेरमा यहाँ आउनु त्यतिको सम्भव देखिन्न ।

यस्तो स्थितिमा उपगुप्त र तिष्यरक्षिताको साथमा सम्राट् अशोकको काठमाडौं आगमनको कुरा मान्य कसरी हुन सक्ला ?

फेरि यो घटना साँच्चै घटेको भए लुम्बिनी–कपिलवस्तु–रामग्रामको विषयमा तथा उपत्यका र नेपालीहरूकै विषयमा त्यत्तिको विस्तृत विवरण लेख्ने ह्युयन त्साङ्ग जस्ता बौद्ध यात्रीले यसलाई छुट्याउने थिएनन् । अवश्य पनि उनको समय (इ. सन् ६२९–४३)सम्म यो घटना बिर्सिसक्ने थिएन वा उनको ध्यान खिच्न नसक्ने खालको थिएन ।

अथवा यो घटना वास्तविक भए भिक्षु आनन्दको उपत्यका आगमनको उल्लेख मूलसर्वास्तिवादविनयसूत्रमा भएजस्तै यसको पनि चर्चा बौद्ध ग्रन्थ कुनै न कुनैमा भइसक्थ्यो होला । तर अहिलेसम्म अशोकको काठमाडौं आगमनको विषय बौद्ध ग्रन्थहरूमा कतै चर्चित भएको थाहा पाइएको छैन ।

अर्को कुरा, सम्राट् अशोकको धर्मयात्राको लक्ष्य भगवान् बुद्धको जीवनका घटनाहरूसँग सम्बद्ध चार ओटा प्रमुख स्थलको दर्शन गर्नु थियो । उनको लुम्बिनी यात्रा र यसैको क्रममा कपिलवस्तु, निग्लिहवा (कनकमुनि बुद्धसँग सम्बन्धित) र गोटीहवा (क्रकुच्छन्द बुद्धसित सम्बन्धित) आगमन यही लक्ष्यको अनुरूप थियो । काठमाडौं उपत्यकामा बुद्धको जीवन कालमा बौद्ध

१. पृ. ४६, पादटिप्पणी ।

२. आनन्द कौशल्यायनद्वारा अनूदित महावंश, पृ. ३८–३९

धर्मावलम्बीहरूको प्रवेश भइसकेको एवं आनन्द जस्ता प्रमुख भिक्षु आइसकेको भए पनि यो ठाउँ बुद्धको जीवनका कुनै घटनासँग सम्बन्धित वा अशोकीय युगमा बौद्ध धर्मको दृष्टिकोणले त्यत्तिको महत्त्वपूर्ण बनिसकेको थिएन। यहाँ मज्झिम टोलीका स्थविर काश्यप आएकै भए पनि बाबुराम आचार्यले भनेजस्तो अशोकको अन्तिम काल[1] वा उनको मृत्युपछिको घटना थियो। जे होस्, यो उपत्यका अशोकको लागि कुनै बौद्ध तीर्थस्थल थिएन र उनी यहाँ आउनुपर्ने सम्भावना कति पनि देखिन्न।

सम्राट् अशोक तीर्थ गर्न गए-गएको ठाउँमा शिला–स्तम्भहरू पाइएका छन्। तर पाटन शहर वा उपत्यकामा कतै लुम्बिनी–कपिलवस्तुमा जस्तै अशोकीय ढुङ्गे लाट फेला परेको छैन।

काठमाडौं उपत्यकाको भौगोलिक स्थिति लुम्बिनी-कपिलवस्तुको भन्दा भिन्न भएकोले सेनासहितको लावालस्करसाथ सम्राट् अशोक एकपछि अर्को उकालो चढेर यहाँसम्म आउने सम्भावना निक्कै कम छ।

प्रस्तुत विषयमा अर्को एउटा अस्वाभाविकता सम्राट् अशोकले यहाँ नयाँ शहर अशोकपत्तन बसाले, आफ्ना जुवाइँ देवपाललाई देवपत्तनको शासक नियुक्त गरे तथा उनलाई हज्जारौं रोपनी जग्गा बकस दिए भन्ने कथनमा छ। वंशावलीमा एकातिर यहाँका किराती राजा स्थुन्कोको राज्यकालमा अशोक यहाँ आए भनिएको र अर्कोतिर उनले (अशोकले) यहाँ कसैलाई शासक नियुक्त गर्ने र यहाँको जग्गा बकस दिने, यहाँ नयाँ शहर आफ्नो नाउँमा बसाल्ने कुरा किराती सम्प्रभुतासँग मेल खाँदैन। ऐतिहासिक तवरले उपत्यकाका किराती राजाहरू पाटलिपुत्रका सम्राट्का अधीनमा

१. अशोकको अन्तिम काल बुद्ध निर्वाणको मान्य साल इ. पू. ४८३ बाट उनको राज्याभिषेकसम्मको २१८ वर्ष र त्यसपछिको ३७ वर्ष कटाउँदा इ. पू. २३०–२२८ ताका पर्दछ।



भएका देखिन्नन्। यहाँका किराती राजाहरू महाभारत युग, बुद्ध युगदेखि अशोकपछिका शुङ्ग कण्व आदि युगहरूमा पनि स्वाधीन र सार्वभौम सत्तासम्पन्न भएको इतिहासबाट देखिन्छ।

उपत्यकामा शैवी-वैष्णवीहरूले शैवी–वैष्णवी देउता र महापुरुषहरू आए तथा बौद्धहरूले बुद्धहरू र बौद्ध महापुरुषहरू आए भनेर कल्पना गरिएका कथाहरू वंशावली, पुराणहरूमा मनग्गे दिइएका छन्। अशोकको काठमाडौं आगमनको कुरा पनि भगवान् बुद्ध यहाँ आएर स्वयम्भूमा धर्मदेशना गरे भनेर स्वयम्भू–पुराणमा दिइएको कथा जस्तै कोरा कल्पना मात्र हुन सक्छ। सम्भव छ अशोकले नेपाललाई पनि लङ्कालाई भन्दा कम महत्त्व दिएका थिएनन् भन्ने देखाउन तथा उनले छोरी भिक्षुणी संघमित्रालाई लङ्कामा धर्म प्रचार गर्न पठाएको वास्तविक घटनासित मिलान गर्न उनी अर्की छोरी चारुमतिको विवाह गरिदिन यहाँ आएको कल्पना गरियो। जग्गा बकसको अनुमान चाहिं सम्राट्ले लुम्बिनीका गाउँलेहरूलाई कर माफी गरिदिएको तथ्यमा आधारित देखिन्छ। लुम्बिनी–कपिलवस्तु भेकमात्र होइन उत्तर भारतीय मैदानसित पनि काठमाडौं उपत्यकाको सम्पर्क अटूट भइरहेको हुनाले यहाँका मानिसहरू त्यतातिर घटेका घटनाहरूदेखि अपरिचित थिएनन्। त्यसैले त्यहाँका घटना वा कार्यकलापसित मिलेजुलेको कल्पना यहाँ हुन नसक्ने होइन।

जे होस्, सम्राट् अशोक वर्तमान काठमाडौं अर्थात् तत्कालीन नेपाल उपत्यकामा आए भन्ने कुरा ऐतिहासिक तवरले प्रमाणित गर्न अहिले सामग्री नजुटेको स्थिति पनि विचारणीय हुन्छ।

बाँकी रह्यो यहाँका केही स्तूप र चैत्यहरूलाई अशोक चैत्य भनिएको कारण के होला त भन्ने प्रश्न। यसको जवाफमा अगाडि तर्क गरिएजस्तै यिनीहरू या त सम्राट् अशोकले मज्झिम

टोलीमार्फत पठाएको बुद्ध-अस्थि गर्भमा राखेर बनाइएकोले या त त्यस वेला प्रचलित अशोकीय शैलीअनुसार बनाइएकोले या त बाबुराम आचार्यले लेखेअनुसार अशोकीय टोलीका स्थविरका शिष्यहरूको दोस्रो पुस्ताको पालामा उक्त अशोकीय टोलीप्रति सन्मान दर्शाउन बनाइएकोले 'अशोकीय' कहलिए ।



# उपत्यकामा महायानको प्रचार

महायान पनि स्थविरवाद जस्तै नेपालमा प्राचीनकालदेखि प्रचलनमा रहेको एउटा प्रमुख सम्प्रदाय हो । नेपालका बौद्धहरूले यहाँ आजसम्म मानिआएका मन्त्रतन्त्रसहितको वज्रयान वा लामा धर्म महायानी दर्शनबाटै उद्भूत भएका हुन् । नेपालका उपासक–उपासिकाहरू अर्थात् गृहस्थी बौद्धहरू आज जति पनि छन् ती सबै मूलतया महायानी हुन् ।

महायान सम्प्रदाय सम्राट् अशोकको समय अर्थात् इसवीपूर्व तृतीय शताब्दीमै देखा परिसकेका महासाङ्घिक, सम्मितीय निकाय-हरूबाट उब्जेका अन्धक, वैपुल्य मतहरूबाट विकसित भएको हो[१] । यो सम्प्रदाय कुषाण सम्राट् कनिष्कको समयमा अर्थात् इसवीको प्रथम शताब्दीमा नै महायान कहलिन लागिसकेको थियो । यही समय ताका प्रज्ञापारमिता, सद्धर्मपुण्डरीक आदि महायानी ग्रन्थहरू लेखिए । सद्धर्मपुण्डरीक त इ. पू. प्रथम र इसवीको प्रथम शताब्दी-मा जीवित रहेका भिक्षु मञ्जुश्रीले लेखेका थिए भन्ने रिस डाभिड्-सको भनाइ छ[२] । पछि द्वितीय शताब्दीमा नागार्जुनले प्रज्ञापारमिता-बाट नै शून्यताको सिद्धान्त लिएका थिए[३] । नागार्जुन (द्वितीय

१. राहुल सांकृत्यायन– पुरतत्त्व निबन्धावली, १९५८, पृ. १०३
२. T. W. Rhys Davids- Buddhism, 1912, p. 202.
३. बलदेव उपाध्याय– बौद्ध दर्शन, वि. सं. २००३, पृ. १३०

शताब्दी), असङ्ग (चौथो शताब्दी), वसुबन्धु (चौथो शताब्दी) हरूले यसैका विस्तृत व्याख्याहरू पनि लेखेका थिए। असङ्गका गुरु मैत्रेयनाथले पनि लङ्कावतारसूत्रबाट नै विज्ञानवादी सिद्धान्त ग्रहण गरेका थिए[१]। यसरी माध्यमिक र योगाचार मतका आचार्यहरू यी महायानी ग्रन्थहरूबाट प्रभावित भइसकेका थिए।

महायान अशोककालमा निस्किसकेका स्थविरवादबाट भिन्न १७ ओटा निकाय जस्तै कुनै एउटा खास छुट्टै सम्प्रदाय होइन। यसमा अनेक सम्प्रदायका दार्शनिक सिद्धान्तहरू समय समयमा समाविष्ट गरिएका छन्। यसअन्तर्गत दार्शनिक सिद्धान्त नै फरक भएका सम्प्रदायहरू पनि छन्। उदाहरणार्थ, भौतिक पदार्थ र चित्त (मानसिक तत्व) बारे माध्यमिक र योगाचारका धारणाहरू एक अर्कादेखि विपरीत पर्दछन् जस्तै माध्यमिक वा शून्यवाद अनुसार संसार असत्य, निर्वाण असत्य तथा योगाचार वा विज्ञानवादअनुसार संसार असत्य, निर्वाण सत्य[२]। महायानको विषयमा बलदेव उपाध्यायले यतिसम्म भनेका छन्, "महासाङ्घिक (द्वितीय बौद्ध सङ्गीति) हरूले जुन सिद्धान्तलाई लिएर आफ्नो सम्प्रदाय स्थविरवादीहरूदेखि अलग गरे त्यही सिद्धान्तहरूको अन्तिम विकास महायान सम्प्रदाय भयो।"[३]

महायानबारे धेरै ग्रन्थहरू लेखिए। यिनीहरूमध्ये एउटाको एउटा देशमा बढी श्रद्धा र मान्यता गरिन्छ भने अर्को देशमा अर्कै ग्रन्थको पनि गरिन्छ। अथवा एउटै देशमा पनि भिन्न-भिन्न सम्प्रदायबाट भिन्नाभिन्नै ग्रन्थ वा ग्रन्थहरूको बढी आदर वा मान्यता गरिएको पनि पाइन्छ। उदाहरणार्थ, 'सद्धर्मपुण्डरीक'–को चीनको होक्केशु आदि केही सम्प्रदायहरूमा र जापानको

१. बलदेव उपाध्याय– बौद्ध दर्शन, सं. २००३, पृ. १३८, पृ. २६५

२. ऐ. ऐ. पृ. १९३

३. ऐ. ऐ., पृ. ११७



तेनदइ सम्प्रदायमा तथा 'गण्डव्यूह सूत्र'– को जापानकै केगन सम्प्रदायमा विशेष मान्यता प्राप्त छ। महायान सूत्रअन्तर्गत चीनमा प्रज्ञापारमिता, रत्नकूट, वैपुल्य, अवतंसक र निर्वाणसूत्रहरू र तिब्बतको तन्जुरमा प्रज्ञापारमिता, रत्नकूट, वैपुल्य, सूत्र (प्रकीर्ण) र निर्वाण सूत्रहरू लिइन्छन्[१]।

महायानका निर्णीत सिद्धान्तहरू के कस्ता हुन् र अरू देशहरूमा यिनको अनुसरण कसरी हुन्छ भन्नेतिर नलागी यहाँ नेपालमा यसको प्रारम्भ कसरी र कहिले भयो भन्ने प्रसङ्गमै सीमित होऔं।

यस प्रसङ्गको विवेचना गर्न दुई पक्षतिर ध्यान दिनु उपयुक्त देखिन्छ– एउटा चोखै प्राज्ञिक, ऐतिहासिक तथ्यहरूको र अर्को परम्परागत धार्मिक विश्वासको। दोस्रो पक्ष अवैज्ञानिक भए पनि यहाँका बौद्ध जन–मानसमा गहिरोसँग जरो गाडिसकेको धारणा भएकोले यसको एकदम चर्चै नगर्नु पनि वस्तुस्थितिलाई प्रतिविम्बित गर्न नखोज्नु हुनेछ। तसर्थ इतिहासको यथार्थ पक्षतिर लाग्नुअगाडि महायानी परम्परागत जन–विश्वासको केही चर्चा गरौं।

खुद्द त्रिपिटककै खुद्दक निकाय बुद्धवंशमा ऐतिहासिक गौतम बुद्धबाहेक उनीभन्दा अगाडि विभिन्न युगमा भएका भनिएका अरू २४ बुद्धहरूको नाउँ दिइएका छन्। यस्तै दीर्घ निकायले पछि हुने बुद्ध मैत्रेयको नाउँ दिएको छ। लङ्काका दीपवंश, महावंशले पनि यी २४ मा अरू तीन जना बुद्धका नाउँ थपेका छन्।

यी बुद्धहरूमध्ये अन्तिम ऐतिहासिक गौतम बुद्ध र उनीभन्दा अगाडिका विपश्वी, शिखी आदि छ जना बुद्धहरूको नाउँ नेपाली बौद्धहरूमा विशेषरूपले चर्चित छन्। यिनीहरूमध्ये क्रकुच्छन्द, कनकमुनि बुद्धको कल्पना त सम्राट् अशोककै समयमा भइसकेको प्रमाण उनले न स्थापना गरेको निग्लिहवा स्तम्भले दिइरहेकै छ।

१. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, १९५८ इ., पृ. १०६

यहाँ उपरोक्त २४ बुद्धबारेको निम्नलिखित धारणाले पनि बेसरी जोड पक्रेको छ ।

परापूर्व कालमा पनि उपर्युक्त बुद्धहरू युग-युगमा अवतरित भइसकेका थिए र बौद्ध धर्मको प्रचार गरेका थिए । ऐतिहासिक गौतम बुद्ध तिनीहरूमध्ये पछिल्ला थिए तथा उनले दिएको उपदेश त्यही परम्परागत पद्धति नै थियो । प्रत्येक बुद्धको निर्वाणपछि उनको धर्म केही समयको लागि चल्दछ, बिस्तार-बिस्तारै यसको ह्रास हुन्छ र आखिरमा लोप हुन्छ । अनि संसारमा हिंसा, अधर्म नै व्याप्त भइरहन्छ । कालान्तरमा अर्को नयाँ बुद्धको प्रादुर्भाव हुन्छ र उनले हराएर गएको आफ्नो धर्मको पुनः सस्थापन गर्दछ । यो क्रम अटूटरूपले चल्दछ । यही क्रमअनुसार गौतम बुद्ध पच्चीसौं थिए । बौद्ध धर्म कालान्तरमा विलाएपछि संसारमा अवतरित हुन हाल तुषित भुवनमा प्रतीक्षामा रहेको मैत्रेय बुद्धले जन्म लिनेछ र यस धर्मको फेरि प्रचार गर्नेछ ।

स्थविरवादअनुसार ऐतिहासिक गौतम बुद्ध बौद्ध धर्मका अधिष्ठाता एवं असाधारण बुद्धि भएका मानिस मात्र हुन् । तर नेपालमा महायानीहरूले उनलाई प्राणीहरूको मुक्तिको लागि सदैव तल्लीन महाकरुणामय अलौकिक देवताको रूपमा आदर गर्छन् । बुद्धको सम्बन्धमा विश्वास गरिएको यही अलौकिकतालाई उनको ऐतिहासिकतालाई भन्दा बढ्ता महत्त्व दिइएको पाइन्छ । यही धारणाअन्तर्गत यिनीहरू शील, समाधि, प्रज्ञातिरभन्दा भक्ति, श्रद्धा, व्रत, अर्चनातिर बढी झुकेका देखिन्छन् ।

इत्यादि पारम्परिक धारणाहरूको साथसाथै उपत्यकाको सुप्रसिद्ध स्वयम्भू चैत्यको माहात्म्य लेखिएको 'स्वयम्भू-पुराण' शीर्षक ग्रन्थमा अतीतका विभिन्न युगहरूमा विपश्वी, शिखी आदि ६ जना बुद्ध र ऐतिहासिक गौतम बुद्ध उपत्यकामा आए भन्नेबारे निम्न आशयको विवरण दिइएको छः–



आदि कालदेखि नागवास ह्रद वा नागह्रद नाउँ भइरहेको यस उपत्यकामा बन्धुमतीबाट सत्य युगमा आएका विपश्वी बुद्धले जातमात्रोच्चो (लोक बोलीमा 'जामाचो' कहिने) मा तपस्या गरे । आदि बुद्धको आविर्भाव गर्न त्यस दहमा उनले कमलको कन्द अर्थात् एउटा गानु रोपे त्यस वेला बिपश्वी बुद्धले के भविष्यवाणी गरेका थिए भने त्यस बीउबाट उम्रने कमलमा स्वयम्भू–ज्योति निस्कनेछ । त्यसपछि नागवास ह्रद आवाद हुनेछ । तदनुसार त्यस बीजबाट पलाएको कमलको बोटमा फुलेको फूलमा स्वयम्भू–ज्योति प्रकट भयो । कमलको गानु रोपेको दिन चैत्र पूर्णिमा र कमलको फूल फुलेको दिन त्यसको छ महीनापछिको आश्विन पूर्णिमा हो । स्वयम्भू–ज्योति प्रादुर्भाव भएको दिन हुनाले यस आश्विन पूर्णिमाको दिनलाई स्वयम्भूको जयन्तीको रूपमा पूजाआजा गरी मनाउने चलन आजसम्म चलिआएकै छ । स्वयम्भू ज्योति प्रकट भएको आज्ञा पाएर अरुणपुरबाट आएका शिखी बुद्धले स्वयम्भू ज्योतिको दर्शन गरे । स्वयम्भू–ज्योति प्रकट भएको छ महीनापछि अर्थात् मेष संक्रान्तिको दिन शिखी बुद्ध त्यही ज्योतिमा लीन भए । आफू लीन हुनुभन्दा अगाडि उनले आफ्ना शिष्यहरूलाई यसो भनेका थिए, " यो स्वयम्भू स्थल पछि मनोहर थलो बन्नेछ । चारैतिरबाट मानिसहरू बस्न आउने छन् एवं भक्त-जन र यात्रुहरूको यहाँ ओइरो लाग्नेछ ।" यसपछि त्रेता युगमा अनुपम नगरबाट आएर विश्वभू बुद्ध फुलोच्चो शिखरमा तपस्या बसे । उनले यस्तो भविष्यवाणी गरेका थिए, "यस दहमा प्रज्ञास्वरूप गुह्येश्वरीको प्रादुर्भाव हुनेछ ........बोधिसत्त्व एक जना आएर यहाँको पानी निकाल्ने छन्... ...अनि यो ठाउँ धेरै जातिहरूको वासस्थान र तीर्थस्थल हुनेछ ।" तदनुसार पञ्चशीर्ष पर्वतबाट मञ्जुश्री आए । उनले यस ठाउँको पानी बाहिर पठाएर आवाद गर्ने अठोट गरे ।

उनले आफ्नी स्त्री वा शक्ति केशनी (वरदा) लाई फूलोच्चो

चुचुरोमा र अर्को वा स्त्री शक्ति उपकेशनीलाई ध्यानच्चो चुचुरोमा बसाले । मञ्जुश्री कोटुवाल पुगेर कोटयाल पर्वत काटे । चोभारको डाँडो फोडेर 'ह्रसिकाय' भन्ने खाँद बनाए । त्यसपछि गुह्येश्वरीको वन छेदन गरे । गुह्येश्वरीपछि गोकर्णको डाँडोमा पनि छेडी काटेर खाँद पारे । यसरी तीन चार ठाउँमा छेडो काटेपछि जलमय नाग दहको पानी बाहिर बगेर गयो ।

यही घटनाको विवरण एउटा वंशावली[1]मा पनि यस्तो लेखिएको छ:

"जलमय भएको त्यस ह्रदमा गुप्त भइरहेका त्यस स्वयम्भू-लाई प्रकाश पार्न दक्षिणतिरको पर्वत काटे । निकासा खुलाई जल घटाउन लाग्दा त्यहाँ रहेका सब नागहरू भाग्न थाले, त्यसमध्ये कर्कोटकनामक नागलाई यस क्षेत्रको धनद्रव्य आदिको तिमी स्वामी भयौ भनी उनलाई यहीं राखे । ज्योतिस्वरूप स्वयम्भूको पत्ता लगाउन खोजी गर्दा पद्मबीज परेको ठाउँबाट जल बराबर आएको देखी जल–बन्धन गरे । त्यस ठाउँमा गुह्येश्वरी देवीको स्थान देखेर दर्शन गरी त्यस पद्मनाललाई त्यहाँबाट अलिपर लगी त्यस पर्वतलाई पद्मगिरि भन्ने नाम प्रसिद्ध गरे । त्यही पर्वतमा पद्मभाथि रहेका ज्योतिस्वरूप स्वयम्भूनाथको प्रकाश गराए । त्यसपछि त्यस पर्वतदेखि गुह्येश्वरीसम्म आफ्ना नाउँले मञ्जुपतन नाउँ गरेको शहर बसाए । आफ्ना शिष्य वर्गलाई बुद्ध-दीक्षा र तन्त्र-मार्गहरूको उपदेश गरी गृहस्थ धर्ममा रहन खोज्नेलाई सोही धर्मको उपदेश गरी त्यस धर्मको इच्छा नगर्नेलाई विहार बनाई विहारमा राखी धर्माकरलाई यस ठाउँको राजा तुल्याई आफू महाचीनतर्फ फर्के ।"

मञ्जुश्रीले कार्तिक पूर्णिमाको दिन स्वयम्भूको र मार्ग कृष्ण नवमीको दिन गुह्येश्वरीको दर्शन गरे । पछि सात सय चेलाहरूसित

१. केशरपुस्तकालय वंशावली ।



क्षेमावतीबाट आएका क्रकुच्छन्द बुद्धले आफ्ना अनुयायीहरूको आफ्नो वाक्द्वारा वाङमती वा वाग्मती नदीको प्रादुर्भाव पनि गरे । द्वापर युगको अन्ततिर शोभावतीबाट कनकमुनि बुद्ध र काशीबाट काश्यप बुद्ध यहाँ आए । स्वयं शाक्यमुनि बुद्ध भगवान् पनि स्वयम्भू-डाँडोमा आएर पुच्छाग्र चैत्यमा धर्म-देशना गरेको, चुन्दा नाम गरेकी यक्षिणीलाई प्रव्रजित गरेको तथा साथमा ल्याएका १३५० शिष्यहरूमध्ये धेरैजसोलाई यहीं छाडेर गएको आदि कुराहरू पनि स्वयम्भू–पुराणमा वर्णित छन्[1] ।

यसरी स्वयम्भू–पुराणमा दिइएअनुसार छ जना अघिल्ला भनिएका बुद्ध उपत्यकामा आएको, पञ्चशीर्ष (चीन) बाट आएका बोधिसत्त्व मञ्जुश्रीले यहाँ महायानी बौद्ध धर्मको प्रारम्भ गरेको, गौतम बुद्ध उपत्यकामा आएर धर्म देशना गरेको आदि कुराको धारणा यहाँका बौद्धहरूमा छ । यस्तो धारणाको आधार भने, वंशावली, पुराण, किंवदन्ती, परम्परागत विश्वासबाहेक कुनै वस्तुगत ऐतिहासिक तथ्य देखिन्न ।

स्वयम्भू–पुराणमा पनि लङ्काको महावंशमा जस्तै ऐतिहासिक घटनाहरूको चर्चा मनग्गे नभएको होइन । स्वयम्भू-पुराण र महावंशमा विवरणको मात्र होइन लेखाइको तरीकाको पनि सादृश्य पाइन्छ । महावंशमा भगवान् बुद्ध एक पल्ट मात्र होइन तीन पल्ट तथा अगाडिका भनिएका बुद्धहरूमध्ये क्रकुच्छन्द, कनक-मुनि र काश्यप पनि आ-आफ्ना समयमा लङ्का पुगेका कुरा लेखिएको छ[2] । फेरि महावंशमा लङ्का द्वीपको नाउँ भिन्नभिन्न युगमा ओज द्वीप, वर द्वीप, मण्ड द्वीप आदि रहेजस्तै स्वयम्भू–पुराणमा उपत्यकाका नाउँ सत्यवती, तपोवन, मुक्तिसोपान, नेपाल रहेको भनिएको छ । महावंशमा गरिएको हारिती यक्षिणीको चर्चा

१. यसको उल्लेख पृ. २१ मा पनि भइसकेको छ ।

२. महावंश, परिच्छेद १५ ।

स्वयम्भू-पुराणले पनि गरेको छ । अनि स्वयम्भू-डाँडोलाई वज्रकूट भनेझैं लङ्कालाई समन्तकूट, देवकूट, सुमनकूट, शुभ्रकूट आदि भनिएको छ । इसवी पूर्व पाँचौं शताब्दीदेखि इसवीको चौथो शताब्दीसम्ममा लेखिएको महावंश र यहाँको स्वयम्भू-पुराणमा पाइएको सादृश्य विचारणीय छ । जहाँसम्म गौतम बुद्ध यहाँ उपत्यकामा आएको वा लङ्का गएको भन्ने कुरा छ त्यो इतिहास सिद्ध भएको छैन ।

स्वयम्भू-पुराण पुराणै हो, इतिहास होइन । तसर्थ यसमा वर्णित मञ्जुश्री बोधिसत्त्वद्वारा यहाँ महायान बौद्ध धर्मको श्रीगणेश भएको भन्ने प्रसङ्ग धार्मिक विश्वासको हो, इतिहासको मान्न सकिन्न । बोधिसत्त्व मञ्जुश्री वा ऐतिहासिक गौतम बुद्ध काठमाडौं उपत्यकामा आएको भन्ने कुरा ऐतिहासिक रूपले प्रमाणित छैन ।

फेरि स्वयम्भू-पुराणअनुसार काश्यप बुद्ध र गौतम बुद्ध (इ. पू. ५५६-४८३) भन्दा धेरै अगाडि त्रेता युगमा उपत्यकामा आए भनिएका मञ्जुश्री बोधिसत्त्व इसवी द्वितीय-तृतीय शताब्दीमा[१] लेखिएको 'मञ्जुश्री मूलकल्प'- मा गौतम बुद्धको चेलाको रूपमा देखा पर्छन् ।

यसरी महायानी ग्रन्थहरूमा गरिएको मञ्जुश्री बोधिसत्त्वको प्रसङ्ग बिलकुल भरपर्दो छैन । पहिलो त, गौतम बुद्धले बोधिज्ञान प्राप्त गर्नुभन्दा अगाडि नै बौद्ध धर्मको प्रादुर्भाव भइसकेको भनेर मान्नु वास्तविकताको बिलकुल विपरीत हुन्छ । दोस्रो, मञ्जुश्री बोधिसत्त्वको सिर्जना महायानी विचारधाराअन्तर्गत ध्यानी बुद्ध, बोधिसत्त्व आदिको कल्पनाको साथै वा पछि भएको हुनुपर्दछ । राहुल सांकृत्यायनअनुसार बोधिसत्त्वहरूको कल्पना इसवी प्रथम शताब्दीदेखि चौथो शताब्दीसम्मको अवधिमा मात्र भएको

१. बलदेव उपाध्याय- बौद्ध दर्शन, पृ. ४२७, ४३०



थियो[१] । तसर्थ त्रेता युगमा मञ्जुश्री बोधिसत्त्वद्वारा बौद्ध धर्म प्रचार भएको मान्नु धार्मिक भावना मात्र हुन सक्छ, ऐतिहासिकता कदापि हुन सक्तैन ।

यसो हुँदाहुँदै पनि नेपालमा महायान सम्प्रदायले कहिले प्रवेश गऱ्यो भन्ने प्रश्न 'मञ्जुश्री' नाउँसित सम्बद्ध भएको देखिन्छ । 'मञ्जुश्री' भन्ने बित्तिकै नेपालमा ती परम्परागत बोधिसत्त्व सम्झिइन्छ जसले त्रेता युगमा यहाँ आएर तत्कालीन नागह्रदलाई बसोबास गर्न लायक उपत्यका बनायो ।

तर यहाँनिर एउटा अतीव महत्त्वपूर्ण कुरा के सम्झनु पर्दछ भने मञ्जुश्री नाउँका एक जना ऐतिहासिक व्यक्ति पनि थिए जसले महायानका एक प्राचीन ग्रन्थ 'सद्धर्मपुण्डरीक' लेखेका थिए । यी लेखक मञ्जुश्री इसवी पूर्व प्रथम शताब्दीको अन्तातिर र इसवी प्रथम शताब्दीको प्रारम्भमा जीवित रहेका भिक्षु थिए । अब प्रश्न आउँछ- नेपालमा आए भनिएका मञ्जुश्री कुन थिए त- बोधिसत्त्व मञ्जुश्री कि लेखक भिक्षु मञ्जुश्री ? यो पनि किटान गर्न सकिन्न कि यी दुई मञ्जुश्री दुई भिन्नै वा एकै व्यक्ति थिए ।

जे होस् यस विषयमा रिस डाभिड्स्को निम्नलिखित टिप्पणी पनि विचारणीय हुन्छ:

[२]"यो असम्भव छैन कि बोधिसत्त्व मञ्जुश्रीको नाउँ ती भारतीय भिक्षुको नाउँबाट लिइएको हुन सक्तछ जसले परम्परानुसार नेपालमा बौद्ध धर्मको र यसको साथै सभ्यताको नेपालमा प्रवेश गराए । 'मञ्जु'-को माने मोह पार्ने, राम्रो र 'सौभाग्य, समृद्धि, गौरव'- को अर्थ-बोधक तथा 'श्री' देउता र मानिसका नाउँमा लाग्ने साझा शब्द भएकोले कम-से-कम यस नाउँको अघिल्लो भाग

१. पुरातत्त्व निबन्धावली, १९५८, पृ. १११

२. T. W. Rhys Davids- Buddhism, London, 1912, पृ. २०२ बाट ।

देउताको भन्दा बढ्ता मानिसकै देखिन्छ । धर्म-प्रचारक मञ्जुश्री बुद्ध–परिनिर्वाणको करीब चार शय पचास वर्ष पछि जीवित रहेका देखिन्छन् तथा उनो त्यस विचारधाराका संस्थापक मानिएका छन् जुन अन्तमा गएर महायान बन्यो । यो बिलकुल हुन सक्ने कुरा हो कि उनको नाउँ त्यो रहस्यमय प्रज्ञाको रूपमा संरक्षित गरियो जसबाट संसारको सृष्टि र सञ्चालन भयो । बुनौंफले कम-से-कम यो कुरा छर्लङ्ग देखाएका छन् कि सबै सम्प्रदायको नेपाली बौद्ध-हरूका किताबहरूमा आध्यात्मिक सत्त्व र नेपाललाई सभ्य गराउने र शिक्षादीक्षा दिने पौराणिक व्यक्तिको विषयमा ठूलो अन्योल परेको अवस्था छ ।"

रिस डाभिड्स्को उपर्युक्त उद्धरणबाट के सङ्केत मिल्दछ भने इसवी पूर्व प्रथम शताब्दीको अन्त र इसवी प्रथम शताब्दीको शुरूमा मञ्जुश्री भन्ने एक जना भिक्षु भारतमा बस्दथे । 'सद्धर्मपुण्डरीक' ग्रन्थका लेखक उक्त मञ्जुश्रीका सिद्धान्तहरू नै पछि महायानमा विकसित भयो । इसवीको प्रारम्भमा नेपाल आएर यहाँ महायानी सम्प्रदायको बौद्ध धर्म पहिलो पल्ट प्रचार गर्ने पनि यी मञ्जुश्री नै हुन सक्तछ । यो बिलकुल सम्भव छ कि यी साँच्चैको व्यक्ति मञ्जुश्री नै महायानका प्रारम्भिक प्रचारक भएको नाताले पछि बोधिसत्त्व मञ्जुश्री बनाइए ।

यस्तै ऐतिहासिक व्यक्तिलाई अलौकिक बुद्ध बनाइएको दृष्टान्त योगाचार अर्थात् विज्ञानवादका संस्थापक मैत्रेय नाथको सम्बन्धमा पनि प्रस्तुत गर्न सकिन्छ । बीसौं शताब्दीको प्रारम्भिक दशकहरूसम्म पनि यस दर्शनका संस्थापक असंग (तेस्रो–चौथो शताब्दी) मानिएका थिए र तिनले यस ज्ञानको आभास पृथ्वीमा अवतरण गर्ने प्रतीक्षामा स्वर्गमा रहेका मैत्रेय बोधिसत्त्व (भावी बुद्ध) बाट प्राप्त गरेका थिए भन्ने कथा प्रचलित थियो । तर पछि के पता लाग्यो भने विज्ञानवादका संस्थापक मैत्रेय नाथ भन्ने



विज्ञानवादका संस्थापक मैत्रेय नाथ भन्ने वास्तविक व्यक्ति थिए र तिनबाट असंगले विज्ञानवादी ज्ञान सिकेका थिए । यस घटनाको विवरण बलदेव उपाध्यायले आफ्नो बौद्ध दर्शनमा यसरी दिएका छन्:–

"'अहिलेसम्म विद्वान्हरूको यही धारणा रहेको छ कि आर्य असंग नै विज्ञानवादका संस्थापक थिए । परन्तु आजकालको नवीन अनुसन्धानले यो धारणालाई भ्रान्त प्रमाणित गरिदिएको छ । बौद्धहरूको परम्पराबाट पत्ता लाग्दछ कि तुषित स्वर्गमा रहने भावी बुद्ध मैत्रेयको कृपाले असंगलाई अनेक ग्रन्थको स्फूर्ति प्राप्त भयो । यो परम्परा ऐतिहासिक तथ्यको बीज प्रतीत हुन्छ । मैत्रेय वा मैत्रेयनाथ स्वयं ऐतिहासिक व्यक्ति थिए जसले योगाचारको स्थापना गरे तथा असंगलाई यस मतको दीक्षा दिए ।"

नेपालमा बोधिसत्त्व मञ्जुश्रीबाट महायानी बौद्ध धर्मको प्रचार गरियो भनिने जस्तै माध्यमिक अर्थात् शून्यवादका एकजना गुरु शान्तिदेव (सातौं शताब्दी) ले बोधिसत्त्व मञ्जुश्रीको अनुकम्पा-बाट दीक्षा पाएको किंवदन्ती[२] पनि प्रचलित छ ।

जे, होस्, रिस डाभिड्स्को उपर्युक्त उद्धरणबाट नेपालमा महायान सम्प्रदायको प्रवेश इसवीको प्रथम शताब्दीमा भएको सम्भावना देखिन्छ तथा यो भन्न मिल्दैन कि यहाँ यसको श्रीगणेश गर्ने भिक्षु मञ्जुश्री होइनन् । यही इसवी पूर्व प्रथम शताब्दीदेखि इसवीको चौथो शताब्दीको अवधिभित्र नै अलौकिक बुद्धका सहायक कयौं अवलोकितेश्वर, मञ्जुश्री आदि अलौकिक बोधिसत्त्वहरूको कल्पना गरिएको थियो[३] । 'सद्धर्मपुण्डरीक'– मा नै वैरोचन बुद्ध, अमिताभ बुद्ध र अवलोकितेश्वर बोधिसत्त्वको सिर्जना भइसकेको

---

१. बलदेव उपाध्याय– बौद्ध दर्शन, सं. २००३, पृ. २६५

२. बलदेव उपाध्याय– बौद्ध दर्शन, सं. २००३, पृ. ३२१

३. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, इ. १९५८, पृ. १११

हामी पाउँछौं[१]। 'मञ्जुश्रीमूलकल्प' जस्ता महायानी ग्रन्थको रचना पनि इसवीको द्वितीय–तृतीय शताब्दीमा नै भएको थियो[२]। तसर्थ असंगका दीक्षागुरु मैत्रेय नाथलाई मान्छेबाट मैत्रेय बोधिसत्त्व बनाएजस्तै भिक्षु मञ्जुश्रीलाई पनि बोधिसत्त्व मञ्जुश्री बनाइदिएको भान हुन्छ।

फेरि निम्नलिखित नेपाल र चीनका ऐतिहासिक तथ्यहरू- बाट पनि मञ्जुश्री बोधिसत्त्वको नेपाल आगमनसम्बन्धी गलत धारणाबारे आधिकारिक प्रकाश पर्दछ।

अंशुवर्माका छोरा उदयदेव इ. ६२१ ताका[३] राजा भएको केही दिनपछि नै पदच्युत भएर ल्हासा गएका थिए। नेपालमै प्राप्त अभिलेखअनुसार उदयदेवका छोरा नरेन्द्रदेव ल्हासाबाट नेपाल आएर नयाँ संवत्को ६७ सालमा यहाँ पैतृक राजगद्दीमा बसिसकेका थिए। यिनकै राज्यकालमा इसवी ६४६ देखि ६६० को बीचमा चिनिया दूतहरू पटक पटक नेपालै आएका वा भारतमा जान यहाँ आइपुगेका थिए। यसरी आएका दूतहरूमध्ये एक जनाले राजा नरेन्द्रदेवलाई मञ्जुश्री बोधिसत्त्वको मूर्ति उपहार दिएका थिए। यस्तै चीनको औ–ताइ–चन (पञ्चशीर्ष) भनिएको ठाउँबाटै नेपालमा आएका यात्रुहरूमध्ये एक जनाले पनि यहाँको एउटा विहारलाई

१. रिस डाभिड्सले Buddhism, 1912, पृ. २०४-५ मा उद्धृत गरे अनुसार Bournouf को Le Lotus de la bonne Loi, 1852, पृ. ११३

२. बलदेव उपाध्याय– बौद्ध दर्शन, पृ. ४२७

३. अंशुवर्माको मृत्यु नयाँ संवत् (अर्थात् मानदेव संवत्को) ४५ साल (जुन नयराज पन्त– पूर्णिमा सं. ३८ अनुसार वि सं. ६३३ अर्थात् इ. ५७६ सालमा शुरु गरिएको थियो) मा अर्थात् इ. ६२१ (५७६+४५) मा भएको थियो। थाङ वृत्तान्तअनुसार नरेन्द्रदेव नेपालमा आएर राजा भएको इ. ६४३ सालमा हो। नेपालको अभिलेखबाट चाहिं उनी नयाँ संवत्को ६७ सालमा राजा भइसकेको प्रमाणित छ (५७६+६७=६४३)



मञ्जुश्रीको मूर्ति दिएका थिए। यी दुई नै नेपालमा ल्याइएका मञ्जुश्री बोधिसत्त्वका पहिला मूर्तिहरू थिए। यी चिनिया यात्रीहरू कतिले त यहीं बसोबास गरे[१]।

यहाँ यो कुरा पनि सम्झनु पर्दछ कि चीनमा इसवीको दोस्रो शताब्दीमा अभिताभ बुद्ध आदिको आम प्रचार भइसकेको अर्थात् महायान मतको बोलबाला भइसकेको थियो[२]। बौद्ध मूर्तिहरू निर्माण गर्ने चलन व्यापक र लोकप्रिय भएपछि बोधिसत्त्व मञ्जुश्री (जो महायानका प्रारम्भिक गुरु ऐतिहासिक भिक्षु मञ्जुश्री नै हुनु धेरै सम्भावना छ) का पनि मूर्तिहरू बनाइए। अनि यथासमयमा चीनको औ–ताइ–चुन (पञ्चशीर्ष) पर्वतमा मञ्जुश्रीको मूर्ति स्थापित गरियो। यो पर्वत पेकिङ (हाल बेइजिङ भनिएको) को दक्षिण–पश्चिममा पर्दछ।

अनि चीनबाट आएका यात्रुहरूले पञ्चशीर्षस्थित बोधिसत्त्व मञ्जुश्रीको मूर्ति लिएर नेपाल आएको र यहीं बसोबास गरेको वास्तविक घटनाबाट,—बोधिसत्त्व मञ्जुश्रीको महिमा बढाउन र ऊप्रति श्रद्धाभक्ति दर्शाउन होला,— ऊ (बोधिसत्त्व मञ्जुश्री) नै केही चिनियाहरूको साथमा नेपालमा आएको र ती आफ्ना अनुयायीहरूलाई यहीं छाडेर गएको घतलाग्दो कथा विकसित भयो। यसरी मूर्ति ल्याएको तथ्य कालान्तरमा बोधिसत्त्व नै आएको भन्ने गलत धारणामा बदलनु र त्यही धारणा दिन पर दिन दृढ हुँदै आउनु असम्भव होइन।

सिल्वाँ लेभीले पनि नेपाल उपत्यकामा महायान भित्र्याउने निःसंदेह भारतबाट आएका धार्मिक शिष्टमण्डलहरू नै थिए भनेका

१. Sylvain Levi– Le Nepal, Vol. I; Ancient Nepal (प्राचीन नेपाल) संख्या ५३–५६, अगष्ट १९७९–८०, अंग्रेजी अंश, पृ. १२

२. Shao Chang Lee– Popular Buddhism in China, १९३८, पृ. ३–४

छन्[1]। यदि मञ्जुश्री चीनकै भए उसलाई नै आफ्नो संरक्षक देवता मान्ने ह्युयन त्साङले उसलाई चीनको बोधिसत्त्व भनेर गौरवपूर्वक दावी गर्न अवश्य चुक्ने थिएनन् होला, तर एकदम सत्यवादी र जस्ताको तस्तै बोल्ने उनी जस्ताले कहीं त्यसो नभनेकोबाट पनि मञ्जुश्रीलाई चिनिया मूलको भन्न नमिल्ने भन्ने आशयको तर्क पनि सिल्भाँ लेभीले गरेका छन्[2]।

१. Sylvain Levi - Le Nepal, Vol. I; प्राचीन नेपाल, सं. २९ पृ. ५२

२. उपर्युक्त कुराको साथै मञ्जुश्रीको विषयमा सिल्भाँ लेभीले निम्नलिखित विचार पनि व्यक्त गरेका छन्:—

"मञ्जुश्रीलाई क-कसैले ऐतिहासिक व्यक्ति भने त अरूले उनलाई लोकोत्तर माने ...... मञ्जुश्रीको बस्ने ठाउँ चीन हो भन्ने धारणा इत्सिङ (इ. ६७१-७३०)को समयपछि भएको देखिन्छ र त्यसपछि आठौं शताब्दीमा मात्र वज्रबोधि, अमोघवज्र, प्रज्ञा........ मञ्जुश्रीको दर्शन गर्न चीन पुगेका थिए .. ...मञ्जुश्रीको जन्म औ-ताइ-चनमा भएको भन्ने तिब्बती धारणाश्रित बुद्ध पनि धर्मप्रचारार्थ चीन पुगेका थिए भन्ने विश्वास गाँसिएको छ . ... उपर्युक्त कुरा जे भए पनि मञ्जुश्री चिनिया मानिनुभन्दा अगाडि जन्मले हिन्दू थिए। तारानाथका संस्कृत स्रोतहरूबाट के सङ्केत पाइन्छ भने मञ्जुश्री उडीसाका राजा चन्द्रगुप्तका समय ( ...... बुद्ध निर्वाणको २५० वर्ष वा ४५० वर्षपछि ... ...)मा प्रादुर्भाव भएका थिए ....... 'मञ्जुश्री परिनिर्वाण' ग्रन्थअनुसार उनले हिमालयमा धर्म-प्रचार गरेका थिए... ... सौत्रान्तिकहरूको भनाइअनुसार मञ्जुश्री एक साधुको रूपमा देखा परेका थिए, महायानको एउटा खास सम्प्रदाय प्रचार गरे तथा अष्टसाहस्रिक प्रज्ञा पारमिता ग्रन्थ छाडेर गएका थिए...... योगाचार्यहरू मञ्जुश्रीलाई अक्षोभ्य बुद्धका आध्यात्मिक पुत्र मान्दथे तथा उनका बोधिसत्त्व वज्रपाणि र पद्मपाणि अवलोकितेश्वर (अभिताभ बुद्धका बोधिसत्त्व) सँगै मञ्जुश्रीको गणना गर्दथे।"

[Le Nepal, Vol. 1; प्राचीन नेपाल, सं. ५३-५६, अंग्रेजी अंश, पृ. १३-१४]



हुन सक्छ रिस डाभिड्स्को कथनानुसार भिक्षु मञ्जुश्री नै इ. पू. प्रथम शताब्दीमा नेपाल आएर महायानको श्रीगणेश गरे तथा इ. सातौं शताब्दीमा चीनबाट मञ्जुश्रीको मूर्ति भित्र्याइएपछि त्यसैले ऐतिहासिक व्यक्ति मञ्जुश्रीको सम्पूर्ण ठाउँ लियो।

अब हामी नेपालकै वंशावली र अन्य ऐतिहासिक सामग्रीतिर लागौं।

वंशावलीहरूमा गोपालवंशीय अन्तिम राजा यज्ञगुप्तको राज्यकालमा यहाँ बौद्ध धर्मको प्रवेश भएको, राजा आफै बौद्ध बनेको तथा त्यही कारणबाट निःसन्तान भएर अर्को वंशका मानिसलाई उत्तराधिकारी बनाउनुपरेको आदि[1] कुरा लेखिएका छन्।

नेपालमा लिच्छवि राज्य स्थापना हुनुभन्दा केही पुस्ता अगाडि राज्य गरेका भनिएका राजा पशुप्रेक्ष वा पशुपुष्प) देवले 'ठाउँ-ठाउँमा २४ वटा बहाल बनाई बाँडाहरूलाई राखिदिए' भनेर पनि लेखिएको छ[2]। यिनकै पालामा महायानको प्रवेश भएको

१. "संसारमा बुद्धमार्गको बृद्धि भै आउँदा ई यक्षगुप्त राजाले बुद्धमार्गीसंग गरी बुद्ध मार्गमा रहनको इच्छा गऱ्या र बुद्धमार्गी भै .. ...स्वधर्म मार्ग छोड्दा . ...."

[राजभोगमाला वंशावली]

"राजा यक्षगुप्तले आफ्ना पालामा .. ...बुद्ध धर्म......बराबर बढ्दै आएका बौद्धमार्गीहरूको संगत गरे... .. आफ्ना पुर्खाहरूको धर्म छोडी .. बौद्ध धर्ममा लागेका हुनाले आफ्नो सन्तान नहुंदा ..... "

[केशरपुस्तकालय वंशावली]

२. यी राजा पशुप्रेक्षलाई काशीप्रसाद जायसवालले इ २६५ ताकाको भने पनि बाबुराम आचार्यले भूमिवर्माले नेपालमा लिच्छवि वंशको स्थापना इ. १०० ताका गरेका थिए भनेकोबाट यिन(भूमिवर्माका बाजे पशुप्रेक्ष)को राज्यकाल इ. ५० ताका पर्दछ[गोरखापत्र,२०१८-१२-२ मा बाबुराम आचार्यको 'प्राचीन नेपाल र त्यसको संस्कृति' शीर्षक लेख]।

राजा मानदेव प्रथमका सवत् ३८६ देखि ४२७ सालसम्मका प्राप्त

हो कि भन्ने सङ्केत पनि मिल्दछ ।

तर यहाँ महायान सम्प्रदाय चलिसकेको र राजा समेत बौद्ध धर्मका समर्थक बनिरहेको प्रमाण निर्णायक तवरले दिने भरपर्दो ऐतिहासिक सामग्री त लिच्छवि राजा जयदेव द्वितीयको सं. १५७ सालको पशुपति अभिलेख नै हो जसमा यसो कुँदिएको छ:

"श्रीमान्बभूव वृषदेव इति प्रतीतो राजोत्तमः सुगतशासनपक्षपाती"

यी राजा वृषदेवकै राज्यकालमा गौड देशबाट राजा प्रचण्डदेव यहाँ आएर शान्तिकर भिक्षु बनेको, स्वयम्भू-ज्योति छोपेर चैत्य बनाएको, गोदावरीमा पञ्चबुद्धहरूको मूर्ति स्थापित गरेको, त्यहीं बाँडा गाउँ भन्ने देश बनाई चैत्य स्थापना गरी[1] बाँडा आदि प्रजाहरूलाई बसालेको, चाबहिलमा धन दो चैत्यको निर्माण गरेको, बानेश्वरमा ठूलो विहार बनाएको आदि घटनाहरूको चर्चा पनि वंशावलीमा गरिएको छ ।

यी विवरणबाट पनि राजा वृषदेवको पालामा महायान निक्कै लोकप्रिय भइसकेको र महायानी कार्यकलाप खूब बढिसकेको

अभिलेखहरू इ. ४६३ देखि ५०४ का बराबरी हुन्छन् । मानदेवभन्दा तीन पुस्ता अगाडिका राजा वृषदेवको समय करीब इ. ३९०–४०० ताका हुन्छ । [बा. आचार्यअनुसार वृषदेवको राज्यकाल अन्दाजी इ. ३९० देखि ४१५ सम्म थियो; पूर्णिमा सं. ४७, पृ. ३]। वृषदेवभन्दा अगाडिका १२ जना राजाहरूको राज्यकालको मोटामोटी समय बाबुराम आचार्यले ३०० वर्ष हिसाब गरेका छन् ।[गोरखापत्र, २०१८-१२-२ मा प्रकाशित बा. आचार्य-को उपर्युक्त लेख]। यसरी ४१५ इसवीबाट ३०० घटाएपछि ती १२ जनाभन्दा अगाडिका राजा जयवर्माको राज्यकाल इ. ११५ ताका पर्दछ । जयवर्माका ठाउँ अगाडिका राजा भूमिवर्माको समय इ. १०० ताका पर्दछ ।

१. हेमराज शाक्य अनुसार उक्त चैत्य 'सुविमुक्त' चैत्य कहिन्छ ।



सङ्केत पाइन्छ ।[1]

यहाँ खूब प्रचलित जनश्रुती एउटा के पनि छ भने इसवी चौथो शताब्दीका भारतका घघडाम महायानी आचार्य वसुबन्धु बुढेसकाल (बलदेव उपाध्याय अनुसार इ. २८०–३६०) मा यहाँ आएर महायान मतको प्रचार गरेका थिए तथा उनको मृत्यु यहीं भएको थियो ।

राजा वृषदेवको राज्यकाल इ. ३६०–४१५ ताका महायान मत उपत्यकामा प्रभावशाली भइसकेको तथ्यसित यो किंवदन्तीले मेल खाएकै देखिन्छ । तर पनि यस्तो जन–धारणाको कुनै ऐतिहासिक आधार भेटिएको छैन ।

सारांश यही हुन्छ कि नेपालमा महायानको प्रवेश इसवीको प्रारम्भिक समयमा, रिस डाभिड्स्ले सुझाउ गरे अनुसार[2], भिक्षु मञ्जुश्रीद्वारा भएको हुन सक्छ ।

१ बाबुराम आचार्यको निम्नलिखित भनाइबाट पनि यस विषयमा केही प्रकाश पर्दछ:–

"शुङ्ग राजाले बौद्ध धर्मलाई खलबल्लाइदिएपछि फेरि संगठन हुँदा रूप बदलिएर महायान सम्प्रदाय खडा भयो । यस सम्प्रदायका पक्षपाती-हरूले पुराना सम्प्रदायलाई हीनयान नाम दिए । महायानका प्रचारक कनिष्क भए । यिनले यस सम्प्रदायलाई उत्तर भारत वर्षमा मात्र होइन, चीन र मंगोल देशमा पनि फैलाइदिए । यस सिलसिलामा नेपालका नेपारहरूमा पनि महायानको प्रचार भयो । महायानीहरूले बुद्धलाई मानिसमा नगनेर एक अलौकिक शक्तिका रूपमा खडा गरेका थिए । चैत्यहरूमा बुद्धका मूर्तिहरू स्थापना हुन थाले । सदाचारको ठाउँ बुद्धको पूजा प्रार्थनाले लियो । नेपालका लिच्छवि राजाहरू सनातन धर्म मान्दथे । एक जना वृषदेव बौद्ध धर्मका पक्षपाती थिए । यिनैका समयमा ...गुम विहार बन्यो ।"

[पूर्णिमा सं. ४७, पृ. ४ बाट]

२. हेर्नुस्. पृ. ८१ मा ।

तर नेपालको इतिहासबाट सिद्ध भएअनुसार इ. ४६३–५०४ ताका राज्य गरिरहने राजा मानदेव प्रथमका वराजू राजा वृषदेव (जसको राज्यकाल इसवीको चौथो शताब्दीको अन्ततिर पर्न आउँदछ)को समयमा महायान सम्प्रदाय यहाँ प्रभावकारी र लोकप्रिय बनिसकेको थियो यद्यपि योभन्दा ठीक कति समय अगाडि नै यसको प्रवेश भयो यकीन गर्ने आधार भेटिएको छैन ।



# महायानको विस्तारको साथसाथै अन्य सम्प्रदाय

महायानको स्वरूप नेपालमा तिब्बत, चीन, जापानमा जस्तै कतिपय पक्षमा आफ्नै ढङ्गले विकसित भएको पाइन्छ । यस सन्दर्भमा अगाडि भएर गएका भनिएका विपश्वी, शिखी आदि बुद्धहरू र ऐतिहासिक गौतम बुद्धको उपत्यका आगमन, मञ्जुश्री बोधिसत्वको चमत्कार अवलोकितेश्वर, लोकेश्वरहरूको कार्य-कलापसम्बन्धी कथा वा लोक–धारणाहरू उदाहरणको रूपमा लिन सकिन्छ ।

मानव बुद्ध मानिएका उपर्युक्त छ[१] जना बुद्धबाहेक पञ्च-बुद्ध कहिने पाँच जना लोकोत्तर ध्यानी बुद्धहरूको कल्पना पनि यहाँ महायानको एउटा प्रमुख अङ्ग बनेको छ । ललितविस्तरमा पञ्च-बुद्धको चर्चा नभेटिए पनि इसवीको प्रथम शताब्दीमा लेखिएको 'सद्धर्मपुण्डरीक'–मा पञ्च–बुद्धमध्ये वैरोचन, अमिताभ बुद्ध र बोधिसत्व अवलोकितेश्वरको नाउँ देखा परिसकेको थियो[२] । इसवी

१. विपश्वी, शिखी, विश्वभू, क्रकुच्छन्द, कनकमुनि र काश्यप जसको उल्लेख अघिल्लो परिच्छेद, पृ. ७६–७९ मा भइसकेको छ ।

२. T. W Rhys Davids– Buddhism, London, 1912.

चौथो शताब्दीमा यहाँ उपत्यकामा पञ्चबुद्धको संस्कृति लोकप्रिय बनिसकेको बुझिन्छ । यस सम्बन्धी सङ्केत राजा वृषदेवको राज्य-कालमा गोदावरीमा पञ्च–बुद्धको मूर्तिको स्थापना भएको भनेर वंशावलीमा[1] गरिएको उल्लेखबाट मिल्दछ ।

ध्यानी बुद्धहरूको साथै बोधिसत्त्वहरूले पनि संसारका प्राणीहरूको उद्धारको लागि महत्त्वपूर्ण भूमिका खेलिरहेको विश्वास नेपालका महायानीहरू गर्दछन् । बोधिसत्त्वको अर्थ बोधिज्ञान पाउन इच्छुक व्यक्ति हुन्छ । स्थविरवादअनुसार अर्हत्को स्थितिबाट साधकले अन्तिम लक्ष्य निर्वाण प्राप्त गर्दछ, त्यहीं उसको पर्यवसान हुन्छ । नेपालमा प्रचलित महायानी विचारधाराअनुसार महायानी साधक अर्हत्को अवस्थामा पुगेर पनि अर्थात् आफू निर्वाण-प्राप्तिको निम्ति पूर्णरूपेण सक्षम भए तापनि निर्वाण हुन चाहँदैन । संसारमा अरू असंख्य प्राणीहरूले दु:खकष्ट भोगिरहेको देख्दादेख्दै उसलाई आफू एक्लैको निर्वाणमा संतोष लाग्दैन । तसर्थ जब साधक असीम सहानुभूतिको भावनाले दु:खी प्राणीहरूको समेत उद्धार गर्ने दृढसङ्कल्प गर्दछ, त्यसो गर्न नसकेसम्म आफ्नै निर्वाणलाई पनि स्थगित राख्दछ र त्यही जगतोद्धार गर्ने कार्यकलापमा तल्लीन हुन्छ तब ऊ क्रियात्मक रूपले बोधिसत्त्व बन्दछ । बोधिसत्त्वले अरूको उद्धार गर्न सक्ने क्षमता प्राप्त गर्न बुद्धत्व प्राप्त गर्नुपर्दछ ।

"अर्हत् केवल शुष्क ज्ञानी हो जसले आफ्नो प्रज्ञाको बलले रागादि क्लेशहरूको प्रहाण गरिसकेको छ । परन्तु महायानको लक्ष्य बुद्धत्वको प्राप्ति हो ... बोधिसत्त्वको चर्चा महाकरुणा हो ।"

[बलदेव उपाध्याय– बौद्धदर्शन, पृ. १४३–४]

बोधिचित्त ग्रहण गरेपछि महायानी साधकले स्थविरवादका

१. उदाहरणार्थ, केशर पुस्तकालय वंशावली, राजभोगमाला वंशावली ।



दश[1] पारमितामध्ये षट्[2] पारमिताको अनुशीलन गर्नु साधनको मुख्य अङ्ग मानिएको छ । श्रावक यानको चार[3] भूमि जस्तै बोधिसत्त्वले दश[4] भूमि पार गर्नुपर्दछ भन्ने नेपालका महायानीहरू विश्वास गर्दछन् ।

अवलोकितेश्वर भन्नाले त्यस्तो बोधिसत्त्व हो जो तल संसारमा दु:ख पाइरहेका प्राणीहरूलाई अनुकम्पा राखेर उनीहरूलाई सम्भव भएसम्म सुख दिलाउन र उनीहरूको उद्धार गर्न स्वर्गबाट झरिरहन्छ । उसले आफ्नो लागि कुनै प्रतिफलको आशा नराखीकन प्राणीहरूलाई एकले अर्काको भलो गर्ने मानव–कल्याणकारी दर्शनले प्रेरित गरिरहन्छ ।

नेपालमा प्रचलित लोक–धारणाअनुसार प्रत्येक ध्यानी बुद्धको बोधिसत्त्वले आफ्नै एउटा ब्रह्माण्ड– एउटा भौतिक संसार सिर्जेको हुन्छ । हाम्रो यो संसार चाहिं अभिताभ ध्यानी बुद्धका बोधिसत्त्व अवलोकितेश्वरले सृष्टि गरिराखेको भनिन्छ । यसै कारणले नेपालका बौद्ध देवदेबीहरूको सूचीमा उसको स्थान अतीव महत्त्वपूर्ण सम्झिइन्छ ।

अवलोकितेश्वरका कुनै खास एउटा पक्ष वा गुणको प्रतिनिधित्व गर्ने तथा उनकै अंश मानिएको देउता लोकेश्वर कहिन्छ ।

यी ध्यानी बुद्धहरूको सम्बन्धमा नेपालमा एउटा विशेषता के पनि छ भने अगाडि भएका भनिएका क्रकुच्छन्द, कनकमुनि,

१. दश पारमिता:– दान, शील, नैष्क्रम्य, प्रज्ञा, वीर्य, क्षान्ति, सत्य, अधिष्ठान, मैत्री र उपेक्षा ।

२. षट् पारमिता:– दान, शील, क्षान्ति, वीर्य, ध्यान र प्रज्ञा ।

३. श्रावक यानका चार भूमि:– स्रोतापन्न, सकृदागामी, अनागामी र अर्हत् ।

४. महायानका दश भूमि:– मुदिता, बिमला, प्रभाकारी, अर्चिष्मती, सुदुर्जया, अभिमुक्ति, दुरङ्गमा, अचला, साधुमती र धर्ममती ।

काश्यप, ऐतिहासिक गौतम बुद्ध र भावी बुद्ध मैत्रेय– यी पाँचै जना पञ्चबुद्धबाटै प्रतिविम्बित वा निःसृत भएका मानिन्छन् । प्रत्येक ध्यानी बुद्धसित एक एक जना बोधिसत्त्व पनि संलग्न गरिएको छ । ध्यानी बुद्धसम्बन्धी उपर्युक्त कुरालाई तालिकामा यस प्रकार दिन सकिन्छ:–

| | ध्यानी बुद्ध | मानव रूप | बोधिसत्त्व |
|---|---|---|---|
| १. | वैरोचन | ककुच्छन्द | समन्तभद्र |
| २. | अक्षोभ्य | कनकमुनि | वज्रपाणि |
| ३. | रत्नसम्भव | काश्यप | रत्नपाणि |
| ४. | अभिताभ | गौतम (ऐतिहासिक) | पद्मपाणि वा अवलोकितेश्वर |
| ५. | अमोघसिद्धि | मैत्रेय (भावी) | विश्वपाणि |

यी पाँचमध्ये चौथो समूहका अभिताभ बुद्ध, तिनका मानव रूप ऐतिहासिक गौतम बुद्ध र बोधिसत्त्व अवलोकितेश्वर नेपालमा विशेषरूपले लोकप्रिय बौद्ध देउता हुन् र तिनीहरूको पूजा भक्ति अरूको तुलनामा बढी गरिएको पाइन्छ ।

वंशावलीहरूमा राजा वृषदेवको राज्यकाल (इ. ३९०–४१५) अन्दाजी) मा गोदावरीमा पञ्चबुद्धका मूर्तिहरू राखिए भनेर लेखिए-बाट[1] पञ्चबुद्धका मूर्तिहरूसहित चैत्य निर्माण गर्ने चलन नेपालमा त्यसै वेलामा भइसकेको सङ्केत मिल्दछ ।

यहाँ महायानका असंख्य ग्रन्थहरूमध्ये नौ वटाको विशेष मान्यता भएको तथ्य पनि उल्लेखनीय छ नेपालमा 'नवधर्म' वा 'नवव्याकरण'– को नाउँले प्रख्यात यी नौ वटा ग्रन्थ निम्नलिखित हुन्:

१. उदाहरणार्थ, राजभोगमाला वंशावली, प्राचीन नेपाल, सं. ८, पृ. ६ ।



१. अष्टसाहस्रिका प्रज्ञापारमिता
२. सद्धर्मपुण्डरीक[1]
३. ललितविस्तर
४. लङ्कावतारसूत्र
५. सुवर्णप्रभास
६. गण्डव्यूह
७. समाधिराज
८. दशभूमिक
९. तथागतगुहयक

यिनीहरू इसवीको प्रथम शताब्दीदेखि पाँचौंसम्ममा लेखिएका महायानी ग्रन्थहरू हुन् । 'तथागतगुहयक' चाहिं वज्रयानी ग्रन्थको रूपमा पनि मानिन्छ । त्यसैले यो पछि लेखिएको बुझिन्छ । यी नव-व्याकरणका हस्तलिखित प्रतिहरू उहिले बहालबहालमा राखिएका थिए । सुन वा चाँदीको मसीमा लेखिएका प्रज्ञापारमिता-का हस्तलिखित प्रतिहरू कुनै न कुनै बहालमा आजसम्म पनि मौजूद छन् । आजकाल यिनीहरूको पूजामात्र भइरहेको पाइए तापनि त्यस जमानामा यिनीहरूको अध्ययन, मनन राम्रै हुँदो हो ।

१. सद्धर्मपुण्डरीक: इ. १८२२ देखि १८४३ सम्म नेपालमा बसेका बि. एच. हड्ज्सनले यहाँबाट हस्तलिखित पुस्तक, पुस्तिका, अभिलेखहरू गरी ४०० भन्दा बढी सामग्री लगेका थिए । यिनीहरूमध्य केही उनले कलकत्तास्थित रोयल एशियाटिक सोसायटीलाई र केही प्यारीसस्थित लाइब्रेरीहरूलाई पनि दिएका थिए । प्यारिसका लाइब्रेरीहरूमा हड्ज्सनले छाडेर गएकै हस्तलिखित सामग्रीहरूको आधारमा यूरोपका प्रथम संस्कृति विद्वान् युजेन बुर्नुफले पछि सन् १८८४ मा 'Introduction a' l' histoire due Buddhisme Indian' शीर्षक किताब लेखेका थिए । उनले हड्ज्सनले नै पठाएका ग्रन्थहरूमध्ये एउटा सद्धर्मपुण्डरीकको अनुवाद 'Le 'Lotus de la bonne Loi' (1852) शीर्षकअन्तर्गत गरेका थिए ।

'सुगतशासनपक्षपाती' राजा वृषदेवको राज्यकाल (इसवी ३६०–४१५ अन्दाजी)मा भएका महायानी कार्यकलापहरूको केही चर्चा माथि भइसकेको छ । यिनीपछि पनि महायानको बोलबाला बढेकै पाइन्छ । यिनका नाति राजा धर्मदेवले पनि 'धर्मदेव' चैत्य स्थापना गरेका थिए[1] । यिनका बाबु राजा शङ्करदेव (इ. ४१५–४४०, बाबुराम आचार्यअनुसार)को स्वयम्भूमा रहेको "...... (शङ्क) रदेवी नरेन्द्र ...... क्षेत्रञ्चाक्षयं दत्तं . . विहारे......" लेखिएको शिलालेखबाट उनले पनि स्वयम्भू चैत्यको लागि खेत गूठी राखिदिएको बुझिन्छ । धर्मदेवका छोरा मानदेव (इ. ४६४–५०५ ताका)को समयमा विहारहरू ठाउँ-ठाउँमा बनिसकेका थिए । उदाहरणको रूपमा साँखुको वज्रयोगिनीमा रहेको गुं विहार लिन सकिन्छ । राजा मानदेवले त्यस विहारमा तपस्या गरेको एवं त्यहाँ महाचैत्य स्थापना गरेको उल्लेख वंशावलीहरूले[2] गरेका छन् । यी बाहेक राजा मानदेवले एउटा विहार पनि बनाए जसको नाउँ 'श्रीमानविहार' रह्यो[3] ।

राजा मानदेवकै राज्यकालको हुनुपर्ने सम्झिइएको चावहिल-को एउटा अभिलेखबाट[4] त्यस ताका सङ्घहरू अस्तित्वमा रहेका

१. हेमराज शाक्य-- नेपाल संस्कृतिया मू लुखा, पृ. १०६

२. "श्रीमानदेव .. ...तेन गुं विहार शिखरे तपः कृतम् .. ... महाचैत्यम् .. ...प्रतिष्ठितञ्च ।।"

[गोपाल वंशावली]

"मानदेव ...... श्री वज्रयोगिनीमा शरण .. .. जाई बाह्र वर्ष लाइकन बौद्ध मन्दिर सिद्ध गया ।" [भाषा वंशावली]

३. "श्रीमानदेव ....... स्वनामेन मानविहार प्रतिष्ठितम् ।"

[गोपाल वंशावली]

४. "भूयः संघस्य भक्तार्थं पूजार्थञ्च महामुनेः ।
क्षेत्रन्दत्तन्तया यत्र ह्यष्टाविंशतिमानिकाः ।।"

[अभिलेखसंग्रह ९ बाट]



तथा तिनीहरूको सञ्चालनको लागि दाताहरूले खेत दान दिने चलन भइसकेको तथ्य पत्ता लाग्छ ।

शक संवत् ४६७–४७६ (इ. ५४५–५५) ताकाका राजा रामदेवको राज्यकालमा मणिगुप्त–महेन्द्रमतीले काठमाडौं, धरहरापछाडि रहेको ढुंगे धारामा अवलोकितेश्वरको मूर्ति राखेका थिए । ब्रह्मटोलको सं. ४७६ सालको अभिलेख (अभिलेख-संग्रह भाग १)बाट पनि त्यहाँ अवलोकितेश्वरको मूर्ति राखिएको थियो । यसबाट त्यस ताका यहाँ अवलोकितेश्वर संस्कृति विकसित भइसकेको सङ्केत पाइन्छ । यसको मतलब यो पनि होइन कि त्यस ताका उपत्यकामा बौद्ध सम्प्रदायका विरोधी कोही थिएनन् । रामदेव-भन्दा अघिल्लो राजा वामनदेवको पालामा अनुपरमगुप्तको हाडि-गाउँ सत्यनारायणस्थित अभिलेखमा बौद्ध धर्मावलम्बीहरूलाई 'अहिंसावृत्तिका कुमति, कुतार्किक' आदि भनेर गाली गरिराखेको[1] पाइन्छ । बौद्धहरूको दमन भएको पनि बुझिन्छ ।

त्यस्तै शिवदेव(इ. ५६०–६१० लगभग), अंशुवर्मा(इ. ६१०–६२१ लगभग) र नरेन्द्रदेव (इ. ६४३–६८०) राजाहरूको राज्य-कालमा प्राप्त अभिलेखहरूमा[2] अरू धेरै विहारहरूका नाउँ र आर्य

१. "निराकृता कुमतिभिरहिंसावृत्तैः कुतार्किकैः कथमपि सौगताभिः"

[प्राचीन नेपाल ४९–५३, पृ. ५]

२. "गुं विहार..... श्रीमानविहार.... श्रीराजविहार..... खर्जुरिकाविहार ......मध्यमविहार . .. सामान्य विहारणां....."

[अंशुवर्माको स. ३२ को हाडिगाउँ अभिलेखबाट, पूर्णिमा १४, पृ. १२३]

"सर्वद्रव्याण्यार्यसङ्घस्येत्यनेन च सम्पन्नः श्री शिवदेवविहारे चतुर्दिशार्य-भिक्षुसङ्घायाः......श्रीशिवदेवविहार.. .. .श्रीमानदेवविहार........ खर्जुरिकाविहार .....मध्यमविहार..... अभयरुचिविहार......कल्याण-गुप्तविहार .... चतुर्भालटसनविहार..... श्रीराजविहार"

[पाटन यागबहालको नरेन्द्रदेवको सं. १०३ को अभिलेख]

भिक्षु सङ्घ, भिक्षुणी सङ्घहरूको उल्लेख भेटिन्छन् । राजा मानदेवले जस्तै राजा शिवदेव, राजा अंशुवर्माले पनि आ-आफ्ना नाउँमा विहार बनाएका थिए ।[1] अंशुवर्माको गोकर्ण गजाघर मन्दिर अभिलेखमा धर्मचक्रप्रवर्तनको प्रसिद्ध प्रतीक चक्र र दुई मृगको चिन्ह समेत भेटिएको छ ।[2]

ललितपुर चप: टोलस्थित बुद्धमूर्ति पदपीठ अभिलेखमा 'आर्यभिक्षुणी सङ्घ'-को साथै 'महायान' शब्दको पनि किटानसाथ

---

महाप्रतिहारवार्तसुजातप्रभुविहार

[पाटन यम्पिबहि करुणाचोक अभिलेख]

पुष्पवाटिकाविहार

[च्यासल टोल अभिलेख, सं. १३७]

अजिकाविहार

[नरेन्द्रदेवको नक्साल नारायणचोक अभिलेख]

"तस्य संस्कारपूजार्थम् भिक्षुणीसंघमर्पितपणाः पुराणसहिता .. "

[काठमाडौं मुसुंबहालको अभिलेख, अभिलेख-संग्रह ९]

"देयधर्मोयं ....... सांधिकभिक्षुसंघस्य"

[सांखुको अभिलेख]

'सर्व्वसत्वो बुद्धो भवेत् क्षेत्रञ्च भूमि १० भगवतोस्यावलोकितेश्वरस्य धूपदीपेन मा २ आर्यसङ्घस्य च मा ५"

[काठमाडौं बण्डाहिटी अभिलेख, अभि संग्रह १, पृ. ३३]

१. 'राजा श्री शिवदेव . तेन प्रतिष्ठित विहार'

'राजा श्री अंशुवर्मा .... तेन च राजविहार कृतम्'

[गोपाल वंशावली]

"चौरपरदारहत्या ....पञ्चापराधकारिर्णा....... सर्वद्रव्याण्यार्यसङ्घस्य ......श्रीशिवदेवविहार ... "

[पाटन यागबहाल नरेन्द्रदेवको अभिलेख] र

[पशुपति वज्रघर नरेन्द्रदेवको अभिलेख]

२. मोहनप्रसाद खनाल– धनवज्रबाट



उल्लेख भएको छ[1] । लिपिको दृष्टिले अंशुवर्माभन्दा अघिको यो अभिलेख हो भन्ने देखिन्छ । यस अभिलेखबाट यस बेला महायान सम्प्रदायका भिक्षुणीहरूको सङ्घ ललितपुरमा कायम थियो भन्ने बुझिन्छ ।"[2]

यसरी इसवी चौथो शताब्दीदेखि प्रभावशाली हुँदै आएको महायान सम्प्रदायले आफ्नै भिक्षु सङ्घ, भिक्षुणी सङ्घ, विहार-हरूसहित क्रमिक रूपले प्रगति गरेको तथ्य लिच्छविकालीन राजा-हरूका प्राप्त अभिलेखहरूबाट थाहा हुन्छ । फेरि नेपालको भूभाग काठमाडौं उपत्यकाभन्दा निक्कै पर-परसम्म पुगेको लिच्छवि काल-मा महायान सम्प्रदायले पनि फैलिने मौका पाएहुनन् । पदच्युत भएर नेपालबाट ल्हासामा शरण लिन गएका उदयदेवले आफ्नी छोरी भृकुटीको इ. ६४० ताका त्यहीं तिब्बती राजा स्रोङ चन गाम्पोसित विवाह गरिदिएका थिए[3] तथा यो नेपाली राजकुमारी र

---

१. "गन्धकुटीप्रतिसंस्करणाय तदप्रयोजने च चातुर्दिशमहायानप्रतिपन्नार्य-भिक्षुणीसंघ परिभोगायाक्षयणीवी प्रतिपादिता"

[अभिलेख-संग्रह–५]

२. धनवज्रको लेख– पूर्णिमा १४, पृ. १०८

३. "६३० इ. में स्रोङ–ब्चन्–स्गम्पो अपने पिताके राज्यका अधिकारी बना । .. ६४० इ. में सम्राट्की नेपाली रानी ख्रि–चुन (भृकुटी) के साथ सर्वप्रथम बौद्ध धर्म तिब्बत में पहुंचा .. ६४१ इ. में सम्राट् स्रोङ-ब्चन्–स्गम्पोकी दुसरी रानी चीन राजकन्या कोङजो एक बुद्ध प्रतिमा ल्हासा लाई ।"

[राहुल सांकृत्यायन – पुरातत्त्व निबन्धावली, पृ. २३०]

चीनको थाङ वृत्तान्तमा उल्लिखित तिब्बती शासक स्रोङ चन गम्पोकी एक जना रानी नेपाली राजकुमारी भएको कुरालाई वर्तमान जनवादी गणतन्त्र चीन सरकारले पनि मान्यता दिएकै छ । तिब्बतको जोखाङ विहारको जीर्णोद्धारको चर्चाको सिलसिलामा काठमाडौंस्थित सिह्वा समाचार एजेन्सीले लेखेको छः

"त्यहाँ (उपर्युक्त विहारको एक भागमा) सङ चन गम्पो,

अर्की रानी चीनी राजकुमारी दुवै बौद्ध भएकाले तिनीहरूकै प्रभावबाट उनी आफ्ना प्रजाहरूसहित बौद्ध भएको प्रसङ्गबाट नेपालको लिच्छवि राजपरिवारमा राजा वृषदेवको समयदेखि रहिआएको बौद्ध-प्रभाव सातौं शताब्दीसम्म पनि कायम रहेको तथ्य सिद्ध हुन्छ। बौद्ध धर्मको प्रवेश तिब्बतमा गराउनामा समेत नेपाली राजकुमारीले प्रमुख भूमिका खेलेकी थिइन् । फेरि तिनले अक्षोभ्य, मैत्रेय, ताराका मूर्तिहरू साथमा लगेको[1] विवरणबाट इ. ६४० ताका नेपालमा पञ्चबुद्धको साथै मैत्रेय, ताराहरूको मूर्तिलाई पूजा गर्ने चलन

---

राजकुमारी वेन चेङ, सङ चन गम्पोको अर्की श्रीमती नेपाली राजकुमारी र त्यस समयका उच्च पदाधिकारीहरू केहीका मूर्तिहरू र तसबीरहरू पनि छन् ।"

'There are also statues and pictures of Songtzan-Gampo, Princess Wen Cheng, Songtzan-Gampo's other wife, a Nepalese Princess, and some of the higher officials of that time."

[Reference Material, Hsinhua News Agency, Kathmandu Office, 1979 March 28].

यस्तो किटानसाथको प्रमाण भई-भईकन भृकुटी-स्रोङ चन स्गम्पोको प्रसङ्गमा कुनै शङ्का गर्नु निरर्थक हुन्छ ।

१. यस विषयमा तिब्बतमा पाइएका ग्रन्थहरूको गहन अध्ययन गरेका राहुल सांकृत्यायनले यसो लेखेका छन्:

"६४० इ में सम्राट्की नेपाली रानी खि्-चुनके साथ सर्वप्रथम बौद्ध धर्म तिब्बतमें पहुंचा ... नेपाली राजकुमारी स्वयं अपने साथ अक्षोभ्य, मैत्रेय और ताराकी मूर्तियों के साथ कितने ही स्थापत्यशिल्पी तथा चित्रकार लाई थी ।"

[पुरातत्त्व निबन्धावली, पृ. २३२]

थाङ वृतान्तको आड लिएर सिल्वाँ लेवीले आफ्नो नेपालको



व्यापक तवरले मान्य र लोकप्रिय भइसकेको तथ्य प्रष्ट हुन्छ । तसर्थ तारामूर्तिहरू पनि त्यस समयभन्दा धेरै अगाडि यहाँ निर्माण हुन थालेको हुनुपर्दछ । राजा वृषदेवको राज्यकाल (इ. ३९०-४१५ ताका) मा पञ्चबुद्ध र राजा रामदेवको राज्यकाल (इ.५४५-५५७) मा अवलोकितेश्वरको मूर्ति स्थापना गर्ने परम्परा बसिसकेको त इतिहासबाटै सिद्ध छ ।

यहाँनिर सोच्नुपर्ने कुरा के छ भने लिच्छवि कालमा भएको महायान सम्प्रदायको व्यापक प्रचारबाट यहाँ पहिलेदेखि रहिआएको स्थविरवाद अर्थात् हीनयान सम्प्रदायमाथि वा शैव, वैष्णव, सौर, शाक्त[1] आदि अन्य तत्कालीन धर्महरूमाथि कुनै नराम्रो असर परेको थिएन । इसवीको छैठौं र सातौं शताब्दीतिर र त्यसपछि पनि कतिपय स्थविरवादी विहारहरूको स्थापना भएको थियो र तिनीहरूको सम्भार श्रद्धालु दाताहरूको उदार अनुदानबाट प्राप्त भएको खेत र नगदबाट हुन्थ्यो । यसबारे लुम्बिनी-कपिलवस्तुमा तीर्थ गर्न आएका सुप्रसिद्ध चिनिया यात्री हसुयन त्साङले आफ्नो यात्रा-विवरण (इ. ६२९-६४४) मा यसरी चर्चा गरेका छन्:-

"नेपाल अधिराज्यको घेरा ४०० लि जति छ । यो हिमाली पर्वतहरूको मुटुमा अवस्थित छ । राजधानीको गिर्दा २० लि क़रीब छ । यो देशको स्वरूप पर्वतमाला र उपत्यकाले शृङ्खलाबद्ध भएको

---

इतिहास (Le Nepal, Vol. I) मा यसो लेखेका छन्:

"बौद्ध धर्मप्रतिको प्रबल उत्साह यी दुवै रानीमा उत्तिकै थियो । उनीहरू प्रत्येकले आ-आफ्नो देशबाट आफ्नै ढङ्गका मूर्ति, पूजाविधि र पवित्र धर्मग्रन्थहरू ल्याएका थिए ।"

"The two queens ... ... had in common an ardent zeal for the Buddhist faith; they had each brought away from their countries their idols, their rites and their sacred books."

१. पूर्णिमा अङ्क ३२, पृ २६२

छ । माटो अनाजको लागि उर्बरा र फलफूल खुब सप्रने खालको छ । त्यस भेकको भूमिभित्र तामा पाइन्छ र चौंरी र च्याखुरा[1] (भिङ्गभिङ्ग) पाइन्छन् । व्यापारिक कामको लागि रातो तामाका सिक्काहरूको प्रयोग गरिन्छ । हावापानी ध्रुवीय प्रदेशमा जस्तै ठण्डी छ । मानिसहरूको चाल-चलनमा बेइमानी र धोकेबाजीको दाग परेको छ । निवासीहरू स्वभावतः कडा र डरलाग्दा छन् । उनीहरू सदाचार र न्यायोचितता पालन गर्नैपर्ने भन्ने ठान्दैनन् । उनीहरूको साहित्यिक (शैक्षिक) उपलब्धि बिलकुल छैन । तर तिनीहरू कलाशिल्पहरूमा सिपालु र सिद्धहस्त छन् । तिनीहरूको शारीरिक गठन भद्दा र अनुहार जनावरको जस्ता छन् । तिनीहरूमा विधर्मी (बौद्ध बाहेक अरू धर्मावलम्बीहरू) र स्वधर्मावलम्बी (बौद्ध)हरू छन् । विहार र देउताका मन्दिरहरू एउटाले अर्कोलाई छुन्छ । एकै साथ महायान र हीनयानको अध्ययन गर्ने धार्मिक मानिसहरू दुई हजार जति छन् । ब्राह्मणहरू र विधर्मीहरूको सङ्ख्या ठीक थाहा छैन । राजा क्षत्रिय जातका हुन् र लिच्छवि जातिसित सम्बन्धित छन् । उनका भावनाहरू पवित्र छन् .. .. बौद्ध धर्ममा उनको हार्दिक विश्वास छ । हालै यङ-चोन-फ-मो (अंशुवर्मा) भन्ने राजा भएका थिए ।"[2]

उपर्युक्त उद्धरणले सातौं शताब्दीमा हिन्दूधर्मको साथसाथै हीनयान र महायान दुवै सम्प्रदाय उपत्यकामा प्रचलनमा रहेको तथ्यतिर औंल्याउँछ । अंशुवर्माको एउटा अभिलेखमा[3] कम-से-कम छ वटा विहारले दान पाएको उल्लेख छ । अगाडि चर्चा गरिए-अनुसार शिवदेव, अंशुवर्मा र नरेन्द्रदेव राजाहरूको राज्यकाल

१. बाबुराम आचार्यअनुसार ।

२. Stanislas Julien को फ्रेन्च अनुवाद; Sylvain Levi को Le Nepal, Vol. I.

३. पृष्ठ ९७ को पाद टिप्पणी ।



(इ. ५७३-६८० लगभग)मा आर्य सङ्घ, आर्यभिक्षुसङ्घ, भिक्षुणी सङ्घ, .. ..(महा)साङ्घिक भिक्षु सङ्घ, मध्यम शायद माध्यमिक) विहार, आर्यभिक्षुणी सङ्घ, चातुर्विशमहायान आदि सम्प्रदाय र भिक्षु सङ्घ, भिक्षुणी सङ्घहरू समेत अस्तित्वमा रहेको तथ्य उनीहरूको प्राप्त अभिलेखहरूबाट सिद्ध छ ।

विहारहरू धार्मिक कार्यकलापका केन्द्रविन्दु थिए तथा यिनीहरूको समाजमा विशिष्ट स्थान र अधिकार भएको कुरा विदित हुन्छ । उदाहरणार्थ शिवदेव विहारमा रहेका भिक्षु सङ्घलाई गाउँ दान दिएको सिलसिलामा महाराजाधिराज (शिवदेव द्वितीय) ले यो आर्यसङ्घसित सम्बन्धित सबै मामिलाको सम्बन्धमा प्रजावर्गले यसको मर्यादा राख्न र उनीहरूले यस अनुदानको उल्लङ्घन नगर्न ठाडो हुकुमसम्म दिएका छन्[1] । त्यस्तै याग बहालको अभिलेखमा सबै दिशाबाट आएर श्री शिवदेव विहारमा रहने भिक्षु सङ्घलाई गाउँ दान दिएको सम्बन्धमा दान पाएका भिक्षु सङ्घको विशेषाधिकारहरूको उल्लेख सविस्तार गरिएको छ[2] । सामान्यतः विहारहरूको खर्च राजपरिवार, धनी व्यक्ति र गुठीबाट दान दिइएको पैसा र जग्गा जमानका पैदाइसबाट बेहोरिन्थ्यो । भिक्षु र भिक्षुणीहरूको ठूल-ठूला धार्मिक भेलाहरू पनि हुन्थे । जनतामा शिक्षा र बौद्ध धर्मको प्रचार गर्ने काममा यी विहारहरूले खेलेको भूमिका निकै महत्त्वपूर्ण थियो ।

काठमाडौं उपत्यकाबाहेक लुम्बिनी-कपिलवस्तु क्षेत्रको

१. सं. १४३ (१४३+५७६=इ. ७१९) सालको शिवदेव II को पशुपति अभिलेख–Indraji-Buhler–Inscriptions from Nepal, India-Antiquary, 1800, Vol. IX, p. 176; तर आर् नोलिले यो अभिलेख राजा नरेन्द्रदेवको र साल १०३ भनेका छन् ।

२. Sylvain Levi– Inscription XX– राजा नरेन्द्रदेवको सं. १०३ को अभिलेख ।

धार्मिक अवस्थाबारे फा हिसन (इ. ३९९-४१३) ह्सुयन त्साङ (इ. ६२९-६४४) दुवैले आ-आफ्ना यात्रा विवरणमा लेखेका छन् । इ. ४०५ सालमा फा हिसनले कपिलवस्तुको भ्रमण गर्दा यसको अधोगति शुरू भइसकेको थियो । शाक्य राजधानीमा आफूले देखेको स्थितिबारे उनी लेख्छन्, "..... म कि-बि-लो-वि (कपिलवस्तु) शहरमा आएँ । यहाँ न त राजा न त प्रजा बसेका थिए । ...... शहरको थलो उजाड भग्नावशेष र थुम्काहरूले मात्र सङ्केत गर्दथे । केही भिक्षु र सर्वसाधारण मानिसहरूबाहेक अरू आबादी थिएन । जति श्रमणहरू थिए तिनीहरू पथ-प्रदर्शकको रूपमा काम गर्दथे तथा पवित्र स्थलहरू देखाउँदा केही न केही अडकल लगाउँथे ।"[1]

उपर्युक्त उद्धरणमा फा हिसनले केही श्रमणहरू थिए भनेकोबाट त्यस वेलासम्म त्यहाँ स्थविरवाद सम्प्रदाय लोप भएको थिएन भन्ने थाहा हुन्छ ।

इ. ६३५-६ सालमा लुम्बिनी-कपिलवस्तुमा घुमेका ह्सुयन त्साङले यसो लेखेका छन्, "......... (कपिलवस्तुमा) हजार वटा भन्दा बढी विहारहरू भत्केबिग्रेको अवस्थामा परिरहेका छन् । राजदरबार नगीचै एउटा विहार छ ....... (त्यसमा) ३० जना हीनयान (स्थविरवाद) का श्रमणहरू छन् ।"[2]

लुम्बिनी-कपिलवस्तु क्षेत्रको यात्रासम्बन्धी आफ्नो विवरण-मा ह्सुयन त्साङले त्यस इलाकाबाट राम ग्राम (जुन बुद्धकालीन कोलिय राज्यकै अङ्ग सम्झिइन्छ) तिर गइरहेको वेला बाटोको छेउ केही पर एउटा विहारमा बस्ने गरेका एक जना श्रमणेरलाई देखेको कुरा पनि लेखेका छन्[3] ।

१. Fa Hien's Travels in India– translated by S. Beal.
२. S. Beal– Buddhist Record of the Western World, London, 1884, पृ. १४-२५
३. The Life of Hsuan Tsang-Peking, 1959 (Chinese Buddhist Association), पृ. ९३-९४



यसरी फा हिसन र ह्सुयन त्साङ जस्ता आधिकारिक चिनिया यात्रीहरूको लेखोटबाट नेपालको तत्कालीन धार्मिक स्थिति-बारे प्रकाश परेका तथ्यहरूमध्ये महत्त्वपूर्ण र टड्कारै देखिने एउटा कुरा चाहिं हीनयान, महायान आदि बौद्ध सम्प्रदायका अनुयायीहरू-को आपस्तमा मात्र होइन कि यिनीहरू र शैवी, वैष्णवी आदि हिन्दू सम्प्रदायका अनुयायीहरूको बीचमा पनि रहेको धार्मिक सहिष्णुता र शान्तिपूर्ण सह-अस्तित्व नै थियो भन्नु अत्युक्ति हुँदन ।

# मन्त्रतन्त्रबाट वज्रयानतिर

नेपालमा महायान सम्प्रदाय इसवीको चौथो-पाँचौं शताब्दी-मा नै प्रभावकारी ब नसकेको इतिहासबाट देखिएकोबारे अघिल्ला परिच्छेदहरूमा चर्चा भइसकेको छ । त्यस ताका नै यस सम्प्रदायमा केही-न-केही अंशमा मन्त्रतन्त्र घुसिसकेको थियो । आज पनि बौद्ध पुरोहित वज्राचार्यहरू विभिन्न पूजाविधिहरूमा मात्र होइन औषधि-मूलो गर्दा पनि मन्त्रतन्त्रको प्रयोग गर्दछन् । नेपालीहरू मन्त्रतन्त्रको प्रयोगात्मक अर्थदेखि अनभिज्ञ छैनन् ।

पहाड, उपत्यका, तराईका झाँक्री, धामी, लामा, गुरुजु, गुरुवा, बिजुवाहरूले रोगव्याधि, दु ख-सङ्कट, दैवीप्रकोप आदि हटाउन, देउता, भूत-प्रेत, जखिन (यत्रिणी), मसान आदि लागेको पन्छाउन 'ऊँ .. फू ऊँ .. स्वाहा' आदि थरी-थरी-का मन्त्रोच्चारण गरेर फुकफाक गर्ने चलन अद्यावधि कायमै छ । मन्त्र वा मन्त्रयान भन्नाले सर्वसाधारण रूपले बुझिने अर्थ यही हो । त्यस्तै तन्त्रयानको मतलब सामान्यतया जन-भाषामा कुनै इच्छित लक्ष्यको उपलब्धिको लागि निर्धारित विधिविधानअनुसार इष्ट देवदेवीहरूको गरिने पूजा, पाठ होम, जप, याग आदि हुन् ।

तन्त्रको व्यापक अर्थमा स्मृति, शास्त्र, विज्ञान आदि पनि



समावेश गरिन्छ[1] तापनि तन्त्रयान विषयमा 'तन्त्र' शब्द सीमित अर्थमा प्रयोग गरिएको छ । बलदेव लेख्छन्, "देवताका स्वरूप, गुण, कर्म आदिको जसमा चिन्तन गरिएको छ, तद्विषयक मन्त्रहरूको उद्धार गरिएको छ, ती मन्त्रहरूलाई यन्त्रमा संयोजित गरेर देवताको ध्यान तथा उपासनाका पाँच अङ्ग- पटल, पद्धति, कवच, सहस्रनाम र स्तोत्र व्यवस्थित रूपले देखाइएका छन् ती ग्रन्थहरूलाई तन्त्र भन्दछन् । वाराही तन्त्रअनुसार सृष्टि, प्रलय, देवतार्चन, सर्वसाधन, पुरश्चरण, षट्कर्मसाधन (शान्ति, वशीकरण, स्तम्भन, विद्वेषण, उच्चाटन=तथा मारण) र ध्यानयोग- यी सात लक्षणले युक्त ग्रन्थहरूलाई 'आगम' भन्दछन् । तन्त्रहरूकै दोस्रो नाउँ आगम हो[2] ।

तन्त्रयानले एकातिर असङ्ख्य देवदेवीहरूलाई मान्दछ एवं मन्त्र र धारणीयुक्त स्थूल किसिमका पूजाविधिहरूलाई अपनाउँदछ । अर्कोतिर यो कुनै देउता वा अलौकिक शक्तिलाई आफ्नो वशमा पार्ने विद्या हो । यो एक किसिमको ऋद्धि-सिद्धि हो जसअन्तर्गत साधक आत्मशुद्धि र अनुशासनद्वारा कल्याणकारी देव-देवी, भूत-प्रेत आदिको सहायता आराधना गर्न र पाउन सक्षम हुन्छ । तन्त्रयानको यही अत्यन्त विकसित रहस्यवाद नै कालान्तरमा वज्रयानको नाउँले पुकारिएको छ ।

तर यहाँ सम्झनुपर्ने कुरा के हो भने यी मन्त्र तन्त्र बौद्ध धर्मको देन होइन । न यी सर्वप्रथम बौद्ध धर्ममा समावेश गरिएका

---

१. बलदेव उपाध्याय- बौद्ध दर्शन, पृ. ४१७ जहाँ लेखिएको छः- "तन्त्रका व्यापक अर्थशास्त्र, सिद्धान्त, अनुष्ठान, विज्ञान आदि है । इसीलिये शङ्कराचार्य नै साङख्यको तन्त्र नाम से अभिहित किया है ('स्मृतिश्च तन्त्राख्या परमर्षिप्रणिता') ।"

— ब. सू. २।१।१ पर शाङ्कर भाष्य

२. ऐ. ऐ., पृ. ४१७-८

हुन् । मन्त्र अति प्राचीन वस्तु हो र यो मानव–सभ्यता जति नै पुरानो थियो भनिन्छ । ऊँ, वोषट्, औषट् आदि शब्द वेदहरूमा पनि पाइन्छन् । यज्ञ, होम आदिमा यिनीहरूको प्रयोग भइआएकै छ । प्राचीन बेबिलोन, असिरिया, मिस्र आदि देशमा पनि मन्त्रहरूको जोड थियो भनिन्छ । पाली ब्रह्मजाल सूत्रबाट थाहा भएअनुसार भगवान् बुद्धकै जीवन-कालमा पनि शान्ति–स्वस्ति गर्ने, सुख, सौभाग्य आदि वाञ्छित फल दिन सक्ने पूजाविधिहरूको चलन थियो । यस्तै गान्धारी विद्या, आवर्तनी विद्या आदिमा पनि त्यस वेलाका मानिसहरू विश्वास गर्दथे । यस्ता कुरालाई बुद्धले मिथ्याजीव भनेर मनाही पनि गरे । विनय पिटकमा भिक्षु पिण्डाल भारद्वाजले एउटा बहुमूल्य भिक्षापात्र आफ्नो ऋद्धिबलले प्राप्त गरेका थिए र भगवान् बुद्धले थाहा पाएपछि उक्त भिक्षा पात्र फोरेर यस्तो ऋद्धिबलको प्रदर्शन र मूल्यवान् पात्रको प्रयोग समेत निषेध गरेको कुराको उल्लेख छ ।

तर त्रिपिटकमै कतैकतै, उदाहरणार्थ दीर्घ निकायमा 'आटानाटीय सुत्त'–को[1] चर्चा छ जसमा भगवान् बुद्धसँग केही यक्ष र देवताहरूको बीचमा भएको संवाद बयान गरिएको छ । तथा के भनिएको छ भने यो सूत्र दोहऱ्याउनाले अर्थात् पाठ गर्नाले ती यक्ष र देवताका सन्तानहरूलाई आज पनि तिनका पुर्खाहरूले बुद्धको अगाडि गरेको कबूल याद हुन्छ र तिनीहरूले (मानिसहरूलाई) दुःख दिन छोड्छन् । त्यस्तै मज्झिम निकायमा[2] भगवान् बुद्धले भिक्षु अङ्गुलिमालमार्फत् सत्यवचनको पारायणले एक जना महिलाको असामयिक प्रसवपीडा हटाउन लगाएको उल्लेख छ । खुद्दक निकायमा केही 'परित्त' (परित्राण)हरू यस्ता छन् जुन पाठ गर्नाले रक्षा हुन्छ भनिन्छ । रतनसुत्तको हरएक श्लोकमा एतेन सच्चेन

१. दीर्घ निकाय, सूत्र ३२
२. मज्झिम निकाय, सूत्र ६६



सुवत्थी होतु' भन्ने शब्दहरू परेका छन् । उपर्युक्त श्लोक वाक्य वा चलनलाई ठाडै मन्त्र भन्न नमिले पनि तिनबाट तर्कगत कारणभन्दा केही श्रद्धा, भक्ति वा विश्वास पैदा हुन्छ ।

यसरी त्रिपिटकअनुसार भगवान् बुद्धकै उपदेशमा मानिसहरूदेखि भिन्न अलौकिक शक्तिसम्पन्न यक्ष, देवताहरूका गतिविधिहरूको उल्लेख हुनु, उनका अस्थि, रौं आदि पवित्र मानेर आदर गर्नु, स्तूप निर्माण गर्नु, उनको जीवनसित सम्बद्ध थलाहरू तीर्थस्थल बन्नु, इसवी प्रथम शताब्दीताकादेखि बौद्ध मूर्तिहरूको निर्माण, स्थापन र पूजन गर्नु इत्यादि चतुर आर्यसत्य, अष्टाङ्गिक मार्ग, प्रतीत्यसमुत्पादहरूसित मेल नखाने भावना र परिपाटीहरू देखा परिसकेका थिए ।

राहुल सांकृत्यायनको भनाइअनुसार बुद्धको निर्वाणपछि जति जति समय बित्दै गयो उतिउति मानिसहरूको दृष्टिबाट उनका मानवीय गुणहरू बिलाउँदै गए । बादलको तहभित्र देखिएको सूर्य अथवा बाक्लो कुहिरोको माझमा बलिरहेको बत्ती जस्तै उनको ऐतिहासिक व्यक्तित्व झन्झन् धमिलिंदो गयो । बौद्ध भिक्षुहरूलाई आ-आफ्नै निर्वाणको लागि अभ्यासमा लगनशील रहनुमात्र पर्याप्त नभई सर्वसाधारण मानिसहरूलाई पनि आकर्षित पारिराख्नु आवश्यक सम्झियो । त्रिपिटकको उपदेश प्रभावकारी ढङ्गले व्याख्या गर्ने क्षमता वा व्यक्तित्व विकास गर्नुपर्ने कठिन मार्ग शुद्ध स्थविरवादबाट केही भिक्षुहरूले गरेको विचलनबाट नै कैयन् निकायहरूको प्रादुर्भाव भएको बुझिन्छ जसमध्ये केहीबाट महायान विकसित भयो । महायानी विचारधाराकै अन्तर्गत एकातिर खुद ऐतिहासिक मानव बुद्ध अलौकिक मानिए अर्कोतिर अनेकौं लोकोत्तर बुद्ध, बोधिसत्त्व, देवदेवीहरूका घतलाग्दा कथाहरूको सिर्जना एवं तिनीहरूको पूजाभक्तिका मन्त्रतन्त्र, विधिविधान रचिए । यिनीहरूका पारायण मात्रले पनि दुःख, रोग, भय हट्नेछ भन्ने विश्वास विकसित भयो ।

इसवीपूर्व तेस्रो शताब्दीमै स्थविरवादबाट भिन्न जुन १७ वटा निकायहरू निस्केका थिए । तिनले सूत्रहरूमा अद्‌भुत शक्ति भएको मान्न थालिसकेका थिए र यसको लागि केही खास सूत्र पनि थपे । महायानको प्रारूप अन्धक र वैपुल्य सम्प्रदायले इ. पू. ३०० देखि इ. पू. १०० सम्ममा खास मतलब (एकाभिप्रायेण) मैथुनको लागि अनुमति दिइसकेको थियो[१] ।

अन्धकवादीहरूले त्यही वेला भगवान् बुद्धलाई ऐतिहासिक व्यक्तिको सट्टा लोकोत्तर मानिसकेका थिए[२] । उनीहरूको कथनानुसार बुद्ध न त संसारमा जन्मे न उनले धर्मको देशना नै गरेका थिए[३] । यूजोन बर्नुफ (Eugene Burnouf) अनुसार इसवी प्रथम शताब्दीको प्रारम्भमा लेखिएको 'सद्धर्मपुण्डरीक'-मा वैरोचन, अमिताभ जस्ता लोकोत्तर बुद्ध र बोधिसत्त्व अवलोकितेश्वरको कल्पना भइसकेको थियो । फेरि वैपुल्यवादीहरूले लामालामा सूत्रहरूको पाठमा विलम्ब देखेर केही पंक्तिका छोटाछोटा धारणीहरू बनाए । लामालामा धारणीको सट्टा पनि 'ओं मुने मुने महामुने स्वाहा', 'ओं आ हुं', ओं तारे तुतारे तुरे स्वाहा' आदि मन्त्रहरूको सृष्टि गरे[४] । शून्यवादका प्रवर्तक नागार्जुन (द्वितीय शताब्दी इसवी) को शिक्षामा मन्त्रहरूको केही कुरा थियो[५] । इसवीको द्वितीय तृतीय शताब्दीमा लेखिएको र वैपुल्य सूत्रअन्तर्गत पनि परेको 'मञ्जुश्रीमूलकल्प' मन्त्रयानकै प्राचीन पुस्तकहरूमध्ये एउटा हो ।

---

१ राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, पृ. १०५, १०८, कथावत्थु २३।१

२. ऐ. ऐ., ऐ. १८।१ २।८

३. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, इलाह, १९५८, पृ. १०५; कथावत्थु १८।१, १८।२

४. ऐ. ऐ., पृ. ११

५. ऐ. ऐ., पृ. ११४



भूत-प्रेत, देव-देवी आदिलाई वश गर्ने, मानिसहरूको दैनिक जीवनमा आइपर्ने दुःख-कष्ट, रोगव्याधि, दैवीप्रकोप आदिबाट समेत त्राण पाउन थरी-थरीका सूत्र र मन्त्रहरूको रचना, पठनपाठन हुन थाले । यहाँसम्म कि 'मञ्जुश्रीनामसंगीति'- मा अ. आ. इ, ई, क, ख, ग, घ, आदि एक एक अक्षर एउटा एउटा मन्त्रको प्रतीक घोषित गरियो । तसर्थ मन्त्रयानको प्रवेश बौद्ध धर्ममा वैपुल्यवाद या महायानबाट नै भयो ।

यसरी मन्त्र, धारणी, मैथुनले वैपुल्य सूत्रको प्रारम्भकाल, मोटामोटी तवरले इसवीको प्रथम शताब्दीदेखि बौद्ध धर्ममा ठाउँ पाउन थाले । महायानले मन्त्रतन्त्रको भावनालाई रोकेन, बरु यिनलाई प्रश्रय नै दियो । पूजा-आजा, भक्तिभावलाई पनि महायानले अङ्गीकार गरेको थियो । कुविद्याको बहिष्कार गरे पनि यसमा भौतिक सिद्धि हुने खालका कुनै पनि मन्त्रतन्त्रलाई सकार्ने प्रवृत्ति पाइन्छ । त्यसैले जतिजति महायानी विचारधारा व्यापक र लोकप्रिय हुँदै आयो उतिउति मन्त्रतन्त्रको प्रभाव पनि बढ्यो । महायानी दर्शन अन्तर्गत आफू एक जनाको मात्र निर्वाण होइन कि प्राणीमात्रको निर्वाण खोजियो, 'बहुजनहिताय'-को ठाउँ 'सर्वजनहिताय'–ले लियो अर्हत्‌को आदर्श सङ्कीर्ण, बोधिसत्त्वको आदर्श उदार मान्न थालियो । माध्यमिक दर्शनको शून्यवादलाई सिद्धहरूको प्रातिभ चक्षुले मात्र राम्ररी बुझन सकिने सम्झिइयो । यस मान्यताको कारण बुद्धि र तर्कको सट्टा रहस्यवादतिर नै विद्वान्हरूको झुकाउ भयो[१] । रहस्यवादले तन्त्रमन्त्रको उत्थानलाई ठूलो सघाउ पुऱ्यायो । इसवीको दोस्रो, तेस्रो, चौथो शताब्दीमा प्रभावशाली बनेको माध्यमिक दर्शनको शून्यवाद र पाँचौं शताब्दीमा प्रभावशाली बनेको विज्ञानवादको योगाचार दुवै महायानी

---

१. बलदेव उपाध्याय– बौद्धदर्शन, सं. २००३, पृ. १९४

प्रज्ञापारमिताबाट प्रभावित थिए[१] । योगाचारले योग र आचारलाई विशेष महत्त्व दिएकै महायानी प्रभावबाट हो[२] ।

तन्त्र-मन्त्रको प्रभाव बढ्दै आयो, यसबारे अनेक ग्रन्थ लेखिए । इसवीको पाँचौ शताब्दीमा लेखिएको 'श्रीगुह्यसमाजतन्त्र'–मा तन्त्रको उदय खुद भगवान् बुद्धले नै गरेका थिए सम्म पनि भनियो[३] । 'तत्त्वसङ्ग्रह'–मा पनि के स्पष्टसंग भनिएको छ भने बौद्ध धर्म पारलौकिक कल्याणको उत्पतिमा जति सहायक छ उत्तिकै लौकिक कल्याणको उत्पतिमा पनि छ । यसैले बुद्धले स्वयं मन्त्र, धारणी आदि तान्त्रिक विषयको शिक्षा दिएका छन् जसमा यही लोकमा प्रज्ञा, आरोग्य आदि वस्तुहरूको उपलब्धि हुन सक्दछ[४] । सिद्ध युग (इ. ७५०–११७५) मा लेखिएको 'साधनमाला'–मा पनि कैयौं मन्त्र बुद्धले नै विभिन्न अवसरमा शिष्यहरूलाई बताए भनिएको छ[५] ।

अनि शताब्दीयौं पछि तिब्बती ग्रन्थमा 'भगवान् बुद्धले नै बोधिज्ञान प्राप्त गरेको सोह्रौं वर्षमा मन्त्रयानको धर्मचक्र श्री धान्यकटकमा गरेका थिए[६] भनेर लेखिएको आधार पनि सद्धर्मपुण्डरीक, मञ्जुश्रीमूलकल्प, गुह्यसमाज आदि ग्रन्थहरू नै हुनुपर्दछ ।

यस बाहेक, स्थितिअनुसार परिवर्तन गर्ने छुट महायानी विचारधाराले दिएकोले पनि यसप्रति झन्झन् बढी मानिसहरू

---

१. बलदेव उपाध्याय– बौद्धदर्शन, पृ. १३०

२: ऐ. ऐ , पृ. ४२७

३. ऐ ऐ., पृ. ४२६

४. तत्त्वसङ्ग्रह– श्लोक ३४८६, बौद्धदर्शन, पृ. ४२५–६ मा उद्धृत गरिएअनुसार ।

५. बलदेव उपाध्याय– बौद्धदर्शन, पृ. ४२६

६. 'ब्र्ग् प–पद्म–द्कर्–पो'–का 'छोस् व्युङ', पृ १४, पुरा. निबन्धा., पृ. ११३



आकर्षित हुन थाले । नयाँ नयाँ मन्त्रतन्त्र, यौगिक चमत्कार आदिले पनि मानिसहरू महायानमा मुग्ध भएहुनन् । बौद्ध धर्मप्रति श्रद्धालु रहेका दाताहरूबाट सङ्घ, विहारहरूमा जम्मा हुन आएको उदार दानदातव्यबाट भिक्षुहरूको जीवन विलासी बन्यो । यस स्थितिमा कोही कोही भिक्षुहरू भ्रष्ट हुनु अस्वाभाविक होइन । तिनीहरूले मन्त्रतन्त्र र योग्याभ्यासको साथै मैथुन र मद्य पनि अपनाए । छैठौं शताब्दीको शुरूमा दक्षिण मथुरामा श्रीहर्षनामक राजाको राज्यकालमा साम्मितीय निकायका एक जना दुःशील भिक्षुले आफ्नो 'नीलपट दर्शन' शीर्षक किताबमा वेश्यागमन र सुरापान-लाई शीलानुकूल घोषित गरेका मात्र थिएनन् आफैले पनि अभ्यास गरेका थिए[१] । त्यस्तै चौरासी सिद्धहरूमध्ये तेस्रा सिद्ध विरूपा (जो पहिले नालन्दा महाविहारमा प्रव्रजित भएर पढेका थिए) श्रीपर्वतमा सिद्ध (सहजयानी, तान्त्रिक) भएपछि नालन्दामा नै फर्कंदा त्यहाँ विहारमा मद्य, स्त्री आदि सहजचर्याका आवश्यक वस्तुहरू उपयोग गर्न नपाएर त्यहाँबाट सुइँकुच्चा ठोकेका थिए[२] ।

जे होस्, पाँचौं शताब्दीमा योगाचार वा विज्ञानवाद प्रभावशाली भइरहेको उल्लेख माथि भइसकेको छ । योगाचारबाट मानिसहरूलाई केही सन्तुष्टि भयो होला । तर यसको विज्ञानवादी गहिरो दर्शन अध्ययन गर्ने र बुझ्ने क्षमता सर्वसाधारणलाई नहुनु स्वाभाविकै थियो । उनीहरू त यस्तो मनोरम धर्मको लागि लालायित थिए कि जसमा थोरै कष्ट वा कोशिशले महान् सुख प्राप्त हुने आशा दिलाइएको छ । यही महान् सुख प्राप्त गरिदिने मनोरम धर्मको नाउँ नै वज्रयान हो[३] ।

---

१. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, पृ. ११८

२. ऐ. ऐ., पृ. १४७

३. बलदेव उपाध्याय– बौद्ध दर्शन, पृ. ४२८

यस्तो रूप लिएपछि मन्त्र-तन्त्र यान अर्थात् महायानको नरम चरण चरम शिखरमा पुग्न थाल्यो । केही समय अघिदेखि गोप्य तरीकाले विकसित हुँदै आइरहेको वज्रयान चाल नपाइने तौरले व्यापक पनि बन्दै थियो । मन्त्र, मैथुन, योग र मद्य— यी चारै थोक वज्रयानका मुख्य तत्त्व हुन्[1] । यिनलाई छिटो पचाउनु महायानको लागि पनि मुश्किल थियो । यसैले महायानलाई वज्रयानसम्म पुग्न मन्त्रयानको नरम चरणबाट गुज्रनुपर्‍यो । मन्त्रतन्त्र यानको उग्र रूप नै वज्रयान हो ।

यस सम्बन्धमा राहुल सांकृत्यायन लेख्छन्, "छैटौं शताब्दीमा यो (वज्रयान) सम्प्रदायको उत्पति तथा साम्मितीय निकाय (इ. पू तृतीय शताब्दीमै निस्किसकेका १७ निकायहरूमध्ये एउटा जसबाट फेरि इ. पू. प्रथम शताब्दी ताका महायान सम्प्रदाय निस्क्यो) संग यसको सम्बन्ध केही ठीक जस्तो जँच्दछ।... ... यसरी हामी छैटौं शताब्दीलाई वज्रयानको उत्पतिको अघिल्लो सीमा मान्न सक्छौं । पछिल्लो सीमा हामीहरूलाई ८४ सिद्धहरूको काल (इ. ७५०-११७५) बाट मिल्दछ... .. वज्रयानको उत्पति छैटौं शताब्दीभन्दा अगाडि र सरह आदिको कारणले आठौं शताब्दीभन्दा पछाडि पनि मान्न सक्दैनौं । सरह (राजा धर्मपाल[2], इ. ७६८—८०९ का जेष्ठ समकालीन, आठौं शताब्दीको पूर्वार्द्ध तिरका) चौरासी सिद्धहरूका आदि पुरुष हुन् जसले लोकभाषालाई आफ्नो अद्‌भुत कविता विचित्र रहनसहन तथा योगक्रियाहरूद्वारा वज्रयानलाई एउटा सार्वजनिक धर्म बनाइदिए । यसभन्दा अगाडि वज्रयान पनि महायान जस्तै संस्कृतको माध्यमद्वारा गुप्त रीतिले

१. रा. सांकृ.– पु. निब., पृ. ११६.

२. तारानाथको आड लिएर एल्. मुखर्जीले धर्मपालको राज्यकाल इ. ७६५ देखि ८५९ सम्म भनेका छन्, History of India, Hindu Pd., p. 157.



फैलिरहेको थियो । सरहभन्दा अगाडिको एक शताब्दीलाई हामी साधारण मन्त्रयान र वज्रयानको सन्धिकाल मान्न सक्दछौं । आठौं शताब्दीदेखि जोडतोडले वज्रयानको प्रचार हुन थाल्यो । त्यस बेलादेखि मुसलमानहरू आउने बेलासम्म यो बढ्दै गयो ।"[1]

बौद्ध धर्ममा मन्त्र, धारणी, तन्त्र प्रभावकारी भएका युगहरूलाई राहुल सांकृत्यायनले निम्नलिखित क्रममा विभाजन गरेका छन्:-

| मन्त्रयानको नरम चरण | समयावधि |
| --- | --- |
| सूत्र रूपमा मन्त्रको युग | इसवी पूर्व ४०० देखि इ पू. १०० सम्म |
| धारणी मन्त्रको युग | " " १०० " इ. ४०० " |
| तन्त्रमन्त्रको युग | इसवी ४०० देखि इ. ७०० सम्म |
| नरम चरण र उग्र चरणको सन्धिकालको युग | इसवी ७०० देखि इ. ८०० सम्म |
| मन्त्रयानको उग्र चरण अर्थात् वज्रयानको युग | इसवी ८०० देखि इ. १२०० सम्म |

वज्रयान सम्प्रदायले पूरा विकसित अर्थात् उग्र रूप लिन लागेको सातौं वा आठौं जुनसुकै शताब्दीमा भए पनि राहुल सांकृत्यायनले उपर्युक्त मन्तव्यमा यसको प्रारम्भ छैठौं शताब्दीमा नै भइसकेको थियो भनेका छन् । यो सम्प्रदाय पनि नेपालमा स्थविरवाद र महायान जस्तै प्रारम्भिक समयदेखि पसिसकेको यहाँका प्राप्त ऐतिहासिक सामग्रीहरूबाट सिद्ध हुन्छ । मानदेव संवत्‌को ३७ देखि ४५ (इ. ६१३-६२१) सालको बीचको हुनुपर्ने राजा

१. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, १९५८ इ., पृ. ११८–११९ बाट

अंशुवर्माको गोकर्णस्थित एउटा मन्दिरमा भेटिएको अभिलेखमा[1] 'वज्रयान' शब्द किटानसाथ प्रयोग गरिएको छ । यसबाट इसवी छैटौं शताब्दीमा यहाँ वज्रयान सम्प्रदायले प्रभाव जमाइसकेको प्रमाणित हुन्छ । फेरि मानदेव संवत् १२२ (+५७६=६९८ इ.) सालको गोर्खास्थित गोरखनाथ गुफाले ढोकानिर पाइएको अभिलेखमा[2] त्यहाँको वज्रभैरवको नैमित्तिक पूजाका विभिन्न कामको लागि राजा शिवदेव द्वितीयले पण, पुराण (विभिन्न मूल्यका पैसा)का रकम र मानिका (अनाज भर्ने नापो) पाउने गरी खेत गूठी राखिदिएको जानकारी पाइन्छ । 'वज्र भैरव' नामले वज्रयानी देउता हो । यसबाट सातौं शताब्दीमा वज्रयान सम्प्रदाय उपत्यकामा मात्र होइन पश्चिममा कम-से-कम गोर्खासिम्म फैलिसकेको प्रमाणित हुन्छ ।

फेरि नेपालको नजीकै रहेका नालन्दा, विक्रमशिला महाविद्यालय जस्ता बौद्ध दर्शनका केन्द्रहरू पनि वज्रयानकै प्रभावअन्तर्गत थिए । आठौं शताब्दीको आधाआधीतिर र त्यसपछि पनि नालन्दा महाविद्यालयका कतिपय प्राध्यापकहरू नेपालमा आएर केही समय बसेका थिए ।

तसर्थ नेपालमा वज्रयानको प्रचलनसम्बन्धी प्रसङ्गको

१. "  (व) ज्रयान . पादानुगृहीत . .श्यंशुवर्मा . .(स्वयक) भूचैत्य भट्टा (रक) ...टुग्राम .. भू प्रतिवर्ष .. शुक्लपञ्च- म्याम्प्रातरेव स्नातानु ..."

[राष्ट्रिय अभिलेखालय संग्रह, मोहनप्रसाद खनालको प्रकाशन, धनवज्र– लिच्छविकालका अभिलेख सं. ८९]

२. "ॐ स्वस्ति .... (भ)ट्टारक महाराजाधिराज (श्री शि)वदेव ..... वज्रभैरवभट्टा (रक) .. कारणपूजा .. भूमि .. पण... भोगदत्त ......क्षेत्रं . ..मानिका ... पणपुराण रितिसं. १२२"

[योगी नरहरिनाथ– इतिहास प्रकाश १]



सिलसिलामा यो स्मरणनीय हुन्छ कि वज्रयानी गुरु शान्तरक्षित (इ. ७०७-७६२) इ. ७४३ देखि ७४६ सालसम्म, पद्मसम्भव (इ. ७१७-७७५) इ. ७४३ देखि ७४७ सालसम्म र कमलशील (इ. ७२०-७८०) इ. ७६२ सालमा नेपालमै बसेका थिए । नालन्दा महाविद्यालयका महास्थबिर शान्तरक्षित यहींबाट तिब्बत गएका थिए तथा त्यहाँबाट फर्केर पनि यहीं बसेका थिए[1] । उनले 'तत्त्वसङ्ग्रह' यहीं बस्दा पुरा गरेको सम्भावना धेरै छ[2] । शान्तरक्षितको यो हस्तलिखित ग्रन्थ र कमलशीलले लेखेको त्यसको पञ्जिका समेत नेपालमा पाइएका थिए । तथा यसका मौलिक प्रतिहरू र पञ्जिका अहे यहाँ मौजूद छन्[3] ।

शान्तरक्षित इ. ७४३ मा तिब्बतबाट नेपालै फर्केका थिए[4] र यहीं बौद्ध धर्मको प्रचारमा लागे । उनकै सिफारिशअनुसार नालन्दा महाविद्यालयका अर्का गुरु पद्मसम्भव तिब्बत जान नेपाल आइपुगे । यहीं पद्मसम्भवको शान्तरक्षितसित भेटघाट भयो । उनी इ. ७४७ सम्म नेपालमै रहे[5] । यिनी तान्त्रिक बौद्धधर्म, योगाचार

१. H Hoffman– The Religions of Tibet [Eng. Translation by E. Fitzgerald, London, 1961, p. 40-3] & Rajendra Ram– A history Nepal, p. 32, 35.

२. एच्. डि. शङ्कलियाले यो ग्रन्थ शान्तरक्षितले इ. ७४० तिर लेखेका थिए भनेका छन् [The University of Nalanda, 1934, p. 122]। तर राजेन्द्ररामले उक्त तत्त्वसङ्ग्रहलाई अन्तिम रूप दिनुअगाडि शोध–पत्रको रूपमा नेपालका बौद्ध विद्वान् र दर्शकहरूको समक्ष प्रस्तुत गरेका थिए भनेका छन् [A History of Buddhism in Nepal, Patna, 1978, p 51]

३. Rajendra Ram– A History .....Nepal, p. 10.

४. D. L. Snellgrove– Buddhist Himalaya, London, 1957, p. 46.

५. L. A. Waddell– The Buddhism of Tibet or Lamaism, Lond., 1895, p. 27; B. Bhattacharya's Foreword to E. Krishnamacharya's Tattvasamgraha.

मतका प्राध्यापक थिए तथा दर्शन, तर्क र गुह्यविज्ञानका ज्ञाता पनि थिए[१]।

पद्मसम्भवलाई तन्त्रको ज्ञान भए तापनि तिब्बत र त्यहाँका धार्मिक सम्प्रदायहरूको ज्ञानको कमी भएकोले उनले नेपालका तिब्बतविद्हरूबाट ताजा जानकारीहरू लिन थाले। नेपालमै बसेर उनले तिब्बतबारे यथेष्ट ज्ञान हासिल गरे। तिब्बतबाट यहाँ आएका बौद्ध विद्वान्हरूसँग पनि उनी अटूट सम्पर्कमा रहे। अनेकौं चाडबाड, थितिरीतिले मनमोहक बनेको नेपालको बौद्ध वातावरण, बौद्ध धर्मप्रति लिच्छवि राजाहरूको उदार मनोभावना आदिको उनीमाथि गहिरो छाप पऱ्यो[२]। नेपालमा उनले याङ-ले-स्वेङ भन्ने चट्टाने गुफा [हेमराज शाक्य– श्री स्वयम्भू महाचैत्य, पृ. १२१ अनुसार, फर्पिङ शिखर नारायण]मा मण्डल साधन गरेका थिए र यो ठाउँको पनि ठूलो श्रद्धा गरिन्छ[३]। यहाँ रहँदा पद्मसम्भवले करवीर श्मशानमा श्मशान योग एवं फर्पिङ गोरखनाथ गुफा, तिष्ठुङ तमना ऋषीश्वर आदि स्थानमा पनि योग, ध्यान गरेको उल्लेख तिब्बती ग्रन्थहरूमा छ। यहीं उनले तान्त्रिक साधनाको अभ्यास गरेर आफ्नो 'वज्रकिल'–को बलले धेरै खराब शक्तिहरूमाथि विजय प्राप्त गरेका थिए[४]। उनले तिब्बतमा डाकिनीको

---

१. H. D. Sankalia- The University of Nalanda, Madras, 1934, p. 119; H. Hoffman– The Religions of Tibet etc , p. 57.

२. Rajendra Ram-- A History of Buddhism in Nepal, Allahabad, 1978, p. 41.

३. H Hoffman– The religions of Tibet (Eng. Trans ), 1961, p. 55.

४. The Blue Annals- (transtd & edtd. by G.N. Rocrich), Pt. I, p. 43.



रूपमा प्रयोग गर्न आफ्नै श्रीमती मन्दर्वा र दुई जना नेपाली महिला कालसिद्धि र शाक्यदेवीलाई यहीं तालिम दिए[१]।

प्राचीन बोन धर्मावलम्बी र बौद्ध धर्मका आदर्शवादीहरूबीच वैचारिक मतभेदको कारणले बराबर अन्योलमा परिरहने तिब्बती जनताको धार्मिक आवश्यकता पूरा गर्न पद्मसम्भवले आफूले पछि तिब्बतमा लागू गर्न खोजेको बौद्ध दर्शनको रूपरेखा काठमाडौंको सुप्रसिद्ध बौद्ध चैत्य भएको ठाउँ बौद्धमा तयार पारेका थिए। पद्मसम्भवको यही रूपरेखा तिब्बती बौद्ध धर्मको आधार बन्यो जुन पछि लामा धर्म पनि भनियो[२]। तसर्थ 'लामा धर्म' भनेको पद्मसम्भवले नेपालमा बसेर योजना गरेको प्राचीन बोन धर्म र वज्रयान अर्थात् तान्त्रिक बौद्ध धर्मको एउटा व्यावहारिक समन्वय हो[३]।

यी तथ्यहरूले नेपालले खेलेको त्यस्तो भूमिकाको विषयमा प्रकाश पार्दछ जसबाट पद्मसम्भवको लागि हिमालय भेकपारि बौद्ध धर्म फैलाउन प्रमुख दरिलो सैद्धान्तिक आधार तयार भयो। लामा धर्मको सिद्धान्त मूलतया नेपालले बौद्ध धर्मको हेतुको उत्तरोत्तर अभिबृद्धि गर्नामा खेलेको भूमिकाको अभिन्न अङ्ग

---

१. H. Hoffman- op. cit., & G.N. Rocrich- op. cit – idid

२. L. A. Waddell– op cit , pp 518–20; S. C. Das– Indian Pandits in the Land of snow, 1965, Cal. p. 49; H Hoffman– op. cit., pp. 59–64.

३. H. Hoffman- The Religions of Tibet, London, 1961, p. 14.

थियो[1] ।

पद्मसम्भवले आफ्नो जीवनको पछिल्लो भाग तिब्बती भाषा बोलिने नेपालको उत्तरी क्षेत्रमा बिताए । उनले सामान्य सङ्कटका समयहरूमा तिब्बती बौद्ध अनुयायीहरूलाई आफ्नो आध्यात्मिक पथ–प्रदर्शन निरन्तर प्राप्त भइरहोस् भन्ने हेतुले त्यस भेकतिर लामा धर्म लोकप्रिय बनाए[2] ।

कमलशील पनि नालन्दा महाविहारकै तन्त्र विद्याका प्राध्यापक थिए[3] तथा तिब्बत जाने क्रममा नै इ. ७६२ सालमा नेपालमा अडेका थिए । नेपाली बौद्धहरू नालन्दामा त्यस ताका सिकाइने नवीनतम विचारधारामा उनको प्रखर विद्वता देखेर निक्कै प्रभावित भए । उनले पनि पद्मसम्भवले जस्तै नेपालमा बसुञ्जेल एक विहारबाट अर्को विहारमा पुग्दै तिब्बती उपासक र भिक्षुहरूसँग सम्पर्क राखे तथा त्यस देशबारे धेरै ज्ञान हासिल गरे । आफ्ना पूर्वाधिकारीहरूकै बाटो अनुसरण गरी उनी यत्रतत्र विहारहरूमा आयोजना गरिने धार्मिक, सामाजिक जमघटहरूमा उपदेश दिने गर्दथे । नेपाली बौद्धहरूले पनि उनका गतिविधिहरूमा खूब चाख लिन्थे ।

यी तीनै जना बौद्ध गुरुहरूले नेपालमा आज जुन किसिमको बौद्ध धर्म मानिन्छ त्यसको विकासमा महत्त्वपूर्ण भूमिका खेलेका छन् । यहीं शान्तरक्षितले आफ्नो 'तत्त्वसङ्ग्रह'-लाई अन्तिम रूप दिएको बुझिन्छ तथा त्यसको 'पञ्जिका' (टीका) कमलशीलले लेखेका थिए । यी दुवै ग्रन्थका हस्तलिखित प्रतिहरू काठमाडौंमा

१. Rajendra Ram– A History of Buddhism in Nepal, 1978, p 43.

२. ऐ. ऐ, पृ. ४५

३. B. Bhattacharya's Foreword to Tattvasamgraha by E. Krishnamacharya, Baroda 1926 p. XIX.



पाइएको तथ्यबाट यी आचार्यहरूका सिद्धान्तहरू यहाँका बौद्धहरूमा व्यापक प्रचार भएको र लोकप्रिय बनेको जानकारी पाइन्छ । नेपाली बौद्ध समाजमा पद्मसम्भवको एक प्रमुख वज्रयानीआचार्यको रूपमा विशेष सम्मान भइआएको छ । वज्राचार्यहरूले पूजापर्वमा लाउने मुकुट उनै आचार्य पद्मसम्भवले लाउने गरेको उग्येन (उद्यां, उड्डीयान) टोपीको नकल हो भन्नु फरक पर्दैन[1] ।

नेपालमा शान्तरक्षितले त्यस बेला उदाइरहेको वज्रयानलाई झन दरिलो र लोकप्रिय बनाइदिए भने पद्मसम्भवले वज्रयान र तिब्बतको प्राचीन बोन धर्मको सम्मिश्रण गरेर लामा धर्मको सिर्जना पनि यहीं गरे । नेपाली बौद्ध धर्मको बौद्धिक पक्षले शान्तरक्षितबाट खँदिलो पुष्टि पाएको छ भने यसका पारम्परिक र आध्यात्मिक पक्षले पद्मसम्भबाट दरो टेवा पाएको छ । नेपाली र तिब्बती बौद्धहरूले शान्तरक्षितलाई 'आचार्य बोधिसत्व' बनाएका छन् भने पद्मसम्भवलाई अभिताभ बुद्धको सजीव मूर्ति, द्वितीय (ऐतिहासिक) बुद्ध बनाएक छन्[2] ।

बज्रयान दिनपर दिन प्रभावशाली हुँदै आइरहेको यही समय–आठौं शताब्दीको अन्ततिर नेपालको दक्षिणपूर्वतिर एउटा नयाँ धार्मिक अभियानमो प्रादुर्भाव भयो जुन नेपाल, भारतलाई ढाकेर वरपरका देशहरूलाई समेत गहिरोसँग प्रभावित पार्न सफल भयो । त्यस बेलादेखि बाह्रौं शताब्दीको अन्तसम्म जम्मा ८४ जना सिद्ध उदय भएको समय सिद्धाचार्य युग कहिएको छ । आदिम सिद्ध सरहयाद लगायत यी सिद्धहरूले विशिष्ट कामको लागि संस्कृत भाषाकोमात्र प्रयोग गर्ने, पठनपाठनको लागि ब्राह्मणमात्र अधिकारी

१. हेमराज शाक्य– श्रीस्वयम्भू महाचैत्य, पृ. १२१

२. B. Bhattacharya– Foreward to Tattvasamgraha, p. X; D. L. Snellgrove– Buddhist Himalaya, Lond., 1957, p. 151.

मान्ने आदि परम्परा तथा बौद्धभिक्षु–अनागारिकाहरूको जीवन–पद्धति विलासी बन्दै जानु, अनेकौं देवदेवताको कल्पना, मूर्तिपूजा, अवतारवाद, जातपात आदिको सरल जन–भाषामा रचिएको दोहा र चर्यागीतद्वारा गर्दथे । योगको अभ्यास पनि यिनीहरू गर्दथे र गराउँदथे । यस्तो यौगिक कार्यकलापले त्यस बेला हिन्दू र बौद्ध धर्ममा समावेश हुँदै आइरहेको तान्त्रिक प्रभावलाई अरू प्रभावशाली बनाउनामा सघायो ।

यी सिद्धहरू हठयोगी त छँदै थिए, साथै मद्य, मन्त्र, मुद्रा (साधनको लागि स्त्रीलाई सकार्ने काम)को विरोध गर्दैनथे । मद्य, मन्त्र हठयोग र स्त्री–यी चारै चीज घुसेर नै वज्रयानको मुख्य रूप बनेको उल्लेख माथि भइसकेको छ[1] । आदिम सिद्ध सरहपा नै शर (बाण) बनाउनेकी छोरीलाई आफ्नो 'मुद्रा' बनाएर जङ्गलमा बस्दथे । आफैले पनि वाण बराउन लागे । त्यसैले उनको नाउँ नै शरपाद ('सरहपा' जन-भाषामा) रह्यो[2] । तेस्रा सिद्ध विरूपा नालन्दामा मद्य, मैथुनको व्यवहार गर्न नपाएकाले त्याहाँबाट भागेको चर्चा माथि भइसकेको छ[3] । यसरी यी सिद्धहरूबाट वज्रयानको विकास र प्रचारमा ठूलो योगदान भयो ।

नेपालमा वज्रयान सम्प्रदायले प्रभाव जमाएको र त्यसको लागि सिद्धहरूले खेलेको भूमिकाबारे बाबुराम आचार्यले यसो लेखेका छन्:–

"महायान सम्प्रदायमा जादू–टुना तन्त्र-मन्त्र आदि घुसेर वज्रयान सम्प्रदाय खडा भयो । यस सम्प्रदायलाई फैलाउने अनेक शिद्ध भए । यिनमा एक जना गोरक्षनाथ र अर्का मत्स्येन्द्रनाथ नेपालमा

१. यसैको पृ. ८१ मा; राहुल सांकृत्यायन - पुरातत्त्व निबन्धावली, पृ. ११६
२. रा. साकृत्यायन– ऐ, पृ. १३८
३. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, १९५८, पृ. १४७



विशेष प्रसिद्ध भएका छन् छोटा छोटा मन्त्र जपेर हातका औंला-का मुद्राद्वारा अलौकिक सिद्धि पाउनु यस सम्प्रदायको उद्देश्य बन्यो । यस्तो सिद्धि पाएका महापुरुष सिद्ध कहलाए ...मन्त्र र योगबल-द्वारा अलौकिक चमत्कार देखाउनु यिनीहरूको सिध्याइँ थियो...... वज्रयान सम्प्रदायमा सदाचारको सिद्धान्त बदलिएर मद्यमांस आदिको व्यवहार गर्नु सदाचार बनेको थियो ..... यो सम्प्रदाय खडा हुनै लागेको समयमा सनातन धर्मको शैव सम्प्रदायबाट विकास भएर अर्को सम्प्रदाय निस्क्यो । मन्त्र ग्रन्थहरूमा यसको विधान लेखिएको हुनाले यसलाई तान्त्रिक सम्प्रदाय भन्ने चलन भएको छ । वज्रया-नको विधान लेखिएका ग्रन्थहरू पनि तन्त्र कहिएका हुनाले यो पनि तान्त्रिक सम्प्रदाय कहियो ... दुवै सम्प्रदायको प्रचार साथसाथै भयो "

[पूर्णिमा सं. ४८,४९, देवीप्रसाद भण्डारीद्वारा सम्पादित लेखबाट]

यी सिद्धहरू खूब घुमीघुमी हिंड्थे । यिनीहरू बंगाल, मगधदेखि नेपाल, तिब्बत लगायत अरू आसपासका देशमा पुगेका थिए । यिनीहरूमध्ये केही-उदाहरणार्थ आदिम सिद्ध सरहपा, गोरखनाथ (९ औं सिद्ध इ. ८५०–९०० ताकाका), मत्स्क्षेन्द्रनाथ (आठौं सिद्ध मीनपाका छोरा एवं गोरखनाथका गुरु), नागार्जुन[1] (सोह्रौं सिद्ध एवं आदिम सिद्ध सरहपा, इ. ७७५–८०० ताकाका शिष्य, रा. साकृत्यायन, पुरातत्त्व निबन्धावली, पृ. १२१) आदि नेपाल आएको उल्लेख प्राप्त नेपाली ग्रन्थहरूमा मात्र होइन नेपाल र तिब्बतको विशेष अध्ययन गरेका विदेशी लेखकले पनि गरेका छन् ।

१. नेपालमा आएका नागार्जुनलाई 'महासिद्ध' भनिएको एवं उनी स्वयम्भू-चैत्यमा पूजा गरिबसेको, शान्तिपुरभित्र पसेर नागसाधन विधि गरेको भन्ने लेखिएबाट [हेमराज शाक्य– श्रीस्वयम्भू–महाचैत्य, पृ. ८८] तथा उनले लेखेको नागार्जुनगीतिका, स्वसिद्धयुपदेश तन्जूरमा समावेश भएको [पुरा. निबन्धा. पृ., १६५ बाट यिनी सोह्रौं सिद्ध हुनुपर्दछ ।

नेपालमा केन्द्रविन्दु स्थापना गरेर सिद्धाचार्यहरू तिब्बतमा गए तथा नयाँ ढंगले सांस्कृतिक पुनरुत्थान गर्ने महान् कार्य पूरा गरे। यो कुरा नेपाल र तिब्बतमा पाइएका कतिपय हस्तलिखित लेखहरूबाट छर्लङ्ग हुन्छ[१]।

यसबारे एन्. सि. सिन्हा लेख्छन्, 'पूर्वी भारतका केही सिद्धहरू र तिब्बतमा रहेका रहस्यमय योगीहरूको बीच सक्रिय सम्पर्क रहेको कुरा अब ऐतिहासिक तवरले सत्य साबित भएको छ।'[२]

"यो अभियान ठूलो धार्मिक सम्मिश्रण नै भएका सिद्धाचार्यहरूको थियो। यसले हिन्दू धर्म र बौद्ध धर्म मिसिएको तान्त्रिक अभियानलाई चरम शिखरमा पुऱ्यायो।"[३]

आठौंदेखि बाह्रौं शताब्दीसम्म रहेको सिद्धहरूको युगमा तान्त्रिक अभ्यासहरू खुलेआम सकारिए र पालन गरिए।"[४]

आदिम सिद्ध सरहपा सहजिया (सहजयान) बौद्ध धर्मका संस्थापक थिए। उनी नेपाल आएकोबारे राजेन्द्र राम लेख्दछन्, "सरहपाद भारतको पूर्वी भेक र नेपालमा धेरै धर्म-गुरुहरूको सम्पर्कमा आएका थिए तथा उनले तिनीहरूलाई शास्त्रार्थमा हराएर सहजयानको श्रेष्ठता स्थापित गरे ... उनको जीवन-कालैमा लोक-

---

१. P.C. Bagchi- Dohakosa, JD4, Cal., 1935; Rajendra Ram-A History ... ...Nepal, 1978, p. 59

२. S.C. Das- The Indian Pandits in the Land of Snow, Introduction p. VII.

३. Buddha Prakash- Aspects of Indian History & Civilisation, 1965, p. 273

४. Shanti Bikshu- The Advent and Development of Tantric Elements in Buddhism, PIHC, 1951, p. 491.



भाषामा रचिएका उनका दोहा र चर्यापदहरू नेपाली बौद्ध समाजमा व्यापक तवरले गाइन्थे र उनीपछिका सिद्धहरूद्वारा पनि यो प्रचलन कायमै राखियो। पछि मध्ययुगमा कबीर र तुलसीदासका गीतहरू जस्तै बौद्ध सिद्धहरूका दोहा र चर्या नेपालका बौद्ध सम्प्रदायहरूमा घरघरै गाइने मुक्तक बने।"[१]

सरहपा जस्तै उनकै शिष्य सोह्रौं सिद्ध नागार्जुन पनि नेपाल आएको उल्लेख माथि गइसकेको छ। उनको देहान्त पनि यहीं भएको थियो भनिन्छ। अन्त्य कालमा उनी बसेको पर्वत उनकै नाउँबाट 'नागार्जुन' डाँडो कहिएको छ।

यी सिद्धाचार्यहरू नेपालमा खुब रमाए[२]। लोकप्रिय लय र बाजाको सुरमा सरल भाषामा रचिएका दोहा, चर्यागीत गाउँदै टोलटोल, गाउँगाउँ हीँड्ने यी सिद्धहरू र तिनका अनुयायीहरूद्वारा वज्रयान जनतामा राम्ररी पुग्यो। तान्त्रिक बौद्धधर्म पूर्वी भारतमा उदाएको भए पनि यसको पोषण र सम्भार नेपाली बौद्धहरूद्वारा भएको थियो[३]। यहाँ चर्यागीतहरू 'चचा' कहिए तथा यिनीहरूको गान-बजान सिद्ध युगमामात्र होइन आजसम्म पनि साँझ-बिहान, पर्वपर्वमा हुन्छ। नेपाली बौद्धहरूमा यी चर्याहरू दिन चर्याको अङ्ग बनिसकेका छन् भन्नु अत्युक्ति होओइन।

सिद्ध युगको प्रारम्भिक कालैमा भनेजसो नेपालमा भारत-

---

१. Rajendra Ram- A History of Buddhism in Nepal, p. 56, 59, 60

२. वि. भट्टाचार्यबाट राजेन्द्ररामले उद्धृत गरे अनुसरा, ऐ. पृ. १०

३. B. Bhattacharya (editor)- The Sadhanamala, 1925, Baroda, Vol. II बाट राजेन्द्ररामले लेखेअनुसार।

बाट शङ्कराचार्य आएको उल्लेख नेपालका केही वंशावलीहरूमा[1] र पौराणिक ग्रन्थहरूमा[2] गरिएको छ । नेपालमा आएर उनले पशुपतिको पुजारी फेरेको, बौद्ध धर्माधिकारीहरूलाई शास्त्रार्थमा परास्त गरेको, शास्त्रार्थमा हारेका बौद्धहरूलाई धर्म फेर्न लगाएको आदि कुराहरू समेत[3] लेखिएका छन् ।

---

१. उदाहरणार्थः–

(i) "यस दिनदेखि नेपालमा शिवमत, विष्णुमत, देवमत, वेदमत प्रबल गरी चलाया । अनेक पीठमा बडा बिध्न हुन्या कर्ममा पनि ठूलो कुल धर्म नाश गरी 'अहिंसा परमो धर्मः' भन्ने यस्तालाई पनि हिंसा क्रम लगाई चलाई गया । यस दिनदेखि जैनहरू कोही कोही मात्र रहे । यस्ता तरहसंग शङ्कराचार्य स्वामीले सर्व दिशा प्रदिशा पीठपीठमा जाई दिग्विजय गरी आफ्नू शङ्कर मत चलाया । श्री वज्रयोगिनका वचनले सिर्फ उत्तर दिशा मात्र छाडी दक्षिण समुद्रका तीरमा बस्न गया । शङ्कराचार्यले यति गरी गयाकाले नेपालमा अद्यापि पनि सबै मार्ग बराबरी छँदै छन् ।"

[एक राजवंशावली, प्राचीन नेपाल सं. ४, पृ. १०]

२. उदाहरणार्थः–

(ii) "यसपछि केही समयपछि श्रीउग्रतारा वज्रयोगिनी देवीको अगाडि क्षेत्रपाल भएर रहेकालाई एक दिन शङ्कराचार्य आएर हिंसा बनाएर पञ्चकपाल, अष्टकपाल चढाउनु पर्‍यो, यति नचढाई पूजा गर्नेको पूजाको फल निष्फल होस् भन्ने प्रतिज्ञा गरेर अहिंसाको (देवता)लाई हिंसा बनाएर थितिरीति बदलेर गए ।"

[वर्णवज्र वज्राचार्य– मणिशैल महावदान II, पृ. २५।२६, नेवारीबाट अनूदित]

३. "......... अवलोकितेश्वरको रूपमा पुजिने एवं बौद्धहरूको रेखदेखमा रहेको पशुपतिलाई उनीहरूको हातबाट खिकेर हिन्दू देवताको रूपमा पूजा गर्ने चलन चलाए तथा आफ्नै जन्मभूमि केरालाका ब्राह्मणहरूलाई पशुपतिनाथको पुजारीको रूपमा नियुक्त गरे ...... नेपाली विहारहरूमा नेपाली भिक्षुहरू इन्द्रिय भोगयुक्त जीवन बिताइरहेका थिए । शङ्कराचार्यले



हड्ज्सन र राइटले शङ्कराचार्यले नेपालमा बौद्ध ग्रन्थहरू जलाएको, शास्त्रार्थमा हारेका बौद्धहरूलाई मार्नामा पनि सघाएको कुरा लेखेका छन्[1] ।

स्वामी शङ्कराचार्यको मान्य समय इ. ७८८ देखि ८२० सालसम्म हो[2] । इ. ८००–१० ताका सम्पूर्ण भनेजसो उत्तर भारतमा बंगालदेखि गान्धार र बिन्ध्याचलसम्म पाल राजाहरूको धाकरवाफ जमेको थियो[3] । यिनीहरू बौद्धधर्मका उत्साही समर्थक

---

तिनीहरूलाई श्रावक चर्या र ब्रह्मचर्यामा मिथ्याचार त्याग्न बाध्य गरे । विहारका भिक्षु-भिक्षुणीहरूलाई विवाहित जीवन बिताउन बाध्य गरे । उपासक-उपासिकाहरूलाई ब्राह्मण धर्मका थितिरीतिहरू मान्न लगाए, जनैइ बाँध्ने, टुपी राख्ने, व्रतबन्ध गर्ने आदि चलन चलाए। मणियोगिनी (सांखु) टुंडिखेलस्थित महाकालको पूजाआजा पनि ब्राह्मण धर्मअनुसार गर्ने रीत चलाउन लगाए ।"

[D. Wright– History of Nepal, Cal , 1958, 2nd edition, p 70–72]

१. B. H. Hodgson– Essays on the Language, Literature and Religion of Nepal and Tibet, Lond., 1874, pp. 18, 48; D Wright– History of Nepal, Cal., 1958, pp. 70-72; Rajendra Ram– A History ..... Nepal, 1978, Allahabad, pp 69-72

२. K.P. Pathak– Date of Sankaracharya, Ind. Antq., 1882; W Logan– The Date of Sankaracharya, I.A., 1887, p. 161– यी लेखकहरूको मन्तव्य जे. एन्. फार्क्वहर, आर. सि. मजुमदार, राहुल सांकृत्यायनका खोजबाट पनि पुष्टि भएको छ [राजेन्द्रराम– A History ..... Nepal, पृ. ६४] ।

३. इ ७९०–९५ ताका गौड (बंगाल) का राजा गोपालले मगध जितेर विहारमा उडन्त (ओदन्त) पुरी महाविहारको स्थापना गरिसकेका थिए । नालन्दा महाविद्यालय त अगाडिदेखि थियो । उनका छोरा राजा धर्मपालले इ ८१० सालमा कन्नौजका राजा इन्द्रायुधलाई खोसेर चक्रायुधलाई राजा बनाएका थिए ........ ..........यिनको

थिए । नालन्दा, ओदन्तपुरी, विक्रमशिला महाविद्यालयहरू त्यस बेला तान्त्रिक बौद्ध धर्म अर्थात् वज्रयानका एकदम प्रभावकारी केन्द्र थिए । त्यतातिर शङ्कराचार्यले केही गरेको चर्चा इतिहासमा भेटिन्न । नेपालमा चाहिं उनी राजा वरदेवको राज्यकालमा दुई पटक आए भनेर वंशावलीहरूमा लेखिएको छ शङ्कराचार्यले भारतमा आफू गएगएको प्रमुख धार्मिक स्थल–बद्रीनाथ, शृङ्गेरि, द्वारका, पुरीमा शङ्कर मठ अर्थात् अद्वैत केन्द्र स्थापित गरे । तर यहाँ भने कुनै मठ खोलेको चर्चा भेटिएको छैन ।

जहाँसम्म सिल्भान लेभि, बलदेव उपाध्याय, प्रतापादित्य आदि विदेशी लेखकहरूको भनाइ छन् ती अधिकांश मात्रामा हड्ज्सन र डा. राइटका लेखहरूमा आधारित छन् । यससम्बन्धी राइटको सम्पूर्ण विवरणको आधार नै उनको हातमा परेको वंशावली थियो वंशावलीहरू एक त भरपर्दा ऐतिहासिक सामग्री होइनन्, दोस्रो राइटको वंशावलीमा त खास गरेर इतिहाससित मात्र होइन सम्भावनासितै मेल नखाने सम्राट् अशोकको काठमाडौं

प्रभाव इ. ८१० सालको यताउति उत्तरपश्चिममा गान्धारसम्म फैलिएको थियो । उनको राज्य उत्तरमा दिल्ली, जालन्धर र दक्षिणमा विन्ध्याचल पर्वतसम्म पुगेको थियो [L. Mukherjee– History of India, Hindu Period, पृ. १५७] । चौसठ्ठी वर्षको लामो राज्यकाल [राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, पृ. ११९, १२० अनुसार इ. ७६९–८०९; तर भि. स्मिथ, एल् मुखर्जी ऐ., पृ १५७ अनुसार इ. ७९५–८५९ सम्म]मा भागलपुरमा विक्रमशिला महाविहार र महाविद्यालय खोल्ने यी राजा धर्मपाल नै थिए । नालन्दा, उडन्तपुरी, विक्रमशिला महाविद्यालयहरूबाट बौद्धधर्मको प्रचार जोडतोडसँग भइरहको थियो । धर्मपाल आफ्नो कुलका सबै सदस्यहरू जस्तै बौद्ध थिए......पालहरूको बौद्धधर्म गौतमले सिकाएको धर्म वा दर्शनभन्दा निक्कै फरक भइसकेको थियो र महायान धर्मको भ्रष्ट रूप थियो [V. Smith– Early History of India, Oxford, 1924, पृ. १८३, १८५ ] ।



आगमन जस्ता विवरणहरू छन्[१] । त्यसैले उनको वंशावलीमा लेखिएका कुराहरू झनै होशियारीसाथ केलाउनु आवश्यक छ ।

फेरि स्वामी शङ्कराचार्यले बौद्ध धर्मावलम्वीहरूमाथि शानदार विजय प्राप्त गरे, राजा सुधन्वामार्फत बौद्धहरूलाई कत्लेआम गराउन लगाए भन्ने कुराहरू मिथिलाका प्रकाण्ड विद्वान् वाचस्पतिले 'शङ्कर-भाष्य'–को टीका 'भामती' एवं आनन्दगिरी र माधवाचार्यले 'शङ्कर-दिग्विजय' शीर्षक ग्रन्थ लेखिसकेपछि प्रचारमा आएका हुन् भनिन्छ[२] ।

माथि पाद टिप्पणीमा दिइएको एउटा राजवंशावलीबाट झिकिएको उद्धरणमा परेको 'शङ्कराचार्य स्वामीले ...पीठ-पीठमा जाई दिग्विजय गरी' भन्ने शब्दहरूको पनि उपर्युक्त 'शङ्कर-दिग्विजय' शीर्षक पुस्तकसँग सम्बन्ध देखिन्छ ।

इत्यादि बुंदाहरूमा सन्तुलित रूपले विचार गर्दा शङ्करा-चार्यको प्रसङ्ग वंशावलीमा लेखिएको वा विदेशी लेखकहरूले लेखेको रूपमा यकीन ठम्याउन मिल्दैन । शङ्कराचार्यको यौवनावस्था शुरू भएको समय र माथि पादटिप्पणीमा सङ्केत गरिएअनुसार सम्पूर्ण उत्तर भारतमा वज्रयानी सम्प्रदायलाई पाल राजाबाट प्रोत्साहन मिलिरहेको समय उही ताका परेकोले पनि उनी दुई पल्ट नेपाल आएको र उनले यहाँ बौद्धहरूको घोर दमन गरेको भन्ने प्रसङ्ग विना अन्वेषण मान्य सम्झन सकिन्न । स्वामी शङ्कराचार्य यहाँ उपत्यकामा आए भन्ने कुरा पनि भगवान् बुद्ध अथवा सम्राट् अशोक आए भने जस्तै मात्र हुन सक्छ ।

यहाँ आएकै भए पनि शङ्कराचार्यले आफ्नै अद्वैतमत प्रचार गरे हुनन् जसबाट सनातन धर्मको पुनरुत्थानतिर केही सघाउ

१. यसैको 'अशोक काठमाडौं आए भन्नेबारे' शीर्षक परिच्छेद, पृ. ६४–७२
२. राहुल सांकृत्यायन– 'भारत में बुद्ध धर्मका उत्थान और पतन' शीर्षक लेख ।

पुग्यो होला । तर शयौं वर्ष अगाडिदेखि जग लिइसकेको बौद्ध धर्मको शङ्कराचार्यबाट उथलपुथल भयो होला भन्ने सम्झनु वस्तुस्थितिसित मेल खाएको देखिन्न । उनको समय अर्थात् इ. ८२० सालपछि पनि यहाँ बौद्धहरू धेरै सङ्ख्यामा रहेकै देखिन्छन् । उनको अन्तर्गत यहाँ धार्मिक मनोमालिन्य भइहालेको भए पनि कट्टर व्यक्तिहरूमा मात्र सीमित थियो होला यहाँ रहिआएको धार्मिक सहिष्णुताको परम्परा शङ्कराचार्य युगभन्दा अगाडि र पछाडि पनि कायमै देखिन्छ र बिविध धर्मावलम्बी जनता शान्तिपूर्ण सह-अस्तित्वमा रहेकै थिए ।

८४ सिद्धमध्ये कोही कोही नेपालमा आएकोबारे माथि गरिएको चर्चामा गोरखनाथ, मत्स्येन्द्रनाथको नाउँ उल्लेख भएको छ । नवौं शताब्दीमा ती ८४ मध्येकै केही सिद्ध- जालन्धर-या (४६), चर्पटी (५६), [१]कण्हपा (१७) हरूबाट एउटा अलगै सम्प्रदाय खडा भएको थियो जुन 'नाथ सम्प्रदाय'[२] कहियो । शङ्करा-चार्य र प्रारम्भिक मध्ययुगी भारतीय इतिहासको भक्ति अभियानको बीचमा योग-मार्गको सबभन्दा ठूलो धार्मिक आन्दोलन गोरखानाथले नै छिडेका थिए[३] । ८४ मध्ये नवौं सिद्ध गोरखनाथ मह़ीनाथ

१. गौडका राजा देवपाल (रा. सांकृत्या. अनुसार इ. ८०९-८४९, तर भि. स्मिथ, एल् मुखर्जीअनुसार इ. ८५९-८९९) को समकालीन ।

२. "नाथपन्थ चौरासी सिद्धोंसे ही निकला है ...... 'गोरक्षसिद्धान्तसंग्रह' में 'चतुरशीतिसिद्ध' शब्दके साथ गोरक्ष, चर्पट, जालन्धर, कण्हपा सिद्धोंका नाम लिखा गया है । इससे चौरासी सिद्धों और नाथ पन्थके सम्बन्धमें सन्देह की कोई गुञ्जायश नहीं रहजाति । विचारों में यद्यपि अब नाथपन्थ अनीश्वरवाद छोडकर ईश्वरवादी होगया है; तथापि अब भी उसकी वाणियों में छानबीन करने पर निर्वाण, शून्यवाद और वज्रयानका बीज मिलेगा ।"

[रा. साकृत्या.- पुरा. निबन्धा., पृ. १३२-१३३]

३. हजारिप्रसाद द्विवेदी- नाथ सम्प्रदाय, इलाहाबाद, १९५०, पृ. ५४, ९६



सम्प्रदायका थिए । यिनका गुरु मत्स्येन्द्रनाथ आठौं सिद्ध मीनपाका छोरा थि. । मीनपा र गोरखनाथ ८४ सिद्धमा गनिएका छन् । तर मत्स्येन्द्रनाथ तिनमा गनिएका छैनन् । यसको कारण उनी ८४ सिद्धदेखि भिन्ननाथ-सम्प्रदायी मात्र भएकोले हुनुपर्दछ । जे होस् मीनपा (मीननाथ) र मच्छिन्द्रपा (मत्स्येन्द्रनाथ) दुवै कामरूप (आसाम)का मछुवा[१] थिए तथा दुवै सिद्ध भएका थिए । मत्स्येन्द्र शुरूमा तान्त्रिक बौद्ध र पछि शैवी योगी भएका थिए[२] । शैव धर्मबाट शक्ति पूजातिर सङ्क्रमण गरेको योग-संस्कृति मत्स्येन्द्रनाथ-ले प्रचार गरेका थिए[३] । आठौं शताब्दीदेखि दशौंसम्म शिवलाई शक्तिसहित पूजा गर्ने संस्कृतिको उदय भएको थियो[४] । मत्स्येन्द्रनाथ नेपाल आएर कौलाचार मत प्रचार गरेका थिए । उनले लेखेका 'महाकौलज्ञानविनिर्णय' र 'कानाख्यागुह्यतन्त्र' ग्रन्थहरू आज पनि वीर पुस्तकालयमा मौजूद छन्[५] । आजकाल मत्स्येन्द्रनाथलाई बौद्ध-हरूले अवलोकितेश्वर र हिन्दूहरूले शिवको रूपमा पूजा गर्ने चलन-को पृष्ठभूमि उनी प्रारम्भमा तान्त्रिक बौद्ध र पछि शैवी योगी भएको तथ्य देखिन्छ ।

१. "मीननाथ और मत्स्येन्द्रनाथ ..... कामरूपके मछुवे थे ...... (मत्स्येन्द्र) मछलीके पेट में १२ वर्ष रहे । फिर आचार्य चर्पटी के पास गये ......दोनो ही सिद्ध हो गये ....... बाप (हुआ) सिद्ध मीनपा और बेटा सिद्ध मछिन्द्रपा ।"

[रा. सांकृत्या.- पुरातत्त्व निबन्धावली, पृ. १३४]

२. N. K. Sahu- Buddhism in Orissa, Cuttack, 1958, p. 174.

३. V. W. Kerambelkar- Matsyendranath and His Yogic Cutt, IHQ, Vol. XXXI, No. 4, 1955, p. 362; Rajendra Ram- A History ... ...Nepal, p. 80

४. R. C. Majumdar- History of Bengal, Vol. I, p. 343

५. सत्यमोहन जोशी- नेपाली राष्ट्रिय मुद्रा, १९५३, पृ. १६, पाद टि. ॥

गोरखनाथ पनि प्रारम्भमा रमणवज्र नाउँ गरेका बौद्ध भिक्षु थिए[१]। उनो नाथपन्थी योगी बन्दा नेपाली बौद्धहरूले उनलाई विधर्मी पनि भनेका थिए[२]। आफ्ना गुरुले झैं उनले पनि केही अदलीबदलीसहित तन्त्रयानको प्रचार गरेका थिए। यो विशिष्ट किसिमको नयाँ धर्म हठयोग, रसायन मत र बौद्धतन्त्रको सम्मिश्रण थियो[३]। उनले आफ्नो धर्मको हेतुको लागि नेपालका समकालीन शासकहरूलाई खुशी पारी बौद्ध धर्मबाट शैवी धर्ममा सङ्क्रमण गरे[४]। उनले योगाभ्यासमा जोड दिए तथा योगीहरूको सम्पर्कमा रहेका गृहस्थीहरूको समर्थन गरे। गहन विद्वत्ता, भ्रमण अनुभव, जन-भाषामा रचिएको 'सबदी' र उच्च योगका आदर्शहरूको कारण उनले विभिन्न सम्प्रदायका मानिसहरूलाई एउटै सूत्र-योगमा बाँध्न सके। उनले नेपाली बौद्ध धर्मका दार्शनिक सम्पतिबाट फाइदा उठाए[५]।

आफ्ना गुरु मत्स्येन्द्रनाथलाई भेट्ने मनशायले गोरखानाथ उपत्यकामा आएर मृगस्थली वनमा नवनागहरूलाई आसनमुनि

१. H. P. Sastri- Modern Buddhism & Its Followers in Orissa, पृ. ९ बाट राजेन्द्ररामले A History ....... Nepal, पृ. ८१ मा उद्धृत गरे अनुसार।

२. N. K. Sahu- Buddhism in Orissa बाट राजेन्द्ररामले उद्धृत गरे अनुसार, ऐ.- पृ. ८१

३. R. M. Nath- The Background of Assamese Culture र पिताम्बर बरथ्वाल- 'गोर्खावाणी'-बाट राजेन्द्ररामले उद्धृत गरेअनुसार, ऐ. ऐ.

४. हजारिप्रसाद द्विवेदी- मध्ययुगीन धर्मसाधन, इलाह., १९५२, पृ. ७४-७५

५. Rajendra Ram- A History of Buddhism in Nepal, 1978, p. 83



थुनेर तपस्या गरेपछि खडेरी परेको, राजा नरेन्द्रदेव[१] र आचार्य वन्धुदत्तले मत्स्येन्द्रनाथलाई कामरूपबाट ल्याएर नागहरूलाई बन्धनमुक्त गरेपछि पानी परेको, मत्स्येन्द्रनाथलाई यहीं राखेको

१. राजा नरेन्द्रदेवः- स्वयम्भू-पुराण र केही वंशावलीहरूमा गोरखनाथ-मत्स्येन्द्रनाथको आगमन राजा नरेन्द्रदेवको राज्यकालमा भएको थियो भनिएको छ। नेपालको इतिहासमा नरेन्द्रदेव नाउँ भएका राजा दुई जना बढी चर्चित छन् एक जना ह्लासाबाट आएर इ ६४३-६८१ सम्म राज्य गर्ने नरेन्द्रदेव तथा अर्को इ. ११४३-४५ ताका राज्य गर्ने नरेन्द्रदेव।

ऐतिहासिक तवरले गोरखनाथ- मत्स्येन्द्रनाथ नवौं शताब्दीका भएकाले ती दुईमध्ये कुनैको पनि राज्यकालमा यिनीहरू आएको कुरा मिल्दैन।

सिल्भान लेभीले आफ्नो नेपालको इतिहासमा के लेखेका छन् भने राजा नरेन्द्रदेवले आफ्ना छोरा वरदेवलाई गद्दी छाडिदिएका थिए। मत्स्येन्द्रनाथ लिन जाने कामको लागि राजा वरदेव कम उमेर र चञ्चल स्वभावको कारण योग्य नभएकाले अवकाश लिइसकेका बूढा राजा नरेन्द्रदेव नै गएका थिए [Sylvain Levi- Le Nepal, प्राचीन नेपाल, अङ्क ५३-५६, अंग्रेजी खण्ड, पृ. १८]।

यस सम्बन्धमा गोपाल वंशावली, नेपाली राजवंशावलीमा शिवदेव (जो द्वितीय देखिन्छन्) पछि र नेपालराजनामा वंशावली, राजभोगमाला वंशावलीमा वीरदेवपछि तथा चारै वटामा वरदेवको अगाडि 'नरेन्द्रदेव' नाउँ दिइएको छ [शङ्करमान राजवंशी- लिच्छवि-संवत्को निष्कर्ष, पृ. ५५]। हुन सक्छ मत्स्येन्द्रनाथ ल्याउने राजा यी नरेन्द्रदेव नै थिए र यिनैका छोरा वरदेवको राज्यकालमा यो घटना घटेको थियो। यी वरदेवको राज्यकाल अरू ऐतिहासिक घटनाको विचार गर्दा नवौं शताब्दीको पूर्वार्धमा पर्न आउँछ। लेभिले उल्लेख गरेको वंशावलीमा लेखिएको नरेन्द्रदेव- वरदेवको क्रम र उपर्युक्त चारै वंशावलीमा दिइएको क्रम ट्वाक्कै मिल्छ।

यसैले वरदेवको अगाडि नरेन्द्रदेव नाउँका अर्का एक जना राजा भएको सम्भावना देखिन्छ। यसबारे अरू अन्वेषण हुनुपर्दछ।

स्वयम्भू-पुराण र वंशावलीहरूमा वर्णित कथाहरू यहाँको तत्कालीन स्थितिमा टिक्न सक्ने गरी कथिएका बाहिर एउटा अर्थ भित्र अर्कै अर्थ भएको धार्मिक कथा हुन्[१]। उनी सम्भवतः ८५० देखि ९०० इ. सम्म नेपालमा बसेका थिए[२]। नागबन्धनसम्बन्धी गोरखनाथ–मत्स्येन्द्रनाथको प्रचलित कथाबाहेक गोरखनाथ–पन्थी योगीहरूले उहिले नै गोर्खामा स्थापित गरेको शिलापत्रसहितको मूर्ति[३], त्यही आधारमा श्री ५ द्रव्यशाहले नयाँ गाउँ बसालेर राखेको नाउँ 'गोर्खा', गोरखनाथ-पन्थी कनफट्टा योगीहरूको आजसम्मको मनग्गे उपस्थिति आदि यथार्थताले नै नेपालमा त्यस वेला भएका सिद्ध गोरखनाथका गतिविधिहरूबारे गवाही दिइरहेकै छ। बुङमती, चोभार, काठमाडौं र नालाका मछेन्द्रनाथ–मूर्तिहरूको स्थापना गोरखनाथबाटै भएको एवं रथ–यात्रा पनि उनैल प्रारम्भ गरेका थिए भनिएको छ[४]। जे होस् चोभारको आदिनाथ, पाटन (बुङमती) का मत्स्येन्द्रनाथ मीननाथ, काठमाडौंको श्वेतमत्स्येद्रनाथ, भक्तपुरको मत्स्येन्द्रनाथ, नालाको मत्स्येन्द्रका मूर्तिहरूको स्थापना नाथपन्थीहरूको प्रभावको द्योतक भइआएको छ।

तर यी नाथपन्थीहरूको प्रभाव धेरै समयसम्म यथावत् रहन सकेन। केही कालपछि नै यी नाथपन्थी गुरुहरू अवलोकितेश्वर वा लोकेश्वर बनाइए। यसै क्रममा चोभारको आदिनाथ (जो ८५ सिद्ध-हरूमा ४६ सौं र नाथपन्थीहरूका आदिम गुरु मानिएको छ[५])

---

१. Rajendra Ram– A History of Buddhism in Nepal, p. 79.

२. ऐ. ऐ., पृ. ८४

३. बाबुराम आचार्य– श्री ५ बडामहाराजाधिराज पृथ्वीनारायण शाहको सङ्क्षिप्त जीवनी, पृ. ३–४

४. D. Wright– History of Nepal, 1958, p. 89; Raj. Ram– op. cit., p. 79-80

५. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, १९५७, पृ. १३२–३



आनन्दादि लोकेश्वर, बुङमतीको मत्स्येन्द्रनाथ पद्मपाणि लोकेश्वर, पाटनको मीननाथ (कामरूपका मछुवा एवं मत्स्येन्द्रनाथका पिता) सिद्धिकान्त वा जटाधारी लोकेश्वर, नालाको मत्स्येन्द्रनाथ सृष्टिकान्त लोकेश्वर र काठमाडौंको सेतो मत्स्येन्द्रनाथ अमोघपाश लोकेश्वर भनिए र त्यही त्यही रूपमा ती मूर्तिहरू पुजिए।

जसरी मुखाष्टमीको दिन पशुपतिनाथलाई बुद्ध मुकुट पहिऱ्याएर बुद्धकै रूपमा पूजा गरिन्छ त्यसरी नै पाटनका मीननाथ र मत्स्येन्द्रनाथलाई शिवरात्रीको दिन महादेवको पोशाक लगाएर पूजा गर्ने परम्परा आजसम्म कायम छ। यो चलन माथि चर्चा गरिए अनुसार नाथपन्थी गुरु मत्स्येन्द्रनाथ र गोरखनाथ बौद्ध धर्म अर्थात् वज्रयानबाट शैव सम्प्रदायतिर सङ्क्रमण गरेको तथ्यको द्योतक देखिन्छ।

फेरि, काठमाडौं टोलमा रहेको 'मरु सतल'–मा अनेकौं बौद्ध मूर्तिहरूको साथ गोरखनाथको पनि मूर्ति रहनाको कारण गोरखनाथ र अरू पनि नाथपन्थी सिद्धहरूको बौद्ध धर्मसँग रहेको घनिष्ठता नै हुनुपर्दछ।

नेपालमा छैटौं शताब्दीदेखि देखापरिसकेको वज्रयानी सम्प्रदाय आठौं-नवौं शताब्दीमा एकातिर शान्तरक्षित, पद्मसम्भव, कमलशीलका दर्शनबाट प्रभावित भएर, अर्कोतिर सिद्ध र नाथ-पन्थीहरूको संसर्गबाट खारिएर, आफ्नै ढंगले हुर्कंदै थियो। यही ताका नेपाल बाहिर दक्षिण-पूर्व नालन्दा, ओदन्तपुरी, विक्रमशिला महाविहारहरूमा पाल राजाहरूको सहयोगले बौद्ध धर्मको, विशेष गरेर, वज्रयानको बोलवाला चरम शिखरमा पुग्दै थियो। यी केन्द्रहरूमा नेपाली बौद्धहरूको सजिलो आवत-जावत थियो। फेरि तिब्बतबाट त्यता जान खोज्ने वा त्यहाँबाट तिब्बत जान खोज्नेहरू-को जाने-आउने बाटो नै नेपाल थियो। यही ताका नेपाली बौद्धहरू काश्मीरका बौद्धहरूको पनि सम्पर्कमा आए।

तिब्बत र उत्तरपूर्वी भारतमा जाने-आउने क्रममा दशौं–एघारौं शताब्दीमा धेरै बौद्ध अधिकारीहरू तिब्बत र भारतबाट नेपालमा आउने-जाने गर्न लागेका थिए । तिब्बती ग्रन्थहरूमा यसरी नेपालमा आउने-जाने गर्नेहरूमा भारतबाट आएका वज्रपाणि आदि, नेपालबाट तिब्बत जानेहरूमा महाकरुणा आदि एवं तिब्बतबाट नेपालै आएका वा भारत जानालाई यहाँ अडेका ब्रोगिम, बर्त् सङ्–ग्र् स, मा-र्पा दो-पा आदि र त्यस ताकाका नेपाली बौद्ध विद्वान् फाम्-म्थिन–पा, धर्ममति, दुस्–खोर्पा, थान्–चुङ–पा, भदन्त, बोधिभद्र, शून्यश्री, द्ज–हुम्, वागीश्वर, शान्तिभद्र, इन्द्ररुची आदि-का नाउँहरूको लामो सूची नै दिइएको छ[1] । इ. ९६० ताका कि–येको नेतृत्वमा भारत आएको ३०० चिनिया भिक्षुहरूको एउटा धार्मिक शिष्टमण्डल लुम्बिनी हुँदै स्वदेश फर्कन काठमाडौंमा आएको थियो[2] ।

यसरी इसवीको दशौं–एघारौं शताब्दीमा नेपालमा आएका विदेशी बौद्ध आचार्यहरूमा सबभन्दा प्रभावकारी अतिशा दीपङ्कर श्रीज्ञान थिए । उनी विक्रमशिला महाविहारका एक शीर्षस्थ आचार्य थिए । तिब्बत जाने क्रममा उनी ५९ वर्षको उमेरमा इ. १०४१ मा नेपालमा आएर केही महीना यहाँ उपत्यकामा बसेका थिए ।

तिब्बती ग्रन्थहरूबाट अतिशा दीपङ्कर यहाँ रहँदा उनले स्वयम्भू-चैत्य दर्शन गरेको, यहाँका राजा अनन्तकीर्तिलाई 'दृष्ट औषधि' नाउँको हात्ती एउटा हत्तियार नबोकाउने, सत्कार्यमा मात्र

१. G. N. Rocrich– The Blue Annals, Part I, 1949, p 380

२. Sylvain Levi– Le Nepal, Part I, p. 206; R. S. Pandit– Rajatarangini, Allahabad, 1935, p. 170 (Note pp. 152, 155), राजेन्द्ररामले उद्धृत गरे अनुसार ।



प्रयोग गर्ने शर्तमा उपहार दिएको, एउटा विहार बनाउन राजासँग गरेको अनुरोधअनुसार उहिले काश्यप बुद्धले स्तूप बनाएको भनिएको ठाउँमा 'स्थम विहार' बनाएको, राजाको इच्छाअनुसार राजकुमार-लाई प्रव्रजित गरेको आदि कुराको जानकारी पाइन्छ[1] ।

यहाँ बसुन्जेल दीपङ्कर श्रीज्ञानले ठाउँ-ठाउँमा बौद्ध भिक्षु-भिक्षुणी, उपासक-उपासिकाहरूको भेला गराएका थिए । उनको उपदेश बौद्धहरूले समयको सदुपयोग गर्ने, नियमित दिन-चर्या पालन गर्ने, सप्ताङ्ग-पूजा गर्ने, प्रज्ञापारमिताका चर्या, बौद्ध सूत्र, महायानका परम्परागत मान्य शिक्षा जस्ताको व्याख्या आदिमा केन्द्रित हुन्थ्यो । उनी नेपाली बौद्धहरूलाई अरूहरूको धर्मशास्त्रप्रति सन्मान देखाउनामा पनि जोड दिन्थे ।

दीपङ्करको नेपाल प्रवासकालमा भएको एउटा महत्त्वपूर्ण घटना 'कालचक्रयान' संस्कृतिको संस्थापन हो[2] ।

यहाँ उल्लेखनीय अर्को घटना दीपङ्करले यहाँ बस्दा 'चर्यासङ्ग्रह–प्रदीप' लेख्नु हो । खास गरेर नेपाली बौद्धहरूको हेतुको लागि नै लेखिएको यो ग्रन्थमा उनले नेपाली समाजमा निकै व्याप्त भइसकेको तान्त्रिक अभ्यासहरूका नराम्रो पक्षको भण्डाफोर र भर्त्सना गरेका छन् ।

तर अतिशाले यहाँ बस्दा गरेका कामहरूमध्ये सबभन्दा महत्त्वपूर्ण उनले त्यस वेला यहाँ प्रचलित विभिन्न सम्प्रदायहरूसित समन्वय हुने गरी बौद्ध सम्प्रदायलाई दिशा-बोध गरिदिएकोलाई मान्नु पर्दछ ।

१. दीपङ्करसम्बन्धी यहाँ दिइएको जानकारी धेरैजसो G. N. Roerich– The Blue Annals, राहुल सांकृत्यायनका कृतिहरू, A. Chattopadhya– Atisa and Tibet, Rajendra Ram– A History...... Nepal बाट लिइएको हो ।

२. P. Thomas बाट राजेन्द्ररामले ऐ., पृ. ११६ मा उद्धृत गरेअनुसार ।

दशौं–एघारौं शताब्दीसम्ममा नेपाली बौद्ध समाजमा बाहिरिया प्रभावहरू पर्न लागिसकेका थिए । शान्तरक्षित, पद्म-सम्भव, कमलशीलले यहाँ वज्रयानलाई दरिलो त बनाएका थिए । तर लगत्तै पछि भने जसो सिद्धाचार्यहरूले बौद्धहरूलाई आफ्नै तालले प्रभाव पारिरहेका थिए । नाथपन्थीहरूले कापालिक, शाक्त, कौल, लोकायत, सौर, गाणपत्य, चीनाचार आदि विभिन्न मतालम्बीहरूलाई योगाभ्यासको एक सूत्रमा बाँधिदिए[1] । तान्त्रिक विधिसहितको शैवशाक्त मतले पनि आफ्नो प्रभाव जमाउँदै थियो । यही वेला विदेशी विद्वान्‌हरूको पनि आवत–जावत बढिरहेको थियो । यी सबै गतिविधिहरूले कुनै न कुनै रूपमा बौद्ध विचार-धारा, रीतिरिवाजमा असर पारिरहेका थिए । शैव, शाक्त तान्त्रिक र वज्रयानी तान्त्रिक विचारधाराको सम्मिश्रणको प्रक्रिया शुरू भइसकेको थियो ।

फेरि तान्त्रिक प्रभावमा परेर भनौं वा सिद्ध यौगिक प्रभाव-मा परेर भनौं वज्राचार्यहरूको संघीय चर्या पनि खुकुलिंदै थियो । जनतामा प्रभाव पार्ने उद्देश्यले वज्रयान अन्तर्गत अनेकौं तान्त्रिक अभ्यासहरू प्रचलनमा ल्याइएका थिए । शीलयुक्त जीवन पद्धति विलाउँदै थियो । सङ्क्षेपमा त्यसताका नेपाली बौद्ध धर्मले कोल्टे फेर्दै थियो । तर बौद्ध धर्मका विभिन्न पक्षको सामयिक ज्ञानमा पोख्त भएका धुरन्धर विद्वान्‌हरूको कमी भने यहाँ थिएन जससँग अध्ययन गर्न विदेशी विद्वान्‌हरू समेत ओइरिन्थे । तीमध्ये केहीको नाउँको चर्चा माथि भइसकेको पनि छ । फेरि कतिले त महत्त्वपूर्ण बौद्ध ग्रन्थहरू लेख्थे वा सार्दथे जसमध्ये केही वीर पुस्तकालयमा सङ्कलित पनि थिए । तत्कालीन बौद्ध विद्वान्‌हरू कोही कोही बौद्ध धर्ममा भित्र र बाहिर आइपरेका नयाँ विचारधाराको राम्रो

१. रांगेय राघव– गोरखनाथ और उनका युग, १९६३, पृ. १५२–५६; Rajendra Ram– op. cit. p. 85.



अध्ययन गर्न एवं नेपाली बौद्ध धर्मको परम्परागत स्थिति र शुद्धि कायम राख्न तत्पर थिए हुनन् ।

यहाँ यस्तो स्थितिबाट बौद्ध धर्म गुज्रिरहेको वेला दीपङ्कर आएका थिए । उनको अगाडि यहाँको बौद्ध धर्म जुन रूप र स्थितिमा प्रस्तुत भयो तिनबाट यसको परम्परागत तरीकाले विकसित हुँदै आइरहेको विलक्षण स्वरूप बुझ्न उनलाई समय लागेन । उनी बौद्ध दर्शनको साथै अरू कतिपय दर्शनका पनि ज्ञाता भएकाले उनले यहाँ जे जति उपदेश दिए वा गरे त्यो यहींको बौद्ध धर्मको यथार्थ अवस्था सुहाउँदो थियो । दीपङ्करले यहाँ खेलेको भूमिका तिब्बतमा खेलेको भूमिकाभन्दा बिलकुल फरक भएको तथ्यबाट पनि यस विषयमा प्रकाश पर्दछ[1] ।

आजकाल पनि नेपाली बौद्धहरूमा प्रचलित सम्यक्, पञ्च-दान, नवदान आदि प्रथा दीपङ्कर श्रीज्ञान यहाँ आएको वेलादेखि चलेको देखिन्छ । यी पर्वहरूमा दीपङ्कर मूर्तिको प्राधान्य हुन्छ ।

उनीपछि तिब्बतका गुरु मिलरेपाले (इ. १०५२–११२३) इ. १०६० ताका नेपालमा आएको अवसरमा उत्तरी हिमाली भेकका डाँडाकाँडा, गुफा-खोंच घुमेर धर्मप्रचार गरेका थिए । शान्तरक्षित, कमलशील, दीपङ्करको प्रभाव बढी मात्रामा उपत्यका-मा देखिएको छ भने पद्मसम्भव र मिलरेपाको चाहिं बढी मात्रामा उत्तरी भेकमा देखिएको छ । उत्तरी भेकका लामा धर्मावलम्बी बौद्धहरूको एउटा सम्प्रदाय नै मिलरेपा सम्प्रदाय कहिएको छ ।

त्यसताका यहाँ प्रचलित बौद्ध धर्म वास्तवमा भिन्नभिन्न युगमा आइपरेका अनेकौं विषम परिस्थिति र जटिल समस्याहरूबाट खारिंदैखारिंदै विकसित भइरहेको थियो । त्यस वेला यसको विशिष्ट

१. ए. गेटी र अलका चट्टोपाध्यायका कृतिहरूबाट राजेन्द्ररामले उद्धृत गरेअनुसार; ऐ. पृ. ११६.

स्वरूपको खाका बन्दै थियो । अरू धर्मावलम्बीहरूसित समन्वय, सहअस्तित्व र सद्भावना कायम राख्दै आफ्नै ढङ्गले हुर्कने क्षमता यसमा अङ्कुरित भइसकेको थियो । यही ताका वज्रयानी बौद्ध धर्मले यहाँ लिएको मूल रूपलाई पछि विदेशीहरूले 'नेपाली बौद्ध धर्म' भन्ने संज्ञा दिए । तेह्रौं शताब्दीको हाराहारीमा भारतमा भएको मुसलमानी हमलापछि नेपालले बौद्धधर्मको एक प्रमुख केन्द्र बन्ने सुअवसर पाउँदा "नेपाली बौद्ध धर्म"– लाई बढी प्रचार र प्रगति गर्ने मौका मिल्यो । तर यसको रूपरेखा त्योभन्दा अघि नै कोरि ;को थियो ।

सारांशमा नेपालमा नै बसेर शान्तरक्षित, कमलशील र अतिशा दीपङ्कर श्रीज्ञानले उपत्यका भेकतिर अनुष्ठान गरिने वज्रयानी बौद्ध धर्मको तथा पद्मसम्भव र मिलरेपाले उत्तरी हिमाली भेकमा पालन गरिने लामा धर्मको मूल स्वरूपको निर्धारणमा गरेको विशिष्ट योगदान नेपालमा बौद्ध धर्मको विकासको इतिहासमा विशेष रूपले उल्लेखनीय भइरहनेछ ।



# वज्रयानको एक झल्को

वज्रयान महायानअन्तर्गत हुर्केको बौद्ध तन्त्रमन्त्रकै उग्र रूप हो । पहिलो बौद्ध सङ्गीति (इ. पू. ३८३) बाट छुटिएका महासाङ्घिकहरूको 'धारणीपिटक'–मा मन्त्रका सूत्रहरू सँगालिएको, इ. द्वितीय-तृतीय शताब्दीमा लेखिएको 'मञ्जुश्रीमूलकल्प'–मा मन्त्र, धारणीहरूमात्र होइनन् मण्डल र मुद्रा समेतको चर्चा गरिएको तथा 'गुह्यसमाजतन्त्र'बाट पनि देखिएअनुसार बौद्ध तान्त्रिक पद्धतिले इसवी तृतीय शताब्दीमा नै निश्चित रूप लिइसकेको सम्भावना छ[१] । बौद्ध तन्त्रको प्रचलन नेपालमा कहिलेदेखि हुन थालेको हो यकीन गर्नाको आधार हुन सक्ने ऐतिहासिक सामग्री अहिलेसम्म भेटिएको देखिन्न । नेपालमा प्राप्त शिलापत्रअनुसार शिवदेव द्वितीयको राज्यकाल (इ. ६९८ ताका) मा गोर्खामा 'वज्रभैरव'–को[२] स्थापना भइसकेको थियो । यो 'वज्रभैरव' हेरूक, अचल जस्तै उग्र स्वभावका बौद्ध तान्त्रिक देवता हो । इसवी छैटौं–सातौं शताब्दीमा यहाँ तान्त्रिक वज्रयानले राम्ररी जरो गाडिसकेको, शान्तरक्षित, पद्मसम्भव र कमलशील जस्ता वज्रयानी गुरुहरूले आठौं शताब्दीमा,

---

१. Lama A. Govinda– Foundations of Tibetan Mysticism, 1977 Ind. edn , p. 94.

२. प्रस्तुत पुस्तकको पृ. ८३.

नागार्जुन, मत्स्येन्द्रनाथ, गोरखनाथ जस्ता सिद्ध र नाथपन्थी गुरुहरू-ले नवौं शताब्दीमा तथा दीपङ्कर श्रीज्ञान जस्ता आचार्यले एघारौं शताब्दीमा यहीं बसेर एवं नयाँ नयाँ ग्रन्थ लेखेर यसलाई बढी लोकप्रिय र व्यापक बनाउन उल्लेखनीय योगदान गरेको आदिबारे अघिल्लो परिच्छेदमा चर्चा भइसकेको छ ।

यस वेलासम्म नेपालमा प्रचलित वज्रयानी बौद्ध धर्ममा महायान, मन्त्रतन्त्रयान, कालचक्रयान[1] मतहरू समाविष्ट भइसकेका थिए । यसको मतलब यहाँ अनेकौं बुद्ध, बोधिसत्त्व र तिनका स्त्री रूपहरूको र तिनीहरूका मूर्तिहरूको निर्माण भइसकेको थियो तथा जन्त्र, मन्त्र, मुद्रा, जप–ध्यानसहितको उपासना चलिसकेको थियो । महायानअन्तर्गत ऐतिहासिक शाक्यमुनि बुद्ध लोकोत्तर बनाइनु, पञ्च तत्त्व, पञ्चस्कन्द, पञ्च इन्द्रिय आदिका प्रतीक अलौकिक पञ्च बुद्ध, अनेकौं बोधिसत्त्व, शाक्य मुनिबाहेक अरू मानव बुद्ध-हरूको कल्पना गरिनुको साथै योगाचारका प्रचारक असङ्गल पाँचौं शताब्दीमा नै के सिकाएका थिए भने महायान सूत्र र अरू सूत्रहरू-बाट लिइएका धारणी र मन्त्रहरूको पाठ सङ्गीत र मुद्राहरूसित मिलाएर गर्नाले एक किसिमको समाधिको चरणमा पुगिन्छ जसबाट अलौकिक सिद्धिहरू प्राप्त हुन्छन्[2] । यसबाट के कुरा प्रष्ट हुन्छ भने

१. कालचक्रयान मन्त्रयानबाटै इ ९६५ ताका नेपाल, उत्तर भारत, काश्मीर-मा विकसित भएको एउटा उग्र तान्त्रिक मत हो । यसमा आदि बुद्धको पनि स्त्री रूपसहित धेरै देवदेवीको कल्पना गरिएको छ । यिनीहरूलाई खुशी राख्न थरी-थरीका खाद्य पदार्थ, भोग्य वस्तु, बलिसहितको पूजा, होम आदि गरिन्छन् [L. A. Waddell- The Buddhism of Tibet or Lamaism, 1978, N. Delhi, पृ. १४, १५, १३१, ३४८] ।

२. बौद्ध धर्ममा योग संस्कृतिको प्रवेश गराउने असङ्ग नै थिए । उनको योगाचार मत पतञ्जली (इ. १५० ताका)का योगसम्बन्धी सिद्धान्तबाट प्रभावित थियो [L. A. Waddell- The Religion of Tibet, 1978, पृ. १४४–५] ।



असङ्गको समय (इ. चौथो–पाँचौं शताब्दी)मा तान्त्रिक अभ्यास व्यापक बनिसकेको थियो र त्यसको प्रचारमा उनको पनि हात थियो । लामा अनागारिक गोविन्दले पनि यसो लेखेका छन्, "तन्त्रयानको यो सार विज्ञानवादी र योगाचारीहरूको शिक्षा र धार्मिक अभ्यासहरूबाट उत्पन्न तर्कगत आवश्यकताबाट विकसित भएको (उही महायान बौद्धमतको अघिल्लोले सैद्धान्तिक वा दार्शनिक पक्षमा बढी र पछिल्लोले क्रियात्मक पक्षमा बढी जोड दिन्छन्) हो । सम्पूर्ण भारतलाई भयङ्कर छालले जस्तै छोप्दै आएको संसारसम्बन्धी तान्त्रिक धारणाले हिन्दू र बौद्ध धर्मभित्र उत्तिकै छिचोलेर तिनीहरूमा परिवर्तन ल्याइदियो तथा तिनीहरूका विभेदहरू धेरै जसोलाई मेटिदियो ।"[1]

शक्ति उपासनाअन्तर्गत प्रकृतिका विभिन्न भौतिक, शरीर विज्ञान, नैतिक, बौद्धिक शक्तिहरूको भिन्नाभिन्नै देवता बनाइए । यिनीहरूलाई माता (मातृका), डाकिनी, योगिनी, वाराही, हेरुक, हेवज्र, अचल (चण्डमहारोषणी) आदि नाउँ दिइए[2] । शक्तिशाली मानिएका यी देवदेवीहरूको उपासना विधिहरू बने एवं तिनीहरूको विधिवत् उपासनाबाट भक्तहरूलाई इच्छित सिद्धि प्राप्त हुने विश्वासको पनि विकास भयो । बौद्ध देवताहरूको शान्त रूपको साथै क्रोधी रूपहरू पनि बनाइए । यिनीहरू क्रूरे, डाढे, अनिष्टकारी स्वभावका मानिएकाले यिनीहरूलाई विशेष पूजाद्वारा सधैं सन्तुष्ट राख्नु आवश्यक सम्झिइयो । यिनीहरूबारे अनेकौं आख्यान र थरी-थरीका उपासना विधि, रीतिथिति कायम

१. Lama A. Govinda– Foundations of Tibetan Mysticism, 1977, पृ. ९३–९४

२. L. A. Waddell– The Religion of Tibet, 1978, पृ. १२९

गरिए[१] ।

इ. ७०० ताका योग ध्यानको अभ्यास र धारणी–मन्त्रहरू-को जप-पाठले ऋद्धि-सिद्धिहरू प्राप्त गर्न सकिन्छ, आपद्विपद्बाट बच्न सकिन्छ भन्ने आदि विश्वास जमिसकेको थियो । यस्ता ऋद्धि-सिद्धिहरूको प्राप्ति सच्चा योगी वा अर्हत्को आवश्यक गुण मानिएको थियो । "काल्पनिक बुद्ध वज्रसत्त्वबाट प्राप्त भएको ज्ञानअनुसार भनी मन्त्रयानअन्तर्गत यो पनि ठोकुवा गरिएको थियो कि बुद्धत्वसम्म पनि ६ तत्त्वले युक्त भएको वर्तमान शरीरमै काय, वाक्, चित्तसम्बन्धी तीन महान् गुह्य (चित्त = जन्त्र, मण्डल; वाक् = मन्त्र; काय = आसन, मुद्रा) धर्म पालन गरेर प्राप्त गर्न सकिन्छ ।"[२] साधकहरूले यस्ता क्रूर देवदेवी आदि र तिनीहरूका विहित मन्त्र, मण्डल, मुद्राहरूको सहाराले सिद्धि वा कुनै वाञ्छित उद्देश्य प्राप्त गर्ने चेष्टा गर्दथे[३] ।

अब नेपाली बौद्धहरुले अनुष्ठान गरे अनुसार वज्रयानको दार्शनिक र व्यावहारिक पक्षको सङ्क्षेपले चर्चा गरौं ।

सर्वप्रथम वज्रयानमा प्रयुक्त 'वज्र' शब्दबारे नै विचार गरौं । 'वज्र' शब्दको विभिन्न अर्थ लगाइएको पाइन्छ । इन्द्रको हतियार वज्र कहिन्छ । देवराज इन्द्रले धारण गर्ने यो आयुधको काम दुइटा मानिएको छ– नाश गर्ने र उज्यालो दिने । वज्रयानमा समावेश गरिएको 'वज्र' शब्दको पनि दुइटा काम देखाइएको छ -एउटा अज्ञान नाश गर्ने र अर्को ज्ञानको प्रकाश दिने । अज्ञान, आस्रव, तृष्णा आदि सबै सांसारिक अनिष्ट वस्तु र दुर्वृतिलाई

१. L A. Waddell– The Religion of Tibet, 1978, पृ. १५, १४२–३

२. ऐ. ऐ.– पृ. १४४–५ & Lama Govinda-Foundations of Tibetan Mysticism, p. १२

३. L. A. Waddell– ऐ. ऐ., पृ. १५, १२९, १४३, १५१–२ आदि ।



नाश गर्नु र निर्वाण दिलाउने बोधिज्ञानरूपी उज्यालो दिनु यो वज्रको काम बताइन्छ ।

वज्रको अर्थ हीरा पनि हुन्छ । हीराले अरू जुनसुकै पदार्थ-लाई काटेर टुक्रा पार्न सक्छ, तर यसलाई अरू पदार्थले काट्न सक्तैन । बोधिज्ञानको यस्तो सर्वोत्कृष्ट गुण र महत्त्वलाई बुझाउन पनि यो 'वज्र' शब्दको प्रयोग गरिएको हुनुपर्दछ । वज्रासन, वज्रज्ञान, वज्रयान, वज्रछेदिका आदि शब्दहरूले हीराकै अर्थ वा गुणतिर सङ्केत गर्दछ ।

यो वज्र दोस्रो ध्यानी बुद्ध अक्षोभ्यको बोधिसत्त्व वज्रपाणि-को दाहिने हातमा धारणा गरिने हतियार पनि हो ।

वज्र अर्को अर्थमा बोधिज्ञान वा शून्यता हो । बौद्ध धर्ममा जीवन वा सार भन्नु नै बोधिज्ञानको आन्तरिक अनुभव हो, आर्य सत्य, अष्टाङ्गिक मार्ग, प्रतीत्यसमुत्पाद आदि सूत्रहरूको ज्ञानमात्र होइन । यदि कुनै व्यक्तिले बोधिज्ञान आफूभित्र अनुभव गर्दछ र क्रियात्मक रूपले आत्मसात गर्दछ भने उसले बौद्ध धर्मको रहस्य सम्पूर्ण जानेको हुन्छ, सांसारिक जीवनको मूल समस्याको समाधान पाएको हुन्छ र ऊ बुद्ध नै भइसकेको हुन्छ । बोधिज्ञान भनेको शब्दको माध्यमले बयान गर्न सकिन्न, बौद्धिक तर्कवितर्कले भेटिन्न । बोधिज्ञान शून्यता हो, शून्यताको दार्शनिक दृष्टिले आफ्नै आन्तरिक स्वरूपलाई चिन्नु हो । यो शून्यता हामीहरूमा निहित रहेको हुन्छ, तर हाम्रा ध्यान, चिन्तन, तृष्णाका लहरहरू अनियन्त्रित तवरले सबैतिर दौडिरहने हुनाले हामीले यसलाई आफूभित्र अनुभूत गराउन निक्कै परिश्रम गर्नुपर्दछ । वज्र भनेको यही बोधिज्ञान वा शून्यता हो[१] । बोधिचित्त नै वज्र हो । सबै प्राणीहरूप्रति महाकरुणा दर्शाउने बोधिचित्त नै वज्र हो[२] । यो पूर्णताको अवस्थालाई सहजयान सम्प्रदायका सिद्धहरूले 'सहजावस्था', स्थविरवादीहरूले 'निर्वाण',

१. तिलोपा– अचिन्त्यमहामुद्रा

२. इन्द्रभूति– ज्ञानसिद्धि

वज्रयानीहरूले 'महासुख', 'सुखराज', 'महामुद्रा–साक्षात्कार' आदि भन्छन्। यही अवस्थालाई वज्रयानी चित्र वा मूर्तिहरूमा युगल-रूप मूर्तित गरिएको हुन्छ[1]।

यसरी बौद्ध धर्ममा वज्र सर्वोच्च आध्यात्मिक शक्तिको अर्थात् बोधिज्ञानको प्रतीक मानिएको छ।

'वज्र' शब्दको व्याख्या गर्दै बलदेव लेख्छन्, "यस मनोरम धर्मको नाउँ वज्रयान हो। यस सम्प्रदायले 'शून्यता'–को साथसाथ 'महासुख'–को कल्पना गरेको छ। 'शून्यता'–कै नाउँ वज्र हो। वज्र कहिले पनि नाश हुँदैन, त्यो दुर्भेद्य अस्त्र हो। वज्र, दृढ, सार, अशौर्य, अच्छेद्य, अभेद्य, अदह्य, अविनाशी हो (वज्रशेखर–अद्वयवज्र सङ्ग्रह)। अतः त्यो शून्यताको प्रतीक हो। यो शून्यता 'निरात्मा' हो– त्यो देवी रूप हो जसलाई बेसरी अँगालो हाल्नामा मानव चित्त (बोधिचित्त या विज्ञान) सधैं बद्ध रहन्छ तथा यो युगल मिलन सबै समयको लागि सुख तथा आनन्द उत्पन्न गर्दछ। अतः वज्रयानले शून्यता, विज्ञान तथा महासुखको त्रिवेणीको संगम बनेर असंख्य जीवहरूको कल्याणको बाटो उन्मुक्त गरेको छ।"[2]

नेपालमा 'वज्र' शब्दको उपर्युक्त अर्थको साथै 'प्रज्ञोपायात्मक अनुत्तरसिद्धि, सहजसुखमय अवस्था' आदि पनि भनिन्छ। वज्रयान-भित्र तन्त्रयान, मन्त्रयान, सहजयान, कालचक्रयान, महायान तथा प्रज्ञायान, सिद्धियान, साधनयान आदि पनि समावेश गरिएको छ[3]।

'वज्र'–को अर्थ जे जति लगाए पनि वर्तमान नेपाली बौद्ध समाजमा यो वज्र वज्रयानको प्रमुख चिह्न भएको छ जसको प्रयोग

---

१ बलदेव उपाध्याय– बौद्धदर्शन, पृ. ४३८। यसबारे यसै परिच्छेदमा पछाडि पनि चर्चा गरिएको छ।

२. ऐ. ऐ. पृ. ४२८

३. हेमराज शाक्य– नेपाली संस्कृतिया मू लुखा, पृ. ७४–७५



जुनसुकै धार्मिक कर्मकाण्डमा नगरी हुन्न। यतिको महत्त्वपूर्ण मानिएको वज्रको प्रतीकको रूपमा यहाँका वज्राचार्यहरूले प्रयोग गर्ने 'वज्र' नै कहिने सामानको मध्यम अङ्ग कलशको प्रतिनिधित्व गराउन गोलाकार गरिएको हुन्छ. त्यसबाट अष्टदल पद्मको प्रतीक आठआठ वटा दल कलशाकार भाग दुवैतिरबाट छरिएर गएका हुन्छन् र तिनीहरूबाटै दुवैतिर चुच्चिएका पाँचपाँच वटा चुच्चाको छेउमा जोरिएका हुन्छन्। वज्रका यी अङ्गप्रत्यङ्गहरू प्रत्येक कुनै न कुनै वज्रयानी दर्शनको विचारको प्रतीक हो र अर्थपूर्ण हुन्छ।

वज्रयानी दर्शन के दावी गर्छ भने यसले बुद्धको नित्य सारभूत भावलाई सैद्धान्तिक बाह्यावरणबाट छुट्ट्याएर जस्ताको तस्तै धारण गर्दछ। यसअनुसार वज्रयानी बौद्ध धर्म एउटा सक्रिय शक्ति हो जसद्वारा आध्यात्मिक अभियान क्रियात्मक अनुभवद्वारा अगाडि बढाइन्छ। तन्त्र-मन्त्र, योग आदि वज्रयानका प्रमुख एवं गहन पक्ष हुन्। क्रियात्मक अनुभव र दर्शनको पारस्परिकता तन्त्रद्वारा मात्र प्राप्त गर्न सकिन्छ। अनुभव दर्शनको साथसाथै अर्थात् आध्यात्मिक अनुभव दर्शनद्वारा अभिव्यक्त र समर्थित हुनुपर्दछ। दर्शन एकले मात्र धर्म वा आध्यात्मिक अभियानको सजीवताको कारण बन्न सक्तैन। जीवनको अर्थ क्रियाशील हुनु हो, केवल विचारशील मात्र हुनु होइन।

तसर्थ वज्रयानको प्राण र स्वत्व आर्य सत्य, अष्टाङ्गिक मार्ग द्वादशनिदान, अनात्मन, निर्वाण आदिको उपदेशमात्र होइन। यिनीहरू निःसन्देह विशिष्ट पथ-प्रदर्शक खम्बाको रूपमा ज्यादै महत्त्वपूर्ण छन्। तर बौद्ध जीवनको अन्तिम लक्ष्य स्वत्वको शुद्धिकरण तथा अज्ञान र तृष्णाको जुवाबाट अन्तिम छुटकारा हो। यतिकै लागि सम्बोधिज्ञानको नाउँले पुकारिने बुद्धको आन्तरिक अनुभूतिको आवश्यकता पर्दछ।

बौद्ध तन्त्रअनुसार बुद्धका उपदेशहरू निरन्तर एकनाश रहने सकारात्मकता हुन्, नकारात्मकता होइनन्, अक्षुण्ण उज्ज्वल सम्पन्नता हुन्, अँध्यारो खोक्रोपना होइनन्, अटल आनन्द हुन्, सारहीन नैराश्य होइनन् । यिनले संसारलाई इन्कार गर्दैनन्, बरु अत्यन्त सकारात्मक तवरले र विनाशर्त संसारलाई सकार्दछन् । अनि यही सांसारिक जन्म-मरणबाट सदाको लागि मुक्ति दिलाइदिने सम्बोधिज्ञानको बाटो खोल्न तन्त्रवादले पुरुष र स्त्रीको बीच हुने स्वाभाविक मानवीय प्रेमबाट शुरू गर्दछ । स्वत्व र अज्ञानको घेरा तोड्न सबभन्दा ठूलो मौका मानिसलाई लिङ्ग-प्रेमबाट मिल्दछ । यो विषम-लिङ्ग प्रेमबाट मानिसहरूलाई स्वत्वको स्वार्थ त्याग्न र अन्ततोगत्वा आफूलाई बिर्सन सहायता गर्दछ । तन्त्रवादअन्तर्गत 'महासुख'-लाई महामुद्रा अर्थात् लिङ्ग र योनिको मिलनको चिह्न-द्वारा प्रदर्शित गरिन्छ । यो चिह्न एउटा वस्तुगत, व्यावहारिक, मानवमात्रमा व्याप्त र भौतिक रूपले अनुभव गर्न सकिने विषय हो । तर वास्तवमा यो इन्द्रिय सुखभोगको चिह्न होइन । त्यसमा लठ्ठिने मानिसको लागि यसले अलिकता पनि सघाउँदैन । स्वत्वलाई बिर्सेको खण्डमा विश्वव्यापी मानवीय प्रेमको प्रतीक यो चिह्न अर्थपूर्ण र आदर्शमय हुन्छ ।

योनि त्यो प्रज्ञा वा सर्वोत्तम ज्ञानको प्रतीक हो जसलाई जीवनमा आत्मसात् गर्नाको मतलब सम्यक् सम्बोधि प्राप्त गर्नु हो । उपाय विश्वव्यापी करुणाको अर्थमा लिइएको छ र यसको प्रतीक लिङ्ग मानिएको छ । कर्म-बोधक प्रज्ञा जुनकुनै क्रियाको लागि साधन बन्दछ र जसबाट कुनै पनि वस्तुको सिर्जना हुन्छ- यस्तो विश्वव्यापी स्त्री-तत्त्वलाई विश्वव्यापी प्रेम र करुणाको प्रतीक कर्ताबोधक गतिशील पुरुषतत्त्व उपायसित संयोग गर्नाले परिशुद्ध बुद्धत्वको प्राप्ति हुन्छ । अनुभूति वा भावना विनाको बुद्धि, प्रेम विनाको ज्ञान, करुणा विनाको बिवेकले नकारात्मकतातिर,



आध्यात्मिक रिक्ततातिर लैजान्छ तथा विना विवेकको भावना, विना ज्ञानको प्रेम, विना समझदारीको करुणाले अन्योल र विघटन-तिर लैजान्छ । तर जहाँ कि दुवै पक्षको योग भएको छ, जहाँ हृदय र मस्तिष्कको, भावना र बुद्धिको, सर्वोच्च प्रेम र गहनतम ज्ञानको उदय भएको छ त्यहाँ पूर्णताको स्थापना हुन्छ, सम्यक् सम्बोधि ज्ञानको प्राप्ति हुन्छ ।

बौद्ध तन्त्रमा बोधिज्ञानको प्रक्रियाको प्रतीक पारस्परिक प्रेमको आनन्दमा लीन पुरुष र स्त्रीको संयोग जस्तो कल्पना गर्न सकिने जतिमा सर्वाधिक मानवीय र सर्वव्यापक सङ्केतलाई बनाइएको छ जसअन्तर्गत कर्ता-बोधक तत्त्व उपाय पुरुष रूपद्वारा र कर्मबोधक तत्त्व प्रज्ञा स्त्री-रूपद्वारा प्रतिनिधित्व गरिएको छ । तान्त्रिक सङ्केतअन्तर्गत बोधिज्ञान प्राप्त गर्ने व्यक्ति जसरी लोग्ने र स्वास्नी प्रेमको आलिङ्गनमा एक हुन्छन् त्यसरी नै प्रज्ञाको आलिङ्गनमा लीन हुन्छ, एक हुन्छ, आत्मसात् गर्छ । यही क्रिया सर्वोच्च, अवर्णनीय सुख, महासुख हो र यसैलाई बौद्ध तन्त्र अर्थात् वज्रयानले सर्वोतम सुखको रूपमा सर्वसाधारण जनताको लागि लागि कबूल गर्दछ ।

ध्यानी बुद्धहरूलाई सम्यक् सम्बोधिस्वरूपा देवीको रूपद्वारा सङ्केत गरिएका आ-आफ्ना प्रज्ञाको अँगालोमा मूर्तिय गर्नाको मतलब यही हो ।

तान्त्रिक साधकको लागि योगाभ्यास अनिवार्य हुन्छ । तन्त्रको साङ्केतिक भाषामा 'हठ-योग'-को मतलब 'ह' (चन्द्र) र 'ठ' (सूर्य)को योग (मिलन) हो[१] । चन्द्र-सूर्य वा इडा-पिङ्गला नाडी वा प्राण- अपान वायु जुन नाउँ राखे पनि ब्रह्माण्डमा सक्रिय रहेका दुइटा द्वन्द्वात्मक- बनाउने (सृष्टि गर्ने) र बिगार्ने (संहार गर्ने)शक्तिहरूका प्रतीक हुन् । यिनीहरूका एकले अर्कालाई उछिनेर

१. बलदेव उपाध्याय- बौद्धदर्शन, पृ. ४३७

आफूतिर खिच्ने प्रकिया सदैव क्रियाशील रहन्छ । प्राणीहरूको सापेक्षमा यो प्रक्रिया प्राण र अपान वायुको रूपमा रहन्छ । जीवन भनेकै यी प्राण र अपान वायुको पारस्परिक संघर्ष र खिचातानी हो । योगीको परम कर्तव्य नै यी चन्द्र र सूर्य, प्राण र अपान, इडा (बायाँ नाडी) र पिङ्गला (दायाँ नाडी)-- दुई विरोधी शक्तिहरूको समीकरण गर्नु हो जसबाट इडा र पिङ्गलाको बीचमा रहेको सुषुम्णाको द्वार खोलिन्छ । यही द्वारको सहाराबाट प्राणवायुको ऊर्ध्वगति क्रिया अर्थात् प्राण वायुलाई माथि लंजाने काम योगीको परम लक्ष्य हो । सुषुम्णाको बाटो नै मध्यम मार्ग, शून्य पदवी आदि कहिन्छ[1] ।

उपर्युक्त बायाँ र दायाँ पक्षको समीकरण भएपछि मध्यमावस्थाको प्रादुर्भाव हुन्छ । यही पूर्णरूपले विकसित मध्यमावस्था नै महासुख हो । पुरुष र स्त्री (प्रज्ञा र उपाय को पारस्परिक आलिङ्गन द्वारा सङ्केत गरिएको यो युगल रूप नै महासुख, सहजावस्था, निर्वाणको द्योतक हो । यसरी तान्त्रिक भाषाको महासुख वा महामुद्रा योग, ध्यानको प्रक्रियामा पुरुष-गुण र स्त्री-गुणको योग हो । पञ्चस्कन्दको सजीव शक्ति वास्तवमा बुद्ध गुणको पुरुष तत्त्व हो र बायाँ नाडी इडा यसको प्रतीक मानिएको छ । पञ्च तत्त्वको सजीव शक्ति वास्तविक अर्थमा बुद्ध-गुणको स्त्री-तत्त्व हो जसको प्रतीक दायाँ नाडी पिङ्गला मानिएको छ । जब यी दुई गुणको सम्मिश्रणसहितको सजीव शक्ति मझौला नाडी सुषुम्णाभित्र फर्कदछ तब बिस्तारै बोधिज्ञानको उदय हुन थाल्दछ । अनि पुरुष-तत्त्व र स्त्री-तत्त्व- उपाय र प्रज्ञाको योग- महामुद्राको अलौकिक स्थितिमा साधक पुग्दछ- यही बौद्ध साधनको सर्वोच्च चरण बुद्धत्व हो ।

यसरी त्यस वेलामात्र साधकले बुद्धत्वको भूमिमा पुग्न सक्छ

१. बलदेव उपाध्याय- बौद्ध दर्शन, पृ. ४३७-८



जब उसले शरीर र मनको, भौतिक र आध्यात्मिक क्रिया-प्रतिक्रियाको सम्बन्धलाई विश्वव्यापी परिप्रेक्षमा महसूस गर्दछ तथा म, मेरो भन्ने आ-आफ्नो छुट्टा छुट्टै व्यक्तित्वको भ्रान्तिलाई पैदा गर्ने स्वत्वमा केन्द्रित भावना, मन्तव्य र पूर्वाग्रहहरूको सिङ्गो बनौटलाई हटाउन सक्छ ।

बौद्ध तन्त्रको सम्बन्धमा यो पनि स्मरणनीय हुन्छ कि साधकको लक्ष्य प्रज्ञा अर्थात् सम्यक् सम्बोधिको प्राप्ति हो, शक्ति अथवा अरू कुनै सांसारिक वस्तुको उपलब्धि होइन । तृष्णामा आधारित सांसारिक उपलब्धिहरूकै कारण मानिस जीवन-मरणको चक्रमा घुमिरहनुपर्ने हुन्छ । यस्ता सांसारिक वस्तुहरूको अस्तित्वलाई बौद्ध तन्त्रले अस्वीकार त गर्दैन तर तिनीहरूलाई ज्ञानरूपी आगोमा नरम हुने गरी पोलेर बोधिज्ञान प्राप्तिको लागि सहायक उपकरणमा रूपान्तर गर्न खोज्दछ । बौद्ध तन्त्रले सृष्टि र संसारको प्रसार गर्नेतिर होइन असृष्ट, अरूप र नित्यतातिर फर्कने लक्ष्य राख्दछ जुन सृष्टिभन्दा अगाडिको र परको शून्यताको स्थितिमा छ । यही शून्यताको चेतनाले युक्त हुनु सर्वोत्तम बोधिज्ञान हो ।

बौद्ध तन्त्रअन्तर्गतको उपर्युक्त महामुद्रा योनि र लिङ्गको मिलनको चिह्न वा स्त्री देवतालाई अँगालो हाल्ने चिह्न आदिको कडा आलोचना पनि भएको छ । फेरि कतिपय बौद्ध तान्त्रिक ग्रन्थहरूमा बाहिरबाट अनैतिक, दूषित अर्थ निस्कने रचनाहरू पाइन्छन् । उदाहरणको रूपमा तल केही यस्ता रचनाहरू उद्धृत गरिएका छन्:

"प्राणिनश्च त्वया घात्या वक्तव्यं च मृषा वचः ।
अदत्तं च त्वया ग्राह्यं सेवनं योषितामपि ।।
अनेन वज्रमार्गेण वज्रसत्त्वान् प्रचोदयेत् ।
एषो हि सर्वबुद्धानां समयः परमशाश्वतः ।।"

"दुष्करैनियमैस्तीव्रैः सेव्यमानो न सिध्यति ।
सर्वकामोप भोगांस्तु सेवयंश्चाशु सिध्यति ।।
विण्मूत्रशुक्ररक्तानां जुगुप्सां नैव कारयेत् ।
भक्षयेत् विधिना नित्यं इदं गुह्यं त्रिवज्रजम् ।।"

[गुह्यसमाज तन्त्र, गा. ओ. सि., बडौदा]

"जनयित्रीं स्वसारं च स्वपुत्रीं भागिनेयिकाम् ।
कामयन् तत्त्वयोगेन लघु सिध्येद्धि साधकः ।।"

[अनङ्गवज्र– प्रज्ञोपायविनिश्चयसिद्धि, गा. ओ. सि. बडौडा]

घातयेत् त्रिभवोत्पत्तिं परवित्तानि हारयेत् ।
कामयेत् परदारान्वै मृषावादमुदीरयेत् ।।

X X X

भक्ष्याभक्ष्यविनिर्मुक्तो पेयापेयविवर्जितः ।
गम्यागम्यविनिर्मुक्तो भवेद् योगी समाहितः ।।

X X X

शुक्रं वैरोचनं ख्यातं परं वज्रोदकं तथा ।
स्त्रीन्दियं च यथा पद्मं वज्रं पुंसेन्द्रियं तथा ।।"

[इन्द्रभूति– ज्ञानसिद्धि & राहुल सांकृत्यायन–पुरातत्त्व निबन्धावली, इ. १९५७, पृ. ११६, ११७]

हुन त उपर्युक्त श्लोकहरू र यस्तै अन्य तान्त्रिक कतिपय कथनहरू तन्त्रको साङ्केतिक भाषामा लेखिएका हुन् र यिनीहरूको अर्थ सोझो शब्दार्थ लिने होइन भनिन्छ । सिद्धहरूले उच्चलाई नीच, शुद्धलाई अशुद्ध, सुल्टोलाई उल्टो, अलौकिकलाई लौकिक, अध्यात्मिकलाई भौतिक, सारलाई निःसार जस्तो देखिने



सन्ध्याभाषा प्रयोग गर्नुपरेको कारण जोसुकै सिकारूले झवाट्टै बुझ्न नसकोस् भन्ने मात्र होइन कि त्यस ताकाको धार्मिक र दार्शनिक भाषा नै अत्यैव बौद्धिक बनाइएकोले पनि हो । यिनीहरूको शब्दार्थ लियो भने साधनको ठीक विपरीत पर्दछ । कुरा के हो भने बौद्ध तन्त्रको आध्यात्मिक धारणा साहित्य पढेर, सिद्धान्त हेरेर वा भौतिक पदार्थसंग तुलना गरेर बुझ्ने या मूल्याङ्कन गर्न सकिने होइन । यिनीहरूको अनुभूति तिब्बत, मंगोलिया एवं जापानका शिन्गोन, तेन्दइ मतालम्बीहरूले अभ्यास गरेजस्तो अझ पनि विद्यमान रहेका तान्त्रिक परम्पराअनुसार क्रियात्मक अनुष्ठानद्वारा मात्र हुन सक्छ[१] ।

उपर्युक्त श्लोकहरूमा साधकले जुनसुकै स्वास्नी मानिससँग यौन सम्बन्ध राख्ने कुरा जुन उल्लेख छ त्यो शब्दार्थ मात्र बुझ्ने-को लागि मात्र होइन । यस्तै एक दुइटा श्लोक धम्मपदमा पनि छन्– उदाहरणार्थ श्लोक संख्या २९४ र २९५:

"मातरं पितरं हन्त्वा– राजानो द्वे च खत्तिये ।
रट्ठं सा'नुचरं हन्त्वा– अनीघो याति ब्राह्मणो ।।
मातरं पितरं हन्त्वा– राजानो द्वे च सोत्थिये ।
वेय्यघं पञ्चमं हन्त्वा– अनीघो याति ब्राह्मणो ।।"

उपर्युक्त अघिल्लो श्लोकको शब्दार्थ 'आमा र बाबुलाई एवं दुई क्षत्रिय राजालाई मारेर तथा सबै बासिन्दाहरूसहित एउटा राज्य-लाई नाश गरेर ब्राह्मण पापबाट मुक्त हुन्छ' ।

तर यसको भित्री अर्थ 'तृष्णा (आमा), अहङ्कार (बाबु), उच्छेद र शाश्वत दृष्टि (दुई क्षत्रिय राजा), द्वादशायतन (राज्य र बासिन्दाहरू) हरूलाई नाश गर्ने ब्राह्मण (जान्ने मानिस, पण्डित, भिक्षु) पापबाट मुक्त हुन्छ ।

---

१. Lama A. Govinda– Foundations of Tibetan Mysticism, 1977, p. 99–100

यस्तै पद्मसम्भवले तिब्बतमा विरोधीहरूलाई सैद्धान्तिक सङ्घर्षमा हराएर विजय प्राप्त गरेको घटनाबारे पनि के लेखिएको छ भने उनले एउटा भयङ्कर देवताको रूप लिएर धर्मविरोधी एक जना राजा र उसका सबै प्रजाहरूलाई मारे तथा तिनीहरूका स्त्रीहरू जति सबैलाई शुद्ध पार्न र धर्मातमा केटाकेटीहरूका आमा बनाउन आफैलाई लिए[1]।

यस्तै बोधिज्ञान प्राप्तिको लगत्तै अगाडि शाक्यमुनिका ध्यान अन्तर्गतका अनुभूतिहरूलाई दर्शाउन ललितविस्तरमा मार र उसका भयानक दैत्य सैन्यको उनीसँग भएको घनघोर सङ्घर्ष बयान गरिएको छ।

यहाँनिर माथि उल्लेख गरिएअनुसार अन्ध्या भाषामा चन्द्र सूर्यको मिलन भन्नाले आकाशस्थित भौतिक चन्द्र-सूर्यको संयोग नभई योग-साधकको आफ्नै शरीरभित्रका नाडी- मनोवैज्ञानिक शक्तिका धारहरूलाई सङ्केत गरेको तथ्य पनि विचारणीय हुन्छ।

यी सब सन्ध्या भाषाका अभिव्यक्तिहरू हुन् जसको खास अर्थ शब्दार्थले मात्र ठीकठीक बताउँदैन। यसैले सन्ध्या भाषामा लेखिएका कुराहरूको सोझो शब्दार्थ लगाएर सम्पूर्ण तान्त्रिक पद्धति माथि भौतिक इन्द्रिय भोगको लागि मानिसहरूलाई उक्साउन खोजेको भन्ने लाञ्छना लगाउनु कहाँसम्म उपयुक्त होला ? लामा अनागारिक गोविन्द भन्दछन्, 'आज पनि तिब्बतमा रहेका हज्जारौं मठ र आश्रममा तान्त्रिक अभ्यासहरू शुद्ध, अभ्रष्ट रूपमा गरिन्छन् र साथसाथै इन्द्रिय नियन्त्रण र वैराग्यका आदर्शहरूको सर्वाधिक आदर गरिन्छ।"[2]

१. Lama A. Govinda- Foundations of Tibetan Mysticism, p. 102
२. ऐ. ऐ.



वास्तविक कुरा के देखिन्छ भने तान्त्रिक भाषाका स्त्री-तत्त्व, स्त्री देवता सबै हाम्रा मनोवैज्ञानिक–शारीरिक यक्तित्वको सांसारिकतालाई प्रतिनिधित्व गर्ने हुन् तथा त्यसको विपरीत गुणहरूको प्रतिनिधित्व पुरुष पक्षबाट हुन्छ। नेपाल, तिब्बत, बंगालमा अभ्यास गरिने वज्रयानी तान्त्रिक अनुष्ठानले पुरुष-तत्त्व र स्त्री-तत्त्वको अन्तर मान्दछ र यिनीहरू यसका अर्थपूर्ण साङ्केतिक प्रतीक हुन्। यिनीहरू यौन भावदेखि पर र माथिका हुन्। ध्यानी बुद्ध, बोधिसत्त्व, वज्रसत्त्व, अवलोकितेश्वर, वज्रभैरव आदि तथा तिनका प्रज्ञास्वरूपा तारा, डाकिनी, योगिनीहरू यौन मूर्ति होइनन्, यिनीहरू यौन भावदेखि बिलकुलै उच्च गुण र भावका प्रतीक हुन्[1]। यी चिह्नहरूको माध्यमद्वारा योगाभ्यासको चरण-चरणमा गरिनुपर्ने स्त्री–तत्त्व र पुरुष–तत्त्वको आन्तरिक मनोवैज्ञानिक योगतिर सङ्केत गरेको बुझिन्छ, इन्द्रियहरूको भौतिक भोगलाई होइन (जसको चर्चा माथि भइसकेको छ।)

तान्त्रिक बौद्ध गुरुहरू के भन्छन् भने बौद्ध तन्त्रसम्बन्धी यस्ता गलत धारणाहरू साङ्केतिक चिह्न र भाषाको यथार्थ मतलब नबुझेकोबाट उब्जेका हुन्। तान्त्रिकहरूले यस्तो साङ्केतिक भाषा प्रयोग गरेको मनसाय अनधिकृत व्यक्तिहरूले यसको गुह्य अर्थ नबुझीकन प्रयोग गर्न नसकून् वा नगरून् भन्ने हो भनिन्छ। तान्त्रिक

१. Lama A. Govinda–Foundations of Tibetan Mysticism,, पृ. १००–१। ध्यानी बुद्धहरू पाँच तत्त्व, पाँच ज्ञान, पाँच स्कन्द, पाँच इन्द्रिय, पाँच गुण, पाँच मानव (भनिएका) बुद्ध आदिका प्रतीक मात्र हुन् तथा यिनीहरू कोरा काल्पनिक हुन् [L. A. Waddell–The Religion of Tibet, p. 347 & Lama A. Govinda–Foundations of Tibetan Mysticism, p. 83, 85 ]। त्यस्तै यिनीहरूका प्रज्ञास्वरूपा स्त्री–मूर्तिसँग देखाइएको संयोग चिह्नले प्रजोपायको आन्तरिक मनोवैज्ञानिक योगबाहेक बाह्य भौतिक पदार्थतिर कति पनि सङ्केत गरेको झल्किन्न।

सङ्केतहरू इतिहासको युग-युगमा देशमा जुट्न आएका प्रतिकूल परिस्थितिमा पनि खुलेआम वा लुकिछिपी टिकिरहन सक्न र विरोधीहरूको विरोधी प्रचारबाट आम जनतामा उब्जिन सक्ने घृणा-भावको सम्भावना हटाउन यी तान्त्रिक सङ्केतवादी, छायावादी, रहस्यवादी सन्ध्या भाषामा लेखिएका हुन् ।

यो साङ्केतिक भाषा पवित्र शास्त्रलाई अनभिज्ञ र अदीक्षित व्यक्तिहरूबाट बौद्धिक खुलदुली, योगाभ्यासका तरीका र मनोवैज्ञानिक शक्तिको दुरूपयोगद्वारा बिथोल्न नदिन गरेको बचाउ मात्र होइन कि दैनिक जीवनको वाङमयले मानव चैतन्यको सर्वोच्च अनुभूतिहरूलाई अभिव्यक्त गर्न सक्दैनन् भनेर देखाउनाको लागि पनि वयानले बताउन नसकिने सारलाई उपमा र बाहिरबाट हेर्दा उल्टो जस्तो तर भिन्न तथ्य लुकेको उक्तिहरूद्वारा दीक्षितले मात्र बुझ्न सक्ने पाराले औल्याउन सकिन्छ[१] ।

यसैकारण यसको आन्तरिक अर्थ जसलाई पायो उसलाई खुल्लेआम नबताइएको हो भनिन्छ । साँच्चिकै इच्छुक, विशेष तवरले योग्य साधकलाई मात्र दीक्षा दिने अवसरमा यसको गुह्य अर्थ बताइन्छ । भाषा पनि यस्तो प्रयोग गरिन्छ जसको अर्थ वामाचार, योगाचार दुवैमा लाग्न सक्छ[२] ।

यसरी नेपाली बौद्धहरूमा प्रचलित वज्रयान योग र तन्त्र-सहितको एउटा साधन मार्ग हो । किताबहरूको अध्ययन र अरू स्रोतबाट आर्जन गरेको ज्ञानले मात्र यसको लक्ष्य प्राप्त हुन सक्तैन । त्यसैले परिलक्षित गरिएको शून्यता, महासुख, महामुद्रा, प्रज्ञोपाय, बोधिज्ञान आदि जुन नाउँले पुकारे पनि बोधिज्ञानयुक्त निर्वाणको त्यो चरणमा पुग्न योग्य गुरुको उपदेश अनिवार्य हुन्छ । साधकले

१. Lama A. Govinda– Foundations of Tibetan Mysticism, पृ. ५३

२. राहुल सांकृत्यायन– पुरातत्त्व निबन्धावली, १९५७, पृ. १३१



तान्त्रिक भाषामा 'मुद्रा' कहिने आफ्नो श्रीमतीलाई आफ्नो साधन मार्गमा सँगिनीको रूपमा साथमा लिई गुरुकहाँ दीक्षाको लागि प्रार्थना गर्नुपर्दछ । गुरुको काम खालि मौखिक उपदेश दिनु मात्र होइन । उसको काम साधक-साधिकाहरूको अज्ञान अन्धकार हटाई ज्ञानको प्रकाश पार्नु पनि हो । शिष्य-शिष्याहरूको योग्यता बुझेर गुरुले आवश्यक उपदेश दिनुपर्दछ ।

वज्रयान अन्तर्गत गुरुबाट साधक-साधिकाहरूलाई दिइने दीक्षा विधि 'बोधिचित्ताभिषेक' भनिन्छ । गुरुले बुद्ध, वज्रसत्त्व, बोधिसत्त्व आदिको मूर्ति भएको बही, विहार, बाहाल, आगममा शिष्य-शिष्याहरूलाई बोधिचित्ताभिषेकको विहित तान्त्रिक विधि-अनुसार अभिषेक गर्दछ । यस अवस्थामा साधक-साधिकाको नयाँ जन्म भएको अर्थात् सांसारिक जीवनबाट मुक्त भएर वज्रयानी आध्यात्मिक जीवनमा पदार्पण गरेको मानिन्छ । यस अवस्थामा यिनीहरू 'बुद्धपुत्र' कहिन्छन्[१] । यस जीवनको प्रारम्भमा दीक्षा-गुरु साक्षात् बुद्ध सरह मानिन्छ र उसको भूमिका अत्यैव महत्वपूर्ण हुन्छ । बुद्ध-पुत्रको चित्तवृतिलाई सांसारिक प्रपञ्चबाट हटाई निर्वाण उपलब्ध गर्ने बाटोमा अग्रसर गराउनु उसको कर्तव्य हुन्छ । अभिषेकको अवधिमा गुरुले साधक-साधिकाहरूलाई शील पालनको लागि प्रतिज्ञा गराउँछ[२] । शील पालनबाहेक साधक-साधिकाहरूको लागि त्रिरत्नको बन्दना, पापकर्मको स्वीकारोक्ति, पुण्यानुमोदन, शपथ ग्रहण आदि प्रक्रियाहरू तोकिएका छन् । ज्ञानकाय, धर्मकाय,

१. बलदेव उपाध्याय– बौद्धदर्शन, सं. २००३, पृ. ४४२

२. वज्रयानी दीक्षा अभिषेकको क्रममा एकातिर पञ्चशील, अष्टशील पालन गराइन्छ त अर्कोतिर पञ्च 'म'– कारका कम से कम मांस र मद्यको सेवन गरिएको पाइन्छ ।

रहस्यमय, सजीव[१], कलात्मक सुन्दर मूर्तिलाई अगाडि राखेर प्रज्ञा, मुद्रा, मण्डल, अभिषेक, मन्त्र, न्यास, साधन, सिद्धि, योग, नृत्य तथा धारणी, स्तोत्र, पाठपूजाद्वारा उपरोक्त उच्चकोटीको दार्शनिक स्थितिमा पुग्नु वज्रयानको मूल उद्देश्य मानिएको छ[२] ।

इत्यादि प्रक्रियाहरूको साथै वज्रयानी दीक्षा अन्तर्गत पनि थेरवाद, सर्वास्तिवाद, सौत्तान्तिक, योगाचार, माध्यमिक, शून्यतावाद, मन्त्रयान आदिको अध्ययन गर्नु आवश्यक छ । वज्राचार्य दीक्षा दिइँदा पढिने निम्न लिखित श्लोकमा उपर्युक्त कुरा उल्लिखित भएको छः

"उपोषथं दीमते प्रथमं तदनु शिक्षापदं दशम् ।
वैभाष्यं तत्र देशेत सूत्रान्तं वैपुलस्तदा ॥
योगाचारं तत पश्चात्तदनु मध्यमकं दिशेत् ।
सर्वमन्त्रनयं ज्ञात्वा तदनु हे वज्रमारभेत् ॥
गृहणीयात् सादरं शिष्यः सिध्यति नात्र संशयः ।
[हेवज्रविनयपटलनामाष्टम्]

यहाँ यो कुरा स्मरणनीय हुन्छ कि दीक्षासम्बन्धी विधि, परम्परा बहाल, बहिलपिच्छे केही केही फरक हुन्छन् । कुन चाहिं देवताको दीक्षा लिनेदिने भन्ने कुरा पनि आ-आफ्ना कुल परम्परामा निर्भर गर्दछ । उपत्यकामा अनेकौं वज्रयानी देवताहरूमध्ये हेवज्र, हेरूक, अचल, कालचक्रको दीक्षा लिनेदिने प्रचलन देखिन्छ । अरू देवताहरूको तुलनामा हेवज्रकै अनुयायीहरू बढी सङ्ख्यामा देखिन्छन् ।

---

१. बुद्ध बोधिसत्त्व वा देवदेवीको कुनै पनि नयाँ मूर्तिको विधिवत् प्रतिष्ठापन गर्दा त्यसमा जीव राख्न भनी 'जीवन्यास' विधिको पूजा गरिन्छ जुन सम्पन्न भएपछि उक्त मूर्ति जीव भएको मानिन्छ । आवश्यक परेको वेला यस्तो जीव झिक्ने र फेरि राख्ने विधि गरिन्छ ।

२. हेमराज शाक्य- ने. संस्कृतिया मू लुखा, पृ. ७४–७५



यो दीक्षासम्बन्धी प्रक्रियाको अवधि तीन-चार दिनसम्म रहन्छ । पछि साधक-साधिकाहरू वज्रयानका पथिक बनेर निर्वाणको लागि लगनशील रहनुपर्दछ ।

यो वज्रयानी सिद्धान्त, रहस्य वा दीक्षा विधि जे जसो भए पनि आजकाल यस सम्बन्धी दर्शन, योगध्यान, नियम अहिले लुप्तप्राय भइसकेका छन् । वज्रयान त अहिले केवल पूजापाठ, कर्मकाण्डमा सीमित भइसकेको देखिन्छ । वज्रयानका आचार्य, गुरु अधिकारी मानिने वज्राचार्यहरू पनि हिजो आज त बौद्ध धर्मका विविध ज्ञानदेखि मात्र अनभिज्ञ होइनन् कि खुद वज्रयान र यसका तत्त्वहरूको मामुली जानकारीसम्म पनि उनीहरूमध्ये धेरैजसोमा देखिन्न । 'वज्राचार्य' बन्न उहिले बौद्ध धर्मका आधारभूत ज्ञानको साथै वज्रयानी तन्त्रशास्त्रमा पारङ्गत हुनुपर्ने अनिवार्यता थियो होला । तर अहिले वज्राचार्य एउटा छुट्टै जातमा सीमित भएको छ तथा यही जातको आधारमा स्वतः वज्राचार्य बन्ने परम्पराले जरो गाडिसकेको छ । अर्थात् वज्राचार्य आमा-बाबुबाट जन्मेका जोसुकै पनि वज्राचार्य कहिन्छ । चाहे उसमा वज्रयानको आचार्य हुने क्षमता होस् वा नहोस् । वज्राचार्य जातको र पुरोहित्याइँ पेशा गरिआएको जो कोही पनि वज्राचार्य हुन पूर्णरुपेण सक्षम मानिन्छ यी वज्राचार्यहरू गृहस्थी नै हुन् । तान्त्रिक विचारधारा जति जति प्रबल भयो उति उति वज्रयान वाममार्गी भयो अर्थात् यिनीहरूमा प्रव्रजित हुने प्रवृति घट्दै गयो । प्रव्रजित हुने गर्ने परम्परा भएका शाक्य र वज्राचार्यहरूमा पनि आजकाल चूडाकर्मको अवधिभर दशबाह्र दिन मात्र प्रव्रजित रहन्छन् ।

# उत्तरी भेकको लामा धर्म

काठमाडौं, पोखरा, पाल्पा, धनकुटा, भोजपुर आदि हिमालय फेदीका उपत्यकाहरूमा वज्राचार्य पुरोहित गरिएको बौद्ध धर्म मानिन्छ भने दार्चुलादेखि ताप्लेजुङका सम्पूर्ण हिमाली भेकमा लामा पुरोहित गरिएको बौद्ध धर्म मानिन्छ । उपत्यकाका बौद्धहरू विशेष गरेर नेवार जातिमै सीमित छन् भने उत्तरी भेकका बौद्धहरू तामाङ, थाक्से, थकाली, मगर, गुरुङ, शेर्पा, राई, लिम्बु आदि विभिन्न जातिमा समाविष्ट छन् । यो उत्तरी क्षेत्रको बौद्ध धर्ममा तिब्बती बौद्ध धर्मको बढी प्रभाव पारेको छ । तिब्बतमा बौद्ध धर्मको प्रवेशको सिलसिलामा नेपाली राजकुमारी भृकुटी (ख्रि–चुन) ले इ० ६४०–५० ताका खेलेको भूमिका एवं पछि पद्मसम्भवले चलाएको धर्मको रूपरेखा उनले नेपालैमा तीन चार वर्ष (इ० ७४३–७४७) बसेर तयार पारेको र शान्तरक्षित, कमलशील, अतीशा दीपङ्कर श्रीज्ञान आदि गुरुहरू पनि नेपालमा नै केही समय बसिसकेपछि मात्र तिब्बतमा गएको तथ्य स्मरणनीय हुन्छ जसको बारे परिच्छेदहरूमा चर्चा भइसकेको छ ।

नेपालको सम्पूर्ण उत्तरी हिमाली भूभाग तिब्बतसँग जोडिएको भौगोलिक स्थितिको कारण यहाँका निवासीहरू तिब्बतसँग घनिष्ठ व्यावहारिक सम्पर्कमा रहन्छन् । जातीय दृष्टिकोणले पनि



यी उत्तरी भेकका निवासीहरूको तिब्बती नागरिकहरूसँग बढी सम्बन्ध र हेलमेल छ । यिनीहरूले शदियौंदेखि तिब्बतमा प्रचलित धर्म, देवदेवी, थितिरीति, परम्परा मानिआएका हुन् । तिब्बतमा जति सम्प्रदाय छन् उति नै सम्प्रदायका अनुयायीहरू नेपालमा पाइन्छन् । यातायात सम्बन्धी सुविधाको बृद्धिको साथै राजधानीसँग आवत-जावत एवं अन्तर्राष्ट्रिय गतिविधिहरू पनि काठमाडौंमा बढेकोले यी तिब्बती सम्प्रदायका बौद्ध धर्मावलम्बी नेपाली लामालमिनी र उपासक उपासिकाहरू हिजोआज काठमाडौं उपत्यका र अधिराज्यका अरू भागहरूमा पनि पर्याप्त सङ्ख्यामा देखा पर्न थालेका छन् ।

यी उत्तर-निवासी जातिहरूले अनुष्ठान गरिआएको बौद्ध धर्म र यसका सम्प्रदायहरूबारे आवश्यक जानकारीको निमित्त तिब्बतमा बौद्ध धर्मको संस्थापन, परिवर्तन या विकाससम्बन्धी केही सङ्क्षिप्त विवरण उपयुक्त र आवश्यक हुन्छ । तसर्थ त्यस प्रसङ्गले प्रयोजन परे जति अंशको सङ्क्षेपमा यहाँ चर्चा गरौं ।

तिब्बतमा इसवी सातौं शताब्दीसम्म पनि प्राचीन बोन धर्म नै चलिरहेको थियो । यसअन्तर्गत प्रकृति, जनावर, विशेष गरेर नागहरूको उपासना, भूतप्रेत, दैत्य, देव-देवीको पूजा, दैत्य नृत्य इत्यादिको साथै तन्त्र-मन्त्रयुक्त कर्मकाण्ड हुन्थे[१] । इ. ६४० ताका राजा स्रोङ-चन्-गम्पोको पालामा तिब्बतमा नेपाली राजकुमारी ख्रि-चुन (भृकुटी) र चिनिया राजकुमारी कोङ जो (वेन-चेङ) को प्रयासबाट महायानी बौद्ध धर्मको प्रवेश भएको थियो । यस बेलादेखि एक शताब्दीसम्म तिब्बतमा लिपि, व्याकरण आदि बनेर कैयन् बौद्ध ग्रन्थहरूको तिब्बति भाषामा अनुवाद भयो । आठौं शताब्दीमा बौद्ध धर्मको ठीकठीक ज्ञान पाउन र प्रचार गराउन बोलाइएका शान्तरक्षित (इ. ७४३, ७४६–७६२), पद्मसम्भव

१. L. A. Waddell– The Religion of Tibet, 1978, p. 9.

(इ. ७४७ ), कमलशील (इ ७६२–७८०) तिब्बतमा पुगेर त्यहीं बसोबास गरे। पद्मसम्भव मात्र आफ्नो अन्त्य कालमा तिब्बतको दक्षिण-पश्चिमतिर गए भनिएकोबाट नेपालको उत्तरी इलाकामा आएको बुझिन्छ।

पद्मसम्भवले जुन बौद्ध धर्म तिब्बतमा प्रचार गरे त्यसको रूपरेखा उनले त्यहाँको स्थिति अध्ययन गर्न नेपालमा तीन-चार वर्ष (इ. ७४३–७४७) बस्दा तयार गरेका थिए। गुरू पद्मसम्भवकै उपदेशलाई सबभन्दा बढी मात्रामा पालन गरिरहेको दाबी गर्ने न्यिङ–मा–पा सम्प्रदाय अनुसार उनले प्रचार गरेको बौद्ध धर्ममा तन्त्र-मन्त्र एवं त्यहाँ प्रचलित पूर्व–बौद्धकालीन बोन धर्मका भूतप्रेत दैत्यहरूको उपासना र कर्मकाण्ड पनि समाविष्ट गरिएका थिए। "उनले तिब्बतमा संस्थापित गरेको बौद्ध धर्ममा भारतीय र तिब्बती देवदेवी, तन्त्र-मन्त्र, गुह्यवाद र पुरोहितहरूको प्राधान्य भएको कर्मकाण्डमा महायान बौद्ध धर्मको अलि अलि बाहिरबाट पोतेको रङ्ग मिसिएको थियो।"[१] जे होस् यो धर्म त्यसताका नेपाल, भारतमा लोकप्रिय बनिसकेको वज्रयानमा आधारित थियो। प्राचीन बोन धर्मावलम्बी र केही चिनिया धर्माधिकारीहरूबाट पद्मसम्भवको नयाँ धर्मको विरोध भएको थियो। यसलाई शुरूमा मन नपराउनेहरूमा केही सरकारी पदाधिकारीहरू पनि थिए। तर तिनीहरूको विरोधको प्रतिवाद सफलतापूर्वक गरियो। बोन धर्म अन्तर्गत गरिने नरबलि, पशुबलि, निषेध गरियो, जीउँदो मानिस र पशुको सट्टा पीठोका मूर्तिहरू बलि दिने चलन चलाइयो। यो चलन पद्मसम्भवले शुरू गरेको भनिएको छ। पद्मसम्भवका मुख्य पचीस जना शिष्यहरू प्रत्येकलाई भूतप्रेत दैत्य, धामी बोक्सीहरूको दमन गर्न तान्त्रिक मण्डलहरू बनाएर पूजा गर्ने विधिहरूको तालीम दिइयो। यही धर्मको जग बलियोसँग बस्यो र यसैलाई पछि पश्चिमी विद्वान्हरूले

१. L. A. Waddell - The Religion of Tibet, 1978, p 30



लामावाद अर्थात् लामा धर्म भनेर नामकरण गरे। हुन त खुद वर्तमान दलाइ लामा (हाल प्रवासमा रहेका) ले तिब्बतको बौद्ध धर्मलाई लामावाद भन्न मिल्दैन भनेर खण्डन पनि गरेका छन्।

अनेक चैत्य र विहारहरूको पनि निर्माण भयो, अनेक बौद्ध ग्रन्थहरूको तिब्बती भाषामा अनुवाद भयो। बीच-बीचमा केही वाद-विवाद र एक जना राजाको क्षणिक दमन भए पनि ती समस्याहरूको समाधान गरियो। पद्मसम्भवलाई तिब्बतीहरूले आजसम्म पनि द्वितीय बुद्धको रूपमा सन्मान गर्दै आएका छन्।

पद्मसम्भवको मृत्यु कहिले कहाँ भयो यकीन थाहा नभए पनि उनले आफ्नो अन्तिम कालमा तिब्बत छाडेर दक्षिण-पश्चिमतिर प्रस्थान गरेको निश्चित देखिन्छ। यस सम्बन्धमा तिब्बती वंशावलीको आधार उद्धृत गर्दै एल्. ए. वाडेलले यसो लेखेका छन्:– "पद्मसम्भवले इ. ८०२ मा 'र्ङयब–ग्लिङ' देशको सङ–दो–पल–रिमा दैत्यहरूको दमन गर्न जान्छु भनेर तिब्बत छाडेका थिए। 'र्ङयब्–ग्लिङ' को अर्थ 'याक-पुच्छर महादेश' हुन्छ। राजा थि–स्रोङ-देत्सन, भारादारहरू र पद्मसम्भवकै दुई परी पत्नीहरूले तिब्बतको मङ्युल भन्ने ठाउँबाट उनलाई इन्द्रधनुमा बसेर आकाश मार्गबाट दक्षिण–पश्चिम दिशातिर गएको देखेको तथा उनीहरू पच्चीस दिन र रात अर्को ठाउँमा पर्खिरहँदा राजाले गुरु पद्मसम्भव कुशलपूर्व 'सङ-दो–पल–रि'–मा पुगेको आफूले गुरुबाट पाएको ध्यानदृष्टिबाट देखे भनेका कुरा लेखिएको[१] छ।" यस प्रसङ्गबाट पद्मसम्भव सम्भवतः अन्तिम कालमा तिब्बतको दक्षिण–पश्चिमस्थित चौंरी-पुच्छर देश अर्थात् नेपालको उत्तरी इलाकामा आएको प्रत्यक्षतः सङ्केत मिल्दछ।

यसबारे हफ्मायनले पनि यसो लेखेका छन्, "उन (पद्म-

१. L. A. Waddell– The Religion of Tibet, 1978, p. 32.

सम्भव) ले आफ्नो जीवनको अन्तिम भाग नेपालको तिब्बती भाषा बोलिने क्षेत्रमा बिताए। उनले सामान्य सङ्कट परिआउने बेला आफ्नो आध्यात्मिक निर्देशन तिब्बती बौद्ध अनुयायीहरूलाई निरन्तर प्राप्त भइरहोस् भन्ने हेतुले त्यस भेकमा लामावादी धर्मलाई लोकप्रिय बनाए।"[1]

हफ्मायनको भनाइ ठीकै देखिन्छ। तिब्बतमा आफूले प्रचार गरेको नयाँ लामावादी बौद्ध धर्म विरोधको कारण कथम् कदाचित् मासिए पनि सँगै जोडिएको तिब्बती भाषा नै बोलिने नेपाली क्षेत्रमा पनि यसको जग बलियो गरिराख्यो भने उता फेरि फेरि यसको प्रचार हुन सक्ने स्थिति देखेर नै पद्मसम्भवले यतातिर पनि आफ्नो धर्मलाई लोकप्रिय बनाउन खोज्नु स्वभाविकै हो।

पद्मसम्भवले चलाएको धर्मको उत्तरोत्तर बृद्धि भयो। इ. १०३८ मा अतीशा दीपङ्कर नेपाल हुँदै तिब्बत पुगे। उनले पद्मसम्भवले चलाएको धर्म तिब्बत निक्कै लोकप्रिय र प्रभावशाली भइसकेको पाए पनि यसको अनुष्ठान जसरी हुन्थ्यो त्यो सन्तोषजनक र समयानुकूल पाएनन्। यसबेलासम्म तिब्बतमा महायानी वज्रयानी ग्रन्थहरू र तिनका व्याखाहरूको पूरै भनेजसो विद्वत्तापूर्ण तिब्बति भाषामा अनुवाद भइसकेको थियो जसमा तोकिएका शिक्षाहरू त्यहाँ अनुष्ठान गरिएका रीतिरिवाजभन्दा बिलकुल भिन्न थिए। त्यसैले अतीशाले पुरानो धर्ममा सुधार गर्ने अठोट गरे। उनले लामाहरूको लागि ब्रह्मचर्य र अरू शील पालनमा र उपासकउपासिकाहरूको लागि नैतिकतामा जोड दिन थाले। उनका उपदेश योग र तन्त्रमा पनि आधारित थिए।[2]

---

१. H. Hoffman- The Religions of Tibet Eng. edn.- E. Fitzgeald, 1961, London),p. 58; Rajendra Ram- A History of Buddhism in Nepal, 1978, Patna, p. 45

२. L. A. Waddell- The Religion of Tibet, 1978, p 54



अतीशाले लामा धर्ममा सुधार गर्नु अगाडि यो विभिन्न सम्प्रदायमा बिभक्त थिएन। यसमा सुधार गरेर उनले सर्वप्रथम काह्-दम्-पा सम्प्रदायको शुरूवात गरे। पद्मसम्भवले शुरू गरेदेखि चलिआएको परम्परागत धर्ममा जब केही सुधार गरियो तब अतीशाकै शिष्यहरूले पनि अरू केही न केही सुधार गर्न थाले। फलस्वरूप लामा धर्ममा एघारौं शताब्दीमा चार सम्प्रदाय देखा परे। यिनीहरूको छोटकरो परिचय यस प्रकार छः—

१) गे-लुग्-पाः अतीशाले प्रारम्भिक लामा धर्ममा सुधार गरेर चलाएको सम्प्रदाय काह्-दम्-पा (अर्थात् 'शील, उपदेशले बद्ध) भनिन्थ्यो। नाउँ अनुसार यसले शील र नैतिकतामा विशेष जोड दिन्थ्यो र यसको अतीशासँग सबभन्दा बढी सम्बन्ध थियो। यसलाई तीन सय पचास वर्षपछि अतीशाकै प्रमुख शिष्य ब्रोम-तोन (वा डोम-तोन) का ७८ वाँ पिंढीका शिष्य चोङ-खा-पा (त्सोङ-का-पा) ले काह्-दम्-पा सम्प्रदायलाई गे-लुग्-पामा बदले गे-लुग्-पाले शील अनुष्ठानमा कम र कर्मकाण्ड र विधि-विधानमा बढी जोड दिन थाल्यो। यस सम्प्रदायका पूजा-विधि, कर्मकाण्ड-सम्बन्धी निर्देशिका ग्रन्थहरूमध्ये धेरैजसो उनले नै लेखेका थिए भनिन्छ।

चोङ-खा-पा सङगठन गर्नामा सिपालु थिए। ज्यादै आडम्बरी विधि-विधानको अनुष्ठानद्वारा उनी निक्कै अनुयायीहरू जम्मा गर्न पनि सफल भए। उनले यताउति एकान्तवासमा रहेका काह्-दम्पा लामाहरूलाई बोलाएर गुम्बाहरूमा राखे। तिनीहरूलाई र आफ्ना नयाँ अनुयायीहरूलाई पनि उनी विनयका नियम पालन कडाइका साथ गर्न लगाउँथे। समय-समयमा वर्षावास जस्तै एकान्तवास पनि लामाहरूलाई गर्न लगाउँथे। उनले आफ्ना सम्प्रदायका लामाहरूलाई स्थविरवादी भिक्षुहरूको जस्तो भिक्षापात्र, चीवर, चुच्चे टोपी आदि ग्रहण गर्न लगाए। काह्-दम्-पा लामाहरू राता

टोपी लाउँथे र पूर्व बौद्धकालीन बोन धर्मावलम्बी पुरोहित गुरुहरू कालो टोपी लाउँथे । यसैले गे-लुग्-पा सम्प्रदायको नाउँ 'पहेंलो टोपी' सम्प्रदाय पनि रह्यो । टोपीको नाउँबाट सम्प्रदायको नाउँ राख्ने चलन पनि यसै बेलादेखि चलेको देखिन्छ ।

चोङ-खा-पाले इ १४०९ मा ल्हासाको उत्तर-पूर्व एउटा गुम्बा बनाए जुन गह-दन (गुन्दे अर्थात् 'तुषित भुवन') भनियो । यिनका सहयोगीहरूले इ. १४१४ मा ढ-पुङ र इ. १४१७ मा सेरा नाउँका दुइटा ठूलठूला गे-लुग्-पा गुम्बा बनाए । इ. १४३९ मा गे-लुग्-पा सम्प्रदायका पहिलो मुख्य लामा हुने गे-दुन-दुब चोङ-खा-पाकै भतिजा थिए । इ. १४४५ मा ताशी-ल्हुम्पो गुम्बाको निर्माण गर्ने यी नै थिए ।

इ. १४१७ मा चोङ-खा-पाको मृत्यु भएपछि यिनी मञ्जुश्री बोधिसत्त्व वा अमिताभ बुद्ध वा वज्रपाणि बोधिसत्त्वका अवतार मानिए[1] । यस सम्प्रदायका अनुयायीहरूले उनलाई पद्मसम्भव वा अतीशाभन्दा ठूला मान्दछन् र गुम्बामा उनको मूर्तिलाई प्रमुख स्थान दिन्छन् ।

गे-लुग्-पाका अनुयायीहरू वज्रधरलाई आदि बुद्ध मान्दछन् । यिनीहरू मैत्रेय बुद्धबाट एवं असङ्गदेखि अतीशा ब्रोम-तोन-देखि चोङ-खा-पासम्मका गुरुहरूबाट प्रेरणा लिन्छन् । यिनीहरूका संरक्षक देवता संवर वज्रभैरव तथा अभिभावक दैत्य देवता गोन्-पो, हयग्रीव हुन् । यस सम्प्रदायको गुह्य दृष्टि लाम रिम (क्रमिक मार्ग) र तन्त्र र्ग्य-चे' न स्ग्योद (विशाल कर्ता) भनिन्छन् । यो सम्प्रदायले का-र्ग्यु-पा र स-क्य-पा सम्प्रदायका राम्रा कुराहरू जति यसैमा समाविष्ट भएको दावी गर्दछ ।

इ. १४३९ मा चोङ-खा-पाका भतिजा गे-दुन-दुब चीनका बादशाह कुबलाई खाँले इ १२७० सालमा स-क्य-पा सम्प्रदायका

१. L. A. Waddell- The Religion of Tibet, p. 59



लामालाई तिब्बतको प्रमुख लामाको पदमा नियुक्त गरेदेखि त्यस सम्प्रदायमा कायम रहिआएको उक्त पदमा आफू आसीन हुन सफल भए । प्रमुख लामाको केही सांसारिक अधिकार पनि थियो । प्रमुख लामाको मृत्युपछि अवतारवादी सिद्धान्तको आधारमा उत्तराधिकारी छान्ने प्रथा शुरू भयो । यही गे-लुग्-पा सम्प्रदायका ढे-पुङ गुम्बाका लामा न्याग्-वङ लो-जङ (अथवा ग्यत-व-ङ्ग-पा) तिब्बतका पाँचौं प्रमुख लामा भए । इ. १६४० तिर उनले तिब्बत विजेता मंगोल राजकुमार गुश्रि खाँबाट दलाइ लामा' (दलाइको अर्थ विशाल सागर हुन्छ) को पदवीसहित तिब्बतको राज्याधिकार पाए तथा इ. १६५० मा चिनिया बादशाहबाट दलाइ लामाको राजकीय अधिकारको पुष्टि भयो[1] ।

यसरी गे-लुग्-पा सम्प्रदायका पाँचौं प्रमुख लामा नै पहिलो दलाइ लामा भए । धार्मिक गुरु नै राजा जस्तै शासक पनि हुने चलन चल्यो । यी पहिलो दलाइ लामा आफ्नो गे-लुग्-पा सम्प्रदायका गुम्बा ढे-पुङ छाडेर पोताला दरबारमा बस्न गए तथा आफूलाई 'अवलोकितेश्वर' को अवतार र आफ्ना गुरु ताशी ल्हुम्पो गुम्बाका लामालाई 'अमिताभ बुद्ध' को अवतार मान्न लगाए ।

प्रमुख लामाको नियुक्तिको सम्बन्धमा अवतारवाद सिद्धान्त गे-लुग्-पा सम्प्रदायमा फलीफाप भएको देखेर नै अरू सम्प्रदायहरूले पनि यसलाई अपनाए । यसको प्रभाव यति बढ्यो कि हिजो-आज जुनसुकै ठूलो गुम्बाको आफ्नै अवतारी लामा प्रमुख हुन्छ जसको मृत्युपछि रिक्त भएको पदमा अवतारवाद सिद्धान्तको आधारमा पुनर्नियुक्ति हुन्छ । कुनै कुनै गुम्बामा त उच्चपदाधिकारी लामाहरूका पदहरूमा पनि नियुक्ति त्यसरी नै गरिन्छ ।

१. L. A. Waddell- The Religion of Tibet, p. 230, ( 1978

२) का-ग्र्यु-पा:- तिब्बतको प्रारम्भिक लामा धर्ममा सुधार गरेर मार्पा लोचवा (जन्म इ. १०१० ) ले एघारौं शताब्दीको उत्तरार्धमा चलाएको दोस्रो समूह का–ग्र्यु-पा हो । यी मार्पा भारतमा रहँदा अतीशा दीपङ्कर, फाम थिङ, नारो-पाहरूका शिष्य भएका थिए । यिनी र यिनका उत्तराधिकारी शिष्य मिल-रे-पा (१०३८-११२३) दुबै एउटा एउटा गुम्बामा बसी योगी जीवन बिताएका हुनाले यस सम्प्रदायका खास सङगठन कर्ता द्वग्-पो ह्लार्जे मानिन्छन् । यी ह्लार्जे (मृत्यु- इ. ११५२) काह्-दम्-पा सम्प्रदायबाट छुट्टिएर आएका लामा थिए । मगन्ते योगी जोवन बिताएका मिल-रे-पाका तारा र अरू देवताहरूको पूजाविधि एवं मण्डलहरू बनाउने तरीका बारेका एक लाख वटा गीत लोक प्रिय छ ।

का–ग्र्यु-पाको अर्थ क्रमागत (अर्थात् पछिका उत्तराधिकारी-हरूले दिएका) उपदेवहरूका अनुयायीहरू भन्ने हुन्छ[1] । योगाभ्यास गर्नु, गुफा वा एकान्त स्थानमा ध्यान गर्नु आदि यस सम्प्रदायका विशेषता' हुन् । यस सम्प्रदायको गुह्य दृष्टि 'महामुद्रा' हो । संर-क्षक देवताचाहिं संवर आदि हुन् ।

यस सम्प्रदायको कठिन भिक्षु जीवन त्यतिको लोकप्रिय हुन नसकेकोबाट नै कालान्तरमा यसबाट का–क-र्मा–पा, डि-कुङ-पा, त–लुङ–पा, डुक्-पा आदि उप-सम्प्रदायहरू विकसित भए ।

३) स-क्य-पा:- यो सम्प्रदाय क्ओन्-ड्कोन्-म्छोग्-र्ग्यल्-पोले इ. १०७१ मा स्थापना गरेको तेस्रो सुधारिएको समूह हो । यसको नाउँ पश्चिम तिब्बतमा यस सम्प्रदायको पहिलो गुम्बा बनाएको ठाउँमा पाइने पहेंलो माटोको रङ्गबाट रहेको छ ।

इ. १६४० ताका गे–लुग् पा लामाले दलाइ लामाको पदवी पाएर यो स–क्य-पा सम्प्रदायको शक्ति छिनेर नलिएसम्म यसको

१. L. A. Waddell - The Religion of Tibet, 1978, p. 64.



प्रभाव तिब्बतको अधिकांश भागमा कायम थियो । चीनका बादशाह कुबलाइ खाँले इ. १२७० मा यही सम्प्रदायका लामालाई तिब्बतको प्रमुख लामा नियुक्त गरेका थिए । पूर्वी तिब्बतमा यसका गुम्बाहरू धेरै छन् । यसका पुराना दुइटा गुम्बा– उर्य र फुन्–त्सोलिङ प्रथम दलाइ लामाले गे–लुग्–पामा बदलेका थिए ।

यस सम्प्रदायमा पुराना र नयाँ तन्त्रहरू मिलाइएका छन् । यसक गुह्य दृष्टि 'फलदायी मार्ग' भनिन्छ । नागार्जुनका अवतङ सक', वसुबन्धुको 'परामर्थ' यस मतका विशेष धर्मशास्त्र हुन् । यसले न्यिङ–मा–पा सम्प्रदायका ग्रन्थहरू कतिपय पनि आफ्नो मतमा समावेश गरेको छ । यसका इष्ट देवता वज्र फुर्पा आदि र संरक्षक देउता धर्मगण्डाधारी 'गुर', मृगोल–काल हुन् ।

यसका दुइटा उप-सम्प्रदाय छन्–जोनाङ–पा र ङोर्पा । (i) जोनाङ–पा चौधौं शताब्दीको प्रारम्भमा कुन्-गह्-दोल्–छो'ग्ले छुट्टयाएको उप-सम्प्रदाय हो । तिब्बतका प्रसिद्ध इतिहासकार लामा तारानाथ (जन्म इ. १५७३ ) यही उप-सम्प्रदायका थिए । (ii) ङोर्पा उप-सम्प्रदायचाहिं कुन्–गह–जाङ-पोले इ. १४२७ मा छुटया-एका थिए । यसका संस्थापकले यसको तान्त्रिक पद्धतिबाट न्यिङ–मा–पा मतका तत्त्व जति परित्याग गरेर नयाँ मात्र काम गरेका थिए ।

(४) न्यिङ–मा–पा:- पद्मसम्भवले इ. ७४७ तिब्बतमा वज्रयानी बौद्ध धर्मको जग हालेको ३०० वर्ष जति पछि मात्र यस-बाट विभिन्न सम्प्रदाय निस्कन लागे । यो पुरानो धर्मबाट काह–दम्–पा (पछि गे-लुग्–पामा बदलिएको), का–ग्र्यु-पा, स-क्य-पा सम्प्र-दायहरू निस्किसकेपछि पनि केही अनुयायीहरूले यसको यथावत् अनुष्ठान गरिरहे । यिनीहरूले आफ्नो परम्परागत धर्ममा कुनै परि-वर्तन गरेनन् । नयाँ सम्प्रदायहरूले प्रकृति, पशु, भूतप्रेतहरूको पूजा, कर्मकाण्ड आदि बोन धर्मका प्रभावहरू घटाउँदै लगे । तर न्यिङ–

मा पाका अनुयायीहरूले बोन कर्मकाण्डको अभ्यास पनि गर्दैरहे, यिनीहरू शील-पालन, विनयका नियमहरूमा उत्तिको ध्यान दिंदैनथे। पुरानै परम्परा मान्ने हुनाले नै यो सम्प्रदाय ञ्यिङ-मा-पा ('पुरानो मत') कहियो।

यसका प्रभावशाली लामाहरू अरू नयाँ सम्प्रदायमा लागेकोले पनि यसको सङ्ख्या घट्दै गयो। अनि केही यसको सङ्ख्या बढाउन र केही सम्प्रदायभित्र प्रचलित भइसकेका अनधिकृत अभ्यासहरूलाई पनि वैध रूप दिलाउन यो ञ्यिङ-मा-पा सम्प्रदायले 'तर्-मा'-को सिद्धान्तको आविष्कार गरे जस अनुसार पद्मसम्भवले नै प्रबुद्ध पिंढी तयार भएपछि निकाल्ने भनेर गुफा, कन्दराहरूमा लुकाएको तथा यस सम्प्रदायका लामाहरूले ठाउँठाउँबाट भेट्टाएर ल्याएको भनी अनेकौं ग्रन्थहरू प्रकाशमा ल्याए।

द्वितीय शताब्दीका नागार्जुनले पनि आफूले लेखेका महायानी ग्रन्थहरू खुद भगवान बुद्धले भविष्यमा मानिसहरूले राम्ररी बुझ्न सक्ने बेलामा प्रचार गर्ने भनी नागहरूको जिम्मामा छाडेर गएको भेट्टाएको भनी प्रचार गरेका थिए।

ञ्यिङ-मा-पा मतले वैरोचन बुद्धका बोधिसत्त्व समन्त भद्रलाई आदि बुद्ध मान्दछ। यसको गुह्य दृष्टि 'महा-उत्पन्न' हो। यसका इष्ट, संरक्षक देवता वज्र-फुर्ब. दुब्-प-कह्-ग्ये, गुर (धर्मगण्डा हातमा लिइरहने) आदि हुन्। यस मतालम्बीहरूले पद्मसम्भवका विभिन्न मनोभावका प्रतीक विभिन्न देवदैत्य-मूर्तिहरूको पनि उपासना गर्छन्।

यस सम्प्रदायवालाले लाउने अनौठो रातो टोपी यसका एक जना गुरुको नाउँबाट 'उर्ग्येन-पान्जु' राखिएको छ। लामाहरूको वास्तविक 'रातो टोपी' सम्प्रदाय यही हो, यूरोपेली किताबहरूमा भनिएजस्तो 'डुक्-पा' उप-संप्रदाय होइन[१]।

---

१. L. A. Waddell– The Religion of Tibet, 1978, p. 72–3



तिब्बती बौद्ध धर्म अन्तर्गत उपरोक्त चार सम्प्रदायबाट जतिसुकै उप-सम्प्रदायहरूको प्रादुर्भाव भए पनि तिनीहरूको बीचमा रहेका अन्तरहरू धार्मिक सिद्धान्त-मूलकभन्दा बढ्ता इष्ट देवता, गुरु, चीवर र टोपीको रङ्ग, कर्मकाण्ड इत्यादि बाहिरिया आडम्बर मूलक देखिन्छन्। निम्न तहका लामाहरूमा सम्प्रदाय र उपसम्प्रदायसम्बन्धी भेदभाव पाइए पनि माथिल्ला तहका लामाहरूले यस्ता भेदभावको उत्तिको परवाह राख्दैनन् र शुद्ध बौद्ध धर्मको उच्चतर दर्शनको बढी कदर गर्छन्।

यी सबै सम्प्रदाय उप-सम्प्रदायहरूले मानिआएको तिब्बती बौद्ध धर्ममा पञ्च बुद्ध, बोधिसत्त्व, आदि बुद्ध र तिनका प्रज्ञारूपी स्त्री-मूर्तिहरू र उग्र मूर्तिहरू आदि देव-देवीको समूह, बोन धर्मका दैत्य, भूतप्रेतहरू, योग, ध्यान, धारणी, मन्त्र, जन्त्र, तन्त्र, मण्डल, मुद्रा, पवित्र वस्तु, माङ्गलिक चिह्न, शकुन-अपशकुन, भविष्यवाणी, मरेका पितृहरूको उपासना, कर्मकाण्ड, पौराणिक कथा, चाडपर्व, थितिरीति, लोककथा, धार्मिक नृत्य आदि समाविष्ट छन्। मरणोपरान्त गृहस्थीहरूले 'सुखावती भुवन' को र प्रव्रजित लामा-लमिनीहरूले निर्वाणको आकांक्षा राखेका हुन्छन्। वर्तमान मानव-शरीरमा नै काय, वाक, चित्तसम्बन्धी तीन महान् गुह्य धर्मको अनुष्ठानबाट बुद्धत्वसम्म पनि उपलब्ध गर्न सकिन्छ भन्ने धारणा पनि प्रबलै छ[१]। योग-सिद्धिको हकमा त ८४ सिद्धहरू (इ. ७७५-११७५) को विशेष सम्मान र तिब्बती बौद्धहरूबाट नै भएको छ तथा यिनीहरूको जीवनी र कार्यकलापसम्बन्धी जानकारी दिने आधिकारिक ग्रन्थहरूको सङ्कलन पनि उहीं सुरक्षित छ।

इत्यादिको साथसाथै दैनिक जीवनको पद-पदमा, पल-पलमा

---

१. Lama A. Govinda– Foundations of Tibetan Mysticism, 1977, p. 92

माला जप्दै, माने घुमाउँदै 'ॐ मणि पद्मे हूँ' को मन्त्रोच्चारणद्वारा अमिताभ बुद्धको बोधिसत्त्व अवलोकितेश्वरको स्मरण गर्नु तिब्बती बौद्धहरूको एउटा विशेषता हो। मन्त्र लेखिएको ध्वजा छानामाथि ठड्याएर उडाइराख्नु पनि यिनीहरूको आफ्नै चलन हो। तिब्बती लामाहरू विनय अन्तर्गतको भिक्षुचर्याभन्दा बढ्ता आफ्नै परम्परागत धार्मिक कर्मकाण्डमा व्यस्त रहनु, अनौठा मकुण्डाहरू लाएर धार्मिक नाचगान गर्नु पनि यिनीहरूमा पाइने विलक्षणता हो। भुइँमा लम्पसार परेर बाटो काट्दै चैत्य, घ्याङ, गुम्बामा पुगेर परिक्रमा गर्नु पनि विशेष गरेर तिब्बती चलन हो।

तर यहाँ विशेष रूपले के स्मरणनीय हुन्छ भने चार आर्य सत्य, प्रतीत्यसमुत्पाद, अष्टाङ्गिक मार्ग, द्वादश निदान, ये धर्मा हेतुप्रभावा हेतुं तेषां तथागतो ह्यवदत्, तेषां च यो निरोध एवं वादी महाश्रमण:, शील, समाधि, प्रज्ञा, चतुर मार्ग, त्रियान, दशभूमीश्वर, त्रयोदशभूमीश्वर, पारमिता इत्यादि ऐतिहासिक बुद्ध (शाक्य मुनि) का उपदेशहरूसित पनि तिब्बती लामा र गृहस्थीहरू मनग्गे परिचित छन् र यिनलाई उनीहरूको धार्मिक र नैतिक आचरणमा ठूलो स्थान दिन्छन्[१]। उनीहरूको यो पनि विश्वास छ कि क्रियात्मक दृष्टिकोणले त्रिविध यान मानिए पनि सर्वोत्तम लक्ष्य निर्वाणको दृष्टिकोणले एउटै यान–बुद्ध यान मात्र छ[२]।

बौद्ध धर्मका विविध पक्षका दर्शनसम्बन्धी ग्रन्थहरूको दुर्लभ भण्डार राख्नु पनि तिब्बतको लागि एउटा गौरवमय विषय हो। लङ्का र चीनमा नपाइएका कतिपय ग्रन्थहरू तिब्बतमा पाइएका थिए।

तर तिब्बतको सबैभन्दा बढी टड्कारै देखिने विशेषताचाहिं

१. L. A. Waddell– The Religion of Tibet, 1978, p. 132
२. ऐ. ऐ. पृ. १३८



आध्यात्मिक मूल गुरु नै सांसारिक मामिलाहरूसहित देशको सम्पूर्ण प्रशासनको पनि अधिपति अर्थात् दलाइ लामा नै राज प्रमुख हुने चलन तथा लामाहरूको अवतारवाद र लामा सङ्घीय व्यवस्था नै मान्नु पर्दछ।

अब हामीहरू उपर्युक्त तिब्बती बौद्ध धर्म मान्ने नेपालीहरूको चर्चातिर लागौं।

माथि भनिएजस्तै नेपालको सम्पूर्ण उत्तरी सीमान्त इलाकामा शताब्दीयौंदेखि यो लामा धर्म मान्ने जातिहरूको आबादी छ। पद्मसम्भव, शान्तरक्षित, कमलशील, दीपङ्कर श्रीज्ञानहरू नेपालमै केही समय बसिसकेपछि तिब्बततिर लागेको बेला यहाँ बाटोबाटैमा पनि धर्म प्रचार गरे हुनन्।

अरू कुरालाई छाडेर पनि आठौं शताब्दीतिर पद्मसम्भवबाट यस भेकका बौद्ध धर्मको प्रचार भएको तथ्य तिब्बती ग्रन्थहरूबाट सिद्ध भएको छ। तिब्बतमा विभिन्न सम्प्रदाय निस्केपछि तिनको प्रभाव यताका बौद्ध धर्मावलम्बीहरूमा पनि परेको बुझिन्छ। तिब्बतमा जति सम्प्रदाय र उप-सम्प्रदायहरू छन् ती सबैका अनुयायीहरू र तिनका गुम्बाहरू यस भेकमा पाइन्छन्।

नेपालमै पाइएका ऐतिहासिक सामाग्रीहरूबाट थाहा भएअनुसार यो उत्तरी भेकमा प्रचलित बौद्ध धर्मका गतिविधिहरू निम्न प्रकारका छन्:

इ. ९९६ सालमा पाल राजा आदि पालले वर्तमान नेपालको सुदूर उत्तर-पश्चिममा एउटा नयाँ राज्यको स्थापना गरे जसको भू-भाग वर्तमान तिब्बत र भारतको केही भागसम्म पनि फैलिएको थियो। यो पाल राज्यको दक्षिणपूर्वमा इ. ११३६ सालमा नाग राजाहरू अन्तर्गत अर्को राज्य– नाग राज्य खडा भयो। यी पाल र नाग राजाहरू दुवै थरी बौद्ध थिए र तिनीहरूको शासन कालमा नेपालको सम्पूर्ण उत्तर-पश्चिमी भेकमा बौद्ध धर्मले फष्टाउने र

फैलने अवसर पायो । यो बौद्ध धर्म तिब्बती बौद्ध धर्म अर्थात् लामा बौद्ध धर्म नै थियो ।

एक जना नाग राजा अशोक चल्लको एउटा अभिलेख भारत बुद्ध गयामा पाइएको थियो । केही वर्ष अगाडि अर्को नाग-राजा आदित्य मल्लको इ. १३२१ सालको अभिलेख एउटा नेपालैमा पाइएको थियो । त्यसमा त्यस प्रशासन इलाका अन्तर्गतका ताघ-बाइ[1] गुम्बा र अन्य गुम्बाहरूका लामाहरूलाई कुनै किसिमको तक-लिफ नदिनू भन्ने आदेश सम्बन्धित प्रशासन अधिकृत, सैनिक जवान र जनसाधारणलाई दिइएको छ । यो अभिलेख कुँदिएको ढुङ्गाको छेउ-छेउमा बौद्ध देवताहरू र चैत्यका आकारहरू कोरिएका छन् । यो नागराजाको पनि इ. १३३४ सालमा उत्तराधिकारित्व पाएका पाल राजा पुराय मल्लको इ. १३२८ सालको एउटा तामा पत्रमा पनि यस्तै आदेश कुँदिएको छ । यी दुवै राज्य मिलाइएको संयुक्त राज्यका दोस्रा राजा पृथ्वी मल्लले चैत्य निर्माण गर्नु, गुम्बाहरूलाई अनुदान दिनु आदि पनि गरेका थिए । उनले र उनका पूर्वाधिकारी केहीले राखेका यस आशयका अभिलेखहरू हालै जसो पश्चिम नेपालका दुल्लु र अरू ठाउँमा भेटिएका थिए । यो विशाल पाल राज्य इ.१३९० तिर स-साना राज्यहरूमा नटुक्रिएसम्म बौद्ध धर्म-लाई प्रोत्साहन मिलेको देखिन्छ ।

यसरी बौद्ध धर्मले करीब चार शय वर्षसम्म काठमाडौं उपत्यकामा जस्तै पश्चिम नेपालमा पनि महत्वपूर्ण भूमिका खेल्यो । यस अवधिभित्र पश्चिम नेपालका पर्वतीय इलाकाहरूमा स्थापना गरिएका गुम्बाहरू कैयौं अझ पनि चल्दैछन् । आज पनि सम्पूर्ण

१. प्राचीन नेपाल संख्या ५३–५६, पृ. ३२–३ । हाल यो ताघबाइ गुम्बा भएको इलाका नेपाल–चीन सीमा सन्धि अनुसार तिब्बती भूभागमा परेको छ ।



पश्चिमी भेकमा बौद्ध गुम्बाहरूका ध्वंसावशेषहरू प्रशस्त पाइन्छन् । यिनीहरूमध्ये आजसम्म खोजी गरिएकोमा सुर्खेतका ध्वंसावशेषहरू उल्लेखनीय छन् ।

सुर्खेतमा अझै बुद्ध मूर्तिसहितको एउटा गुम्बाका अवशेषहरू मौजूद छन् । गुम्बाका भित्ताहरूको बाँकी रहेको भागमा रहेका खम्बा र गुमजका बुट्टाहरूबाट उच्च स्थापत्य कलाको सङ्केत मिल्दछ । तिनमा निकालिएका बुट्टाहरू कांक्रोका लमाइले काटिएका टुक्राहरू एउटाको पछाडि अर्को राखिए जस्तै देखिएकोबाट गुम्बाको बाँकी भाग केही वर्ष यतादेखि काँक्रे विहार भन्ने गरिएकोछ । सुर्खेत क्षेत्रमा थुम्का, खाई, चैत्य, मन्दिरका भग्नावशेष, बौद्ध खम्बा र त्यस्तै बास्तुकलाका भग्नावशेषहरू मनगे भेटिन्छन् । दुल्लु र यसको सेरोफेरोमा पनि पुरातात्त्विक महत्त्वका यस्तै अवशेषहरू देखा पर्छन् जसमध्ये कुनै कुनैमा अभिलेखहरू समेत साबुद छन् ।

यी क्षेत्रहरू नाग राज्य र पाल राज्यकै भूभाग थिए ।

सम्राट् अशोकको लुम्बिनी स्तम्भ र निग्लिहवा स्तम्भ दुवै-मा राजा रिपु मल्लको अभिलेख कुँदिएको छ जसबाट उनले इ. १३१२ सालमा यो ठाउँहरूमा तीर्थाटन गरेका थिए भन्ने प्रमाणित हुन्छ । यी राजा रिपु मल्ल एक जना नाग राजा थिए । यस ठाउँमा उनले तीर्थ गर्न आए भन्ने तथ्यले कपिलवस्तुभेक त्यसताका उनको राज्यकै भाग थियो तथा यिनी बौद्ध थिए भन्ने कुरा सिद्ध हुन्छ । यो पनि सम्भव छ कि लुम्बिनीस्थित हाल विद्यमान 'सिद्धार्थ जन्म' मूर्तिहरू पनि यहाँ तीर्थ गर्न आउँदा उनले राखेका थिए । जे होस् नेपालका सुदूर पश्चिम जम्मैजसो भाग इसवीको दशौंदेखि पन्ध्रौं शताब्दीसम्म पाल वा नाग बौद्ध राजाहरूको भूभाग थियो । यिनी-हरूको राज्यकालमा निर्माण गरिएका चैत्य, स्तम्भ र अरू स्मारक-हरू हाल जमीनमुनि पुरिएका छन् भन्ने कुराको स्पष्ट सङ्केतहरू आज पनि पाइन्छन् । यस विषयमा अरू अन्वेषण र उत्खननबाट नयाँ प्रकाश नपरेसम्म अहिले नै बढी कुरा भन्न सकिन्न ।

माथि बयान गरिएको कुरा पश्चिम नेपालले बौद्ध धर्मअन्तर्गत अतीतमा उपलब्ध गरेको गौरवको एक सानो झल्को मात्र हो। तर आज पनि अधिराज्यको ६०० माइलभन्दा लामो उत्तरी पर्वतको लङ्गमा बसोबास गर्ने अधिकांश जनता, चाहे पश्चिममा होस् चाहे पूर्वमा, बौद्ध हुन्। यो सम्पूर्ण भेकमा हज्जारौं लामाहरू र सयौं गुम्बाहरू छन्।

पूर्वी पर्वत शृङ्खलास्थित गुम्बाहरूमध्ये विश्वको सर्वोच्च शिखर सगरमाथा जाने बाटैमा रहेको स्याङबोचे गुम्बा पर्वतारोहण जगतमा सर्वाधिक प्रसिद्ध छ र विश्वविख्यात चुचुरो चढ्न आउने विदेशीहरूको पनि सन्मानको थलो बनेको छ। त्यसो त पूर्व-पश्चिमस्थित अरू गुम्बाहरू पनि कुनै न कुनै कुरामा नाउँ चलेकै छन्। उत्तरी सिमानादेखि केही दक्षिणस्थित बझाङ्ग, बाजुरा, जुम्ला, म्याग्दी, कास्की, ओखलढुङ्गा, भोजपुर आदि जिल्लाहरूलाई छाडेर चोखै उत्तरी सीमान्त जिल्ला दार्चुला, हुम्ला, कालिकोट, मुगु, डोल्पा, मुस्ताङ, मनाङ, गोर्खा, धादिङ्ग, रसुवा, सिन्धुपाल्चोक, दोलखा, सोलुखुम्बु, संखुवासभा, ताप्लेजुङ जिल्लाका मात्रै गुम्बाहरू हिसाब गरेर पनि अढाई-तीन सय नाघ्छ। खुम्बुको पाङ बोचे गुम्बामा येतीको भनिएको खप्पर राखिएको छ। डोल्पा सिन्धुपाल्चोक, सोलुखुम्बु आदि जिल्ला प्रत्येकमा चालीसौं-पचासौं गुम्बा छन्। सबभन्दा पुराना मानिएका गुम्बाहरू मुस्ताङ, डोल्पा, मुगुमा छन्। आदि पालले इ. ९९६ मा सर्वप्रथम पाल राज्य खडा गरेको ठाउँ खारी प्रदेश भनिन्थ्यो। मुगुस्थित वर्तमान खारी भन्ने ठाउँमा खारी गुम्बा भनिने एउटा गुम्बा आज पनि रहेको छ। डोल्पा, मुस्ताङस्थित केही गुम्बाहरू दशौं एघारौं शताब्दीमा स्थापित भएका देखिन्छन्। डोल्पा र मुस्ताङका उत्तरी इलाकास्थित गुम्बाहरू बोन धर्मावलम्बीहरूका हुन् र बोन लामा-लमिनी र गृहस्थीहरू यहाँ निक्कै धेरै सङ्ख्यामा पाइन्छन्।



राजधानी काठमाडौं र उपत्यकाका अरू शहरहरूमा पनि यता केही समयदेखि लामा गुम्बाहरूको सङ्ख्या बढ्दै छ। करीब बीस-बाईस वर्ष अगाडि स्वयम्भू डाँडाको टाकुरामा स्वयम्भू महाचैत्यकै उत्तर-पूर्वतिर बनेको विश्व शान्ति महाविहार पछि कर्मराज महाविहार नाउँको गुम्बामा बदलियो[१]। स्वयम्भू-डाँडोको पश्चिमी पाखोमा अरू पनि केही गुम्बाहरू छन्। बौद्धस्थित विशाल महाचैत्य (खासाति) को सेरोफेरोमा पनि थुप्रै गुम्बाहरूको निर्माण भइसकेको छ। तिनीहरूमध्ये १०० जना लामाको लागि आवासीय प्रबन्ध भएको सबभन्दा ठूलो एउटा गुम्बाको उद्घाटन इ १९७६ साल मार्चमा श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट भएको थियो। इसवी पाँचौं शताब्दीको अन्त्यतिर बनाइएको देखिएको बौद्धको विशाल चैत्य उपत्यकामा सबभन्दा पुरानो लामा धर्मको अर्थात् तिब्बती बौद्ध धर्मको गुम्बा मानिन्छ। हरेक वर्ष हिउँदमा तिब्बती र नेपाली लामा र उपासकहरू ठूलो सङ्ख्यामा यस चैत्यको दर्शन गर्न आउँछन् तथा यसको इर्दगिर्दमा केही समयसम्म रहेर यसको पूजा गर्छन्, भेटी चढाउँछन् र कोही कोही भुईंमा लम्पसार पर्दै यसको परिक्रमा गर्छन्। यो महाचैत्य तिब्बती बौद्ध धर्मावलम्बीहरूको लागि तिब्बत बाहिरको सबभन्दा नाउँ चलेको तीर्थस्थल भनिन्छ।

नेपालमा चारै सम्प्रदाय- गे-लुग्-पा, का-र्ग्यु-पा, स-क्य-पा, न्यिङ-मा-पा र यिनका उपसम्प्रदायहरूका अनुयायीहरू पाइन्छन्। यिनीहरू आजकाल उत्तरी भेकमा मात्र होइन राजधानी र अन्यत्र जतातत्रै पनि भेटिन्छन्। यी लामा धर्मावलम्बीहरू- लामा होऊन् वा गृहस्थी, आफ्नै ढङ्गको चीवर, लुगाफाटो लगाएर माने,

१. हेर्नुस् वर्तमान लेखक (भुवनलाल प्रधान) कै 'स्वयम्भू' शीर्षक वि. सं. २०३२ मा प्रकाशित स्वयम्भू-डाँडोस्थित स्वयम्भू महाचैत्य र अरू स्थलहरूको सङ्क्षिप्त इतिहास, पृ. ३१-३२

घण्टी, जपमाला आदि हातमा लिएर हिंडिरहने हुनाले दर्शकहरूको लागि आकर्षक बन्छन् ।

लामा धर्मले जपमाला माने, ध्वजा, पवित्र जल, अनौठा बाजा, समूह गानवजानसहितको पूजाविधि, रहस्यमय कर्मकाण्ड, आफ्नै किसिमको सङ्घीय व्यवस्था, सिद्ध संस्कृति, अचम्म लाग्दा मूर्तिहरू थांका, अवतारवाद, दैत्य-भूतप्रेत नाच इत्यादि कारणले एउटा आफ्नै ढङ्गको बौद्ध धर्मको विकास गरेको छ । तिब्बतका सहधर्मीहरूले जस्तै नेपालका लामा धर्मावलम्बीहरू पनि उच्च पदाधिकारी लामाहरूको अवतारवादमा विश्वास गर्दछन् र यिनीहरूको छनौटमा उही बिधि अपनाउँछन् । नेपालका कतिपय गुम्बाहरूमा पनि अवतारे लामाहरू छन् ।

लामा गुम्बाहरूको सजावट र सिगार एवं धार्मिक विधिहरू आफ्नै ढङ्गका हुन्छन् । कुनै चाड-पर्वको अवसरमा गुम्बाको दृश्य मनोरम र प्रभावशाली हुन्छ । प्रमुख लामाले पहिले सम्बन्धित ग्रन्थबाट केही शब्द लयसाथ उच्चारण गर्दछन् र अरू लामाहरूले त्यसपछि एकै स्वरले पाठ गर्छन् । यस्तो पाठ कहिलेकाहीं लामा-लामा बाजा बजाउने, ठूल-ठूला माने घुमाउने, घण्टी बजाउने क्रियासहित हुन्छ । बुद्ध र अरू गुरु र ठूलठूला लामाहरूका सुन-चाँदीका मूर्तिहरू आसनमा सजाएर राखिएका हुन्छन्. अगाडि धूपदीप बलेको हुन्छ । गुम्बाभित्र यताउति पनि बलिरहेका मधुर धूप, बत्तीले यहाँको धार्मिक वातावरणलाई नै शुद्ध, शान्त र भावनामय बनाएको हुन्छ ।

'ॐ मणि पद्मे हूं' लामा-लमिनी र उपासक-उपासिकाहरूको अन्त्यै लोकप्रिय मन्त्र हो र यो मन्त्र कुंदिएका मानेहरू खूब घुमाइन्छन् । बाटोमा हिंड्दा पनि यिनीहरू यो मन्त्र भुन्भुनाइ रहेकै हुन्छन् । लामो कपडाको टुक्रामा यो मन्त्र लेखेर ठडाइएको बाँसमा बाँधेर पनि फहराउँछन् । यो मन्त्रको गुह्य र गम्भीर अर्थ-



हरू बताइन्छन् र यसको अद्भुत प्रभाव भएको विश्वास गरिन्छ । खम्बामा बाँधिएको मन्त्रको ध्वजा हावाले फरफर फहरायो भने यो मन्त्र उच्चारण गरे सरह नै हुन्छ र यसले राख्ने मानिसको लागि मात्र होइन सेरोफेरोका मानिसहरूको लागि पनि शुभ आशीर्वाद र सुख-कल्याण ल्याइदिन्छ भन्ने धारणा छ । लामा धर्मावलम्बी जुनसुकै घरमा यस्तो ध्वजा फहराइएको गाउँ, शहरमा जताततै देखिन्छ ।

यी लामाहरूको पन्ध्रौं फीट लामा दुई-चार जनाले बोक्नुपर्ने ढोलकहरू लगायत अनौठा अनौठा बाजा बजाउने चलन पनि छ । पहाडको टाकुरास्थित गुम्बामा यस्ता बाजाहरू साँझ-बिहान बजाइँदा वरपर एक-दुई माइलसम्म पनि सुनिन्छ । यी बाजाहरूमा काँसका झ्याली, ढालक, खैंजडी जस्ता पनि हुन्छन् । कुनै कुनै अवसरमा गुम्बाहरूमा दैत्य नाचहरू पनि हुन्छन् । नटुवाहरूले ताश, किनखापका किमती पोशाक, अद्भुत मकुण्डो आदि पनि लगाउँछन् ।

यी गुम्बाहरू धार्मिक गतिविधिहरू सञ्चालन गर्ने मन्दिर हुनुको साथै भरखरै प्रव्रजित भएका नौजवान लामाहरूले र अरूहरूले पनि बौद्ध धर्मको अध्ययन र यसका विनयहरूको पालन गर्ने विद्याका केन्द्र पनि हुन् । गुम्बामा लामाहरूको सङ्ख्या यसको आकारमा भर पर्दछ- दश-बाह्रदेखि सय हजारसम्म पनि पुग्न सक्दछ । यी गुम्बाहरूमा रहेका लामाहरू कोही कोही अवतार मानिन्छन् त कोही कोही नेपालका उत्तरी एकान्त थलाहरूमा कठिन तपस्या गरेर सिद्ध भइसकेका ।

गुम्बालाई कला-संस्कृतिको ज्यासल पनि भन्न सकिन्छ । यहाँ लामाहरूले बुद्ध, आचार्य, सिद्ध, देवदेवी, दैत्यका मूर्तिहरू, जन्त्र, मन्त्र, मण्डल, पशु योनि, मनुष्य योनिका दुःखहरू द्वादशनिदान आदि बौद्ध दर्शनका गठिला तथ्यहरूलाई सरल तरीकाले

बुझ्न सक्ने गरी लेखिएका चित्रहरू [उदाहरणार्थः- पहिलो निदान 'अविद्या' अर्थात् अज्ञानी मानिसलाई चेतनाहीन इच्छाहरूले जथा-भावी डोऱ्याउने तथ्यलाई सजिलोसँग बुझाउन एउटी पोथी कानी ऊँटलाई कर्मरूपी माहुतेले डोऱ्याइरहेको चित्र, दोस्रो निदान– 'संस्कार' र यसबाट हुने भौतिक, मानसिक विकारहरूलाई बुझाउन कुह्मालेले आफ्नो चक्कामा थरी-थरीका भाँडाहरू बनाइरहेको चित्र, इत्यादि] कलात्मक ढङ्गले तयार गर्दछन्, बुन्दछन् वा धागोले उन्दछन् आदि जसमध्ये कुनै कुनै त दुर्लभ कलाकृति बन्दछन् । यस्ता थांका, पौभाहाहरू व्यापक तवरले प्रसिद्ध नै छन् ।

यी लामाहरू धेरै जसो आधुनिक युगका शहरी सुविधादेखि निकै टाढा हिमालय पर्वतका काखमा भनेंजसो अवस्थित गुम्बा-हरूमा बसिरहेको कुरा सोच्दा यिनीहरूको धार्मिक र कलात्मक प्रवृति र प्रेरणा ज्यादै सराहनीय देखा पर्छन् । चौंरी गाईगोरु, भेंडा-हरूको उत्पादन, पाखामा यताउति जे जति मकै, कोदो, फापर उम्रन्छन् त्यतिमै निर्वाह गरिरहेका यहाँका निवासीहरूले आफूहरू-लाई गजबसँग तन्दुरुस्त राखेका छन् र यहाँका महिलाहरू पनि आफ्नो रूपलावरायलाई मनमोहक राख्न सक्षम छन् । तलतिर मैदान, उपत्यकामा बस्ने, पाउडर, क्रीम घस्ने, थरी-थरीका विलासी सिंगारपटारका सामग्रीहरूले तलासिने दिदी–बहिनीहरूको दाँजोमा यी हिमाली महिलाहरूले मात्र फापर, खयर, मकै र यस्तै ज्यादै थोरै पैसाले पाइने सामग्रीको सहाराले आफ्ना सुनौला सौन्दर्य र मनमोहक माधुर्य कायम राख्दछन् ।

चौंरीका हाड र विष्टाका अलिअलि माटो मिलाएर बना-एको छाप्रोमा बसेर यी लमिनीहरूले परिवारका सदस्यहरूको दैनिक जीवनमा मात्र होइन पवित्र गुम्बा, घ्याङ, मन्दिर र बेपार गर्ने पस-लमा पनि उत्तिकै महत्त्वपूर्ण भूमिका खेल्छन् । पारिवारिक जीवनमा यी हिमाली महिला घरकी मूली भएर प्रभावशाली व्यक्ति बन्छे ।



बिहान भोरदेखि बेलुका अबेरसम्म धर्मात्मा स्त्री, कर्तव्य परायण गृहिणी, होशियार पारखी, कुशल बेपारी र आकर्षक पसलेनीका कर्तव्यहरू चुकाउँछे । धार्मिक अनुष्ठानको पक्षमा यिनी बाटोमा हिंड्दा हिंड्दै वा काम गर्दा गर्दै पनि जपमालाको गेडा गनेर वा माने घुमाएर ॐ मणि पद्मे हूं जति सक्यो उति बढी पल्ट उच्चारण गरिरहेकी हुन्छे । धर्म भनेको साँच्चै मन पराउने र गर्ने खोज्ने नेपालमा कुनै महिलाहरू छन् त यी हिमाली खोंचमा बस्ने पिछडि-एका जातिका महिलाहरू नै छन् जो दिनको कम सेकम थोरै घण्टा-को लागि भए पनि भगवान बुद्धलाई सम्झन्छन् र उनका बहुजन-हितकारी उपदेशहरूको पालन गर्न खोज्छन् । यिनीहरू जतिसुकै सम्पन्न र भौतिक सुख भोगमा डुबेका भए पनि यिनीहरूले संसारको नश्वरता, निःसारता बुझेका छन् तथा आफ्नो अधिकांश समय आध्यात्मिक अभ्यास र धार्मिक गतिविधिमा बिताउँछन् । आजको नेपालका अरू आधुनिक महिलाहरूको लागि भने धर्म भनेको पाप कटाउन गरिने एउटा कर्मकाण्ड, आडम्बर, बाहिरिया प्रदर्शनी मात्र भइसकेको देखिन्छ । तर यी पर्वतीय महिलाहरू चाहे घरमा होऊन् वा पसलमा होऊन् वा घ्याङगुम्बामा होऊन् आफ्ना पवित्र माने घुमाइरहेकै हुन्छन् र धर्मप्रति आफ्नो कर्तव्यपालन शुद्ध दिलले गरिरहेकै हुन्छन् ।

नेपालका अनागारिकाहरूमा थेरवादीहरूकोभन्दा लामा धर्मी अनागारिकाहरूकै संख्या बढी छ । फेरि प्रव्रजित लमिनीहरूको लागि एक तहसम्म माथि उक्लने व्यवस्था लामा सङ्घले गरेको छ । अर्थात् यी प्रव्रज्या लिएका लमिनीहरू अनागारिकाको तहबाट श्राम-णेर सरहको तहसम्म जान सक्ने परम्परा छ । थेरवादको वर्तमान विनय अनुसार प्रव्रजित महिलाहरू आजीवन अनागारिका नै रहन्छन्, उनीहरूलाई श्रामणेरको तहसम्म पुऱ्याउने नियम छैन । तर नेपालमा प्रचलित लामाहरूको सङ्घीय व्यवस्थाले अनागारिका लमिनीहरूलाई श्रामणेर तहसम्म पुग्ने छुट दिएको छ । नेपालमा

लामा सङ्घीय व्यवस्थाले अनागारिकाहरूप्रति अख्तियार गरिराखेको यो नीति उदार मानिनुपर्दछ ।

लामा धर्मावलम्बी नेपाली बौद्धहरूमा कतै कतै प्रत्येक परिवारमा माहिला भएर जन्मेका छोराले उमेर पुग्दै आएपछि प्रव्रज्या लिनै पर्दछ । यो चलनबाट लामा सङ्घलाई टेवा मिलेको छ ।

मात्र केही वर्ष अगाडि उत्तरी सीमान्त भेक र सुदूर पूर्व-पश्चिममा अवस्थित गुम्बाहरूका लामा-लमिनीहरूको दक्षिणी मैदान र उपत्यकाहरूमा बस्ने स्वदेशबन्धुहरूसितको सम्फर्क प्रायः नगण्य नै थियो । यिनीहरू बाहिरिया संसारसँग त्यतिको चासो पनि राख्दैनथे । वर्तमान श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट पूर्व–पश्चिमका सुदूर उत्तरी भेकको भ्रमण गरिबक्सेको सिलसिलामा यी बौद्ध घ्याङगुम्बाहरू केही नजर गरिबक्स्यो । त्यसै बेलादेखि मौसूफको जोडदार निर्देशन अन्तर्गत श्री ५ को सरकारले यी घ्याङगुम्बाहरूमा चाख लिन लाग्यो र तिनको संरक्षण र विकास आधुनिक तरीकाले गर्नेतर्फ ध्यान दिन थाल्यो ।

श्री ५ महाराजाधिराजकै अग्रसरतामा श्री ५ को सरकारबाट 'देश दर्शन' नाउँको एउटा कार्यक्रम चालू गर्‍यो । यस अन्तर्गत हिमाली पर्वत शृङ्खलास्थित यी सुदूर, सूनसान गुम्बाहरूमा बस्ने लामा-लमिनीहरूलाई राजधानी, उपत्यकाका अरू ठाउँहरू र दक्षिणी मैदानहरूमा अरू पनि ठाउँहरू हेर्न जान बोलाइन्छन् । यसबाट यिनीहरूले बाहिरी संसार देख्ने र आफ्नै देश नेपालको बारेमा बढी जानकारी उपलब्ध गर्ने मौका पाउँछन् । यिनीहरूको यस्तो देश-व्यापी भ्रमणको लागि बराबर व्यवस्था गरिन्छ जसबाट यिनीहरूले आफूहरूलाई पनि नेपाली राष्ट्रको अंश, जनजीवनको मूलधाराको हिस्सेदार एवं नेपालमा प्रचलित बौद्ध धर्मको एक महत्वपूर्ण खण्ड हौं भन्ने जीउँदो तथ्य बुझ्न सक्षम हुन्छन् ।